# विषय सूची

# राष्ट्रिय आमसञ्चार नीति, २०७३

प्रस्तावना नेपालको संविधान (२०७२) मा व्यवस्था भएअनुरूप सबै प्रकारका विभेदको अन्त्य गरी सामाजिक तथा आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाज निर्माणका निम्ति नेपाली समाजको विविधता र बहुलवादलाई प्रतिनिधित्व गर्ने स्वतन्त्र, स्वच्छ समाजप्रति उत्तरदायी र जिम्मेवार आमसञ्चार माध्यमको भूमिकालाई मनन गर्दै,

मानवअधिकारसम्बन्धी विश्वव्यापी घोषणापत्र, महासन्धि र अभिव्यक्ति स्वतन्त्रतासम्बन्धी अन्तर्राष्ट्रिय दस्तावेजहरूले प्रत्याभूत गरेका सिद्धान्तलाई आत्मसात् गरी सञ्चारमाध्यमको स्वतन्त्रताको संरक्षणका निम्ति आवश्यकपर्ने कानुनको निर्माणद्वारा दिगो शान्ति, सुशासन, विकास, सामाजिक सद्भाव र समृद्धिको आकाङ्क्षा पूरा गर्न आमसञ्चारमाध्यमको भूमिकालाई आत्मसात् गर्दै,

भौगोलिक अखण्डता, राष्ट्रियता वा सङ्घीय एकाइ वा विभिन्न जातजाति, धर्म वा सम्प्रदायबीचको सु-सम्बन्धलाई बलियो बनाई सौहार्दपूर्ण अन्तरजातीय, अन्तरभाषिक र अन्तरसांस्कृतिक सम्बन्धको सेतुका रूपमा काम गर्न सक्ने आमसञ्चारमाध्यमको भूमिकालाई दृष्टिगत गर्दै,

शिक्षा, ज्ञान-विज्ञान, सूचना, स्वस्थ मनोरञ्जन, विकास, संस्कृतिको संरक्षण, वातावरण संरक्षण र समाजको पहरेदारीको भूमिका निर्वाह गर्ने आमसञ्चार प्रणालीको विकासका लागि ठूला, मध्यम र साना लगानीका सबै खालका आमसञ्चारमाध्यमको समविकासको आवश्यकतालाई बोध गर्दै,

सूचनाको पहुँच सबै भूगोल, समुदाय र जनतासम्म विस्तार गरी सूचनाको हकको सम्मान र प्रचलनद्वारा सङ्घीय लोकतान्त्रिक गणतन्त्रको सुदृढीकरण गर्ने दृढता व्यक्त गर्दै,

जनताको दैनिक जीवनयापनका आवश्यकता, सरोकार र हितका विषयमा जानकारी दिने स्वस्थ, मर्यादित, जिम्मेवार र उत्तरदायी आमसञ्चार क्षेत्रको विकास गर्न नेपाल सरकारद्वारा गठित 'सूचना तथा सञ्चारसम्बन्धी उच्चस्तरीय समितिले सिफारिस गरेअनुरूप आमसञ्चारको विकास गर्ने

उद्देश्यका साथ नेपाल सरकारद्वारा राष्ट्रिय आमसञ्चार नीति, २०७३ जारी गरिएको छ ।

१. **आमसञ्चार नीतिका उद्देश्यहरू**

१.१ नेपाली जनताको अभिव्यक्ति स्वतन्त्रताको हकलाई प्रचलन गराई स्वच्छ, निष्पक्ष, लोकतान्त्रिक मान्यतामा आधारित आत्मनिर्भर, जवाफदेही र उत्तरदायी आमसञ्चारमाध्यमद्वारा जनताको सुसूचित हुने अधिकार सुनिश्चित गरी सभ्य र समृद्ध समाज स्थापना गर्ने ।

१.२ निर्वाध प्रेस स्वतन्त्रताको अभ्यास एवम् आमसञ्चारमाध्यमको अधिकतम उपयोगद्वारा सूचना र ज्ञानको प्रवाह गरी मुलुकलाई सूचना तथा ज्ञानमा आधारित सूचना-समाजमा रूपान्तरण गरी लोकतान्त्रिक समाजको विकास गर्ने ।

१.३ आमसञ्चार क्षेत्रको गुणस्तर वृद्धि गरी पत्रकारिताप्रतिको विश्वसनीयता अभिवृद्धि गर्ने ।

१.४ आमसञ्चारमाध्यममा सबै वर्ग, क्षेत्र, जाति, भाषा, लिङ्ग र समुदायको पहुँच बढाई स्वच्छ जनमत निर्माण गर्ने प्रभावकारी माध्यमको रूपमा सञ्चार क्षेत्रको विकास गर्ने ।

१.५ महिला, दलित, आदिवासी जनजाति, अपाङ्गता, मधेशी, सीमान्तकृत समुदाय र पछाडि परेका क्षेत्र, वर्ग र समुदायको आमसञ्चारको क्षेत्रमा प्रतिनिधित्व बढाई क्रियाशील तुल्याउन प्रोत्साहित गर्ने ।

१.६ सञ्चार क्षेत्रलाई आत्मनिर्भर बनाउँदै स्वतन्त्र, निष्पक्ष, व्यावसायिक, मर्यादित र जनउत्तरदायी सञ्चारमाध्यमको विकासद्वारा मुलुकमा सुशासनको प्रवर्द्धन गर्ने ।

१.७ आमसञ्चारमाध्यमलाई स्वनियमन र स्वमूल्याङ्कनका लागि अभिप्रेरित गरी स्वच्छ, स्वस्थ र मर्यादित पत्रकारिताको विकास गर्ने ।

१.८ सूचना तथा सञ्चारप्रविधियुक्त सञ्चार प्रणालीको विकासद्वारा समाजमा रहेका सबै प्रकारका विभेद र उत्पीडनको अन्त्य गर्दै समानुपातिक, समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने ।

१.९ मुलुकले अपनाएको सङ्घीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थालाई संस्थागत गर्दै जनताको जीवनस्तर उठाउन सहयोगी माध्यमको रूपमा सूचना तथा सञ्चार प्रणालीको विकास गर्ने ।

## २. आधारभूत नीति

२.१ विचार अभिव्यक्ति, पूर्ण प्रेस स्वतन्त्रता र सूचना प्रवाहको स्थापित अन्तर्राष्ट्रिय मूल्य, मान्यता तथा प्रचलन एवम् नेपालको संविधानले आत्मसात् गरेको सिद्धान्त अनुकूल प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको निर्वाध प्रयोगका निम्ति आवश्यक पूर्वाधारको निर्माण गरी पूर्ण प्रेस स्वतन्त्रताको सुनिश्चितता गरिनेछ ।

२.२ विभिन्न जातजाति, धर्म, भाषा, संस्कृति र सम्प्रदायबीच पारस्परिक सद्भाव, सहिष्णुता र ऐक्यबद्धता कायम गरी सङ्घीय एकाइबीच परस्परमा सहयोगात्मक सम्बन्ध विकास गर्दै राष्ट्रिय हित र राष्ट्रिय एकताको प्रवर्द्धनद्वारा समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तका आधारमा समतामूलक समाजको निर्माण गर्ने सूचना तथा सञ्चार प्रणालीको विकास गरिनेछ ।

२.३ मुलुकको सार्वभौमसत्ता, भौगोलिक अखण्डता, राष्ट्रिय सुरक्षा, एकता, सामाजिक सद्भाव र राष्ट्रिय हितलाई सुदृढ गर्ने तथा गरीबी, अशिक्षा, उत्पीडन र अभावबाट ग्रस्त नागरिकको जीवनस्तर उकास्ने लक्ष्यका साथ उद्यमशीलता, स्वावलम्बन र सिर्जनात्मक कार्यलाई अभिप्रेरित गर्न एवम् उत्प्रेरकको भूमिका निर्वाह गरी आर्थिक सामाजिक विकासको प्रवर्द्धन गर्ने उद्देश्यले छापा, रेडियो, टेलिभिजन, अनलाइन, इन्टरनेट जस्ता सूचना प्रणालीलाई प्रोत्साहन गरिनेछ । त्यस्तै सूचना र प्रविधिको तीव्र विकासलाई आत्मसात् गर्दै छापा, रेडियो, टेलिभिजन, अनलाइनजस्ता सूचना तथा सञ्चार प्रविधिको एकीकृत सेवा र सुविधालाई प्रविधिगत सम्मिलनबाट (Convergence) निर्मित समुन्नत सूचना प्रणालीलाई प्रोत्साहन गरिनेछ ।

२.४ सञ्चारमाध्यमलाई शिक्षा, सामाजिक उत्तरदायित्व, विज्ञान तथा प्रविधि, पर्यटन, जनस्वास्थ्य, वातावरण संरक्षण, कृषि, जलस्रोत, ग्रामीण विकास तथा पूर्वाधार, उपभोक्ता अधिकार तथा जनचेतना र सुशासनमूलक समाचार र सामग्री प्रकाशन तथा प्रसारण गर्न प्रोत्साहन गरिनेछ ।

२.५ पत्रकारिताको गुणस्तर वृद्धि र व्यावसायिक विकासका लागि आमसञ्चारमाध्यमलाई सम्बन्धित भूगोलमा बसोबास गर्ने जनसङ्ख्याप्रति लक्षित राष्ट्रिय, प्रादेशिक वा स्थानीय, सेवामूलक वा व्यापारिक उद्देश्यका साथ सञ्चालित समाचारमाध्यम तथा

स्वरोजगार, साना, मझौला र ठूलो लगानीका आधारमा वर्गीकरण गरी सञ्चारमाध्यमलाई सञ्चार उद्योगको रूपमा मान्यता दिई सहुलियत प्रदान गरिनेछ ।

२.६ समाचारमाध्यमको सत्यता, निष्पक्षता, विश्वसनीयता, सन्तुलित, स्वच्छता, जिम्मेवारी र जवाफदेही वहन गर्ने लक्ष्य अनुरूप घृणा, विद्वेष फैलाउने वा हिंसालाई बढावा दिने किसिमका सामग्री प्रवाह गर्न निरुत्साहन गरी स्वच्छ र मर्यादित पत्रकारिताको विकासका निम्ति समाचारमाध्यमहरूलाई आमपाठक, श्रोता र दर्शकहरूले थाहा पाउने गरी लिखित रूपमा सार्वजनिक स्वनियमन र स्वमूल्याङ्कनको व्यवस्था गर्दै सम्पादकीय नीति सार्वजनिक गर्न प्रोत्साहन गरिनेछ ।

२.७ सूचना र आमसञ्चारसम्बन्धी कानुनहरूको पुनरावलोकन गरी सूचना तथा सञ्चारसम्बन्धी अन्तर्राष्ट्रिय मूल्य र मान्यता एवम् नेपालको संविधानको मर्म र भावनालाई आत्मसात् गर्दै आमसञ्चार स्वतन्त्रता सुनिश्चित गरी समाचारमाध्यमहरूको स्थापना, सञ्चालन र विकासका निम्ति मुलुकमा आएको परिवर्तनलाई संस्थागत गर्न आवश्यकपर्ने कानुनहरू निर्माण गरिनेछ ।

२.८ रेडियो, टेलिभिजन, छापा, अनलाइन माध्यमका लेख्य, श्रव्य र दृश्यमार्फत प्रस्तुत सामग्रीमा समाजको विविधता र बहुलता तथा भाषा र प्रस्तुतिको शिष्टता प्रवर्द्धन गरी पहुँचकै अनुपातमा देशका सबै भूभागका अन्तर्वस्तु उत्पादन गराउन र स्थानीय समाचारमाध्यममा अधिकतम सामग्री स्थानीय विषयवस्तुमा आधारित भएर उत्पादन गराउन प्रोत्साहन गरिनेछ । उच्चतम व्यावसायिक अभ्यास गर्दै तयार गरिएका पाठ्य वा श्रव्य-दृश्य तस्वीर, रेखाचित्र एवम् कार्टुन विधा समावेश भएको सन्तुलित सामग्री उत्पादनमा प्रोत्साहन र प्रवर्द्धन गरिनेछ ।

२.९ लोकतान्त्रिक मूल्य र मान्यताको प्रवर्द्धनका निम्ति सुशासन तथा पारदर्शिताको सुनिश्चितता एवम् आमसञ्चारमाध्यमको स्वतन्त्र रूपमा सञ्चालन र विकासका लागि लगानीको स्रोतको वैधानिक एवम् आर्थिक पारदर्शिताको सुनिश्चितता गरी सञ्चार माध्यममा राष्ट्रिय लगानीलाई प्रोत्साहन गरिनेछ । समाचारमाध्यमको स्वस्थ एवम् प्रतिस्पर्धात्मक विकासका लागि व्यावसायिक योजना बिना निहित स्वार्थका साथ समाचारमाध्यममा लगानी गर्ने अस्वस्थ प्रवृत्तिलाई निरुत्साहन गरिनेछ ।

२.१० स्वरोजगार सिर्जना गर्ने साना लगानीका सञ्चारमाध्यमलाई प्रोत्साहन गरिनेछ ।

२.११ नेपाली जनताको विचार र अभिव्यक्ति स्वतन्त्रता र राष्ट्रिय हितमा असर नपुऱ्याउने गरी पूर्वाधार र प्रविधिको विकासमा विदेशी लगानी खुला गर्नुपर्ने अवस्थामा प्रकाशन र प्रसारण माध्यममा सम्पादकीय स्वतन्त्रताको सुनिश्चितताका निम्ति विशेष सर्तहरू तोकी त्यस्तो सञ्चारमाध्यममा पत्रकार, कामदार र कर्मचारी नेपाली नागरिक मात्र रहने व्यवस्था गरिनेछ । विदेशी लगानीकर्ताको भूमिका निर्णायक हुने गरी विदेशी लगानीलाई प्रोत्साहन गरिने छैन ।

२.१२ नेपालको संविधान र राष्ट्रिय हित प्रतिकूल सञ्चार सामग्रीको उत्पादन, बिक्रीवितरण र प्रवाहमा कुनै पनि किसिमका स्वदेशी वा विदेशी लगानीलाई नियन्त्रण गर्न प्रभावकारी अनुगमन र कारबाहीको व्यवस्था गरिनेछ ।

२.१३ राष्ट्रिय हितलाई सर्वोपरि ठानी विदेशी पत्रपत्रिकाको नेपाल संस्करण वा मुद्रण एवम् विदेशी रेडियो र टेलिभिजनको प्रसारण, रिले प्रसारण र विदेशी उत्पादनको नेपाली माध्यमबाट प्रसारण गरिने सामग्रीमा नेपालको संविधानको मर्म र भावना अनुकूल हुने गरी कानुनद्वारा व्यवस्थित गरिनेछ ।

२.१४ स्वस्थ र मर्यादित पत्रकारिताको विकासका निम्ति मिडिया एकाधिकार (Media Monopoly) र मिडिया सघनताबाट (Media Concentration) उत्पन्न हुन सक्ने नकारात्मक परिणामलाई निरुत्साहन गर्न छापा र विद्युतीय एउटै प्रकृतिको राष्ट्रियस्तरको प्रकाशन वा प्रसारण माध्यमको स्वामित्व धारण वा सञ्चालन गरेको एक व्यक्ति, परिवार वा समूहलाई अन्य प्रकाशन वा प्रसारण माध्यमको स्वामित्वमा निर्णायक हिस्सा नहुने गरी निश्चित सर्तसहित लगानीको सीमा तोक्ने सम्बन्धमा आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

२.१५ सञ्चारमाध्यमलाई राज्यद्वारा लोककल्याणकारी कार्यक्रमका निम्ति प्रोत्साहन स्वरूप प्रदान गरिने लोककल्याणकारी विज्ञापन र खुला बजारबाट हुने उपभोक्ता केन्द्रित विज्ञापनको प्रभावकारी व्यवस्थापनको आवश्यक व्यवस्था मिलाइनेछ । आमसञ्चारमाध्यमलाई देशको विविधताको प्रतीकका रूपमा विकसित गर्न लोककल्याणकारी विज्ञापनमार्फत दुर्गम

क्षेत्रबाट प्रकाशन वा प्रसारण हुने र मातृभाषामा प्रकाशन वा प्रसारण हुने महिला, दलित, आदिवासी जनजाति, मधेशी समुदाय र अपाङ्गता भएका व्यक्तिबाट सञ्चालित सञ्चारमाध्यमहरूलाई विशेष प्रोत्साहन गरिनेछ । महिला, दलित, आदिवासी जनजाति, मधेशी, पिछडा वर्ग, सीमान्तकृत समुदाय र अपाङ्गताको विषयलाई महत्व दिई सामग्री उत्पादन गर्ने पत्रकार, प्रस्तोता, सम्पादकजस्ता पदहरूमा ती वर्ग र समुदायका व्यक्तिहरूलाई अधिकतम रूपमा समावेश गर्न सञ्चारमाध्यमहरूलाई प्रोत्साहन गरिनेछ ।

२.१६ छापा, रेडियो, टेलिभिजन र अनलाइन माध्यमको विशिष्टतालाई दृष्टिगत गरी उल्लिखित सबै माध्यममा प्रकाशित वा प्रसारित हुने व्यापारिक विज्ञापनको अन्तर्वस्तुमा प्रभाव पर्न र उपभोक्तामा भ्रम सिर्जना हुन नदिन विज्ञापनसम्बन्धी एकीकृत कानुन निर्माण गरी नियामक निकायद्वारा नियमनको प्रभावकारी व्यवस्था गरिने छ । विज्ञापन बजारको प्रयोजनका लागि आवश्यकपर्ने समाचार माध्यमहरूको लोकप्रियता र प्रसारको आवधिक सूचना सङ्कलन गर्न विज्ञापनदाता उद्यमी, विज्ञापन एजेन्सी र समाचार माध्यमका सञ्चालक समावेश हुने गरी वितरण सम्परीक्षण समिति गठन गर्न प्रोत्साहन गरिनेछ ।

२.१७ राष्ट्रिय एकतालाई सुदृढ गर्न, सांस्कृतिक, जातीय, भौगोलिक र भाषिक विविधताबीच सद्भाव र सौहार्दपूर्ण संवाद कायम गराउन तथा सङ्कटपूर्ण अवस्थामा समेत सूचना प्रवाहलाई निरन्तरता दिन नेपाली जनताप्रति उत्तरदायित्व वहन गर्ने राष्ट्रव्यापी पहुँच भएको स्वायत्त निकायको रूपमा राष्ट्रिय सार्वजनिक सेवा प्रसारकको स्थापना गरिनेछ ।

२.१८ आमसञ्चारमाध्यमको अभिलेखीकरण, इजाजत, सरकारी विज्ञापनको समानुपातिक वितरण, श्रमजीवी पत्रकार, कर्मचारी र कामदारको श्रम विवादमा मध्यस्थता, नियमन र संस्थागत विकास, टेलिभिजन सिग्नल र उत्पादन, वितरणसम्बन्धी अनुमति, नवीकरण, नियमन र प्राविधिक अनुगमनका लागि आवश्यक कार्य गर्ने प्रेस रजिष्ट्रार कार्यालय र न्यूनतम पारिश्रमिक निर्धारण समितिले गरिआएका कामहरूसमेत गर्ने गरी आवश्यकताअनुसार राष्ट्रिय आमसञ्चार प्राधिकरण, राष्ट्रिय प्राधिकरण जस्ता निकायहरू स्थापना गर्न आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

२.१९ प्रेस काउन्सिललाई पत्रकारिता क्षेत्रको आचारसंहिता अनुगमन गर्ने र आचारसंहिता उल्लङ्घनसम्बन्धी उजुरी सुनुवाइ गर्ने स्वतन्त्र, स्वायत्त र सक्षम निकायको रूपमा विकास गरिने छ । स्वतन्त्र र सक्षम व्यक्तिहरू रहेको सिफारिस समितिको सिफारिसमा पत्रपत्रिका, रेडियो, टेलिभिजन, अनलाइनलगायतका आमसञ्चारमाध्यमका उपभोक्ताको समेत प्रतिनिधित्व हुने गरी समानुपातिक समावेशी सिद्धान्तको आधारमा काउन्सिलमा अध्यक्ष र सदस्यहरूको नियुक्तिको व्यवस्था गरिनेछ । आचारसंहिता उल्लङ्घनका सम्बन्धमा सम्बन्धित पक्षको उजुरी वा स्वजानकारीका आधारमा काउन्सिलले दुवै पक्षको कुरा सुनी मेलमिलाप गराउने वा मध्यस्थको प्रक्रियाद्वारा समस्या समाधान गर्ने व्यवस्था गर्न सोही अनुरूपको कानुन तर्जुमा गरी प्रेस काउन्सिललाई सक्षम बनाइनेछ ।

२.२० पत्रकारिता पेसालाई व्यावसायिक र मर्यादित बनाउन आमसञ्चारसम्बन्धी अध्ययन, अनुसन्धान र प्रशिक्षणद्वारा सञ्चारकर्मीहरूको सीप तथा दक्षता अभिवृद्धि र अद्यावधिक गर्न एवम् उच्चतम व्यावसायिक अभ्यासका लागि प्रेरित गर्न राष्ट्रिय आमसञ्चार प्रशिक्षण प्रतिष्ठान स्थापना गरिनेछ। नेपाली समाचार माध्यममा सबै जातजाति र सबै समुदायको उपस्थिति बढाउन प्रतिष्ठानले समानुपातिक समावेशी नीतिअनुसार सामाजिक वा सांस्कृतिक दृष्टिले पिछडिएका महिला, दलित, आदिवासी, आदिवासी जनजाति, मधेशी, थारू, मुस्लिम, उत्पीडित वर्ग, पिछडा वर्ग, अल्पसङ्ख्यक, सीमान्तकृत तथा अपाङ्गता भएका व्यक्तिहरूलाई पत्रकारिता पेसामा आबद्ध गरी समाचार कक्षलाई समावेशी बनाउन सोही अनुरूपको कार्यक्रम सञ्चालन गरिनेछ। यसैगरी उल्लिखित समुदायको पत्रकारितासम्बन्धी उच्च शिक्षामा सहभागिता वृद्धि गर्न आवश्यक छात्रवृत्तिका लागि प्रोत्साहन गरिनेछ ।

२.२१ पत्रकारिता र सञ्चार क्षेत्रको इतिहास र प्रविधिको विकासक्रम झल्किने गरी सूचना तथा सञ्चार क्षेत्रमा प्रयोग भएका सामग्रीहरूको समूह र प्रदर्शनी, यस क्षेत्रका पुराना उपकरण, सामग्री तथा प्रकाशनको सङ्कलन र संरक्षण एवम् आमसञ्चार क्षेत्रको अध्ययन, अनुसन्धानका लागि नेपाल सञ्चार सङ्ग्रहालय तथा अध्ययन प्रतिष्ठान स्थापना गरिनेछ ।

२.२२ सूचना तथा सञ्चार प्रविधिसम्बन्धी सेवाहरू, रेडियो, टेलिभिजन

र इन्टरनेट सेवाको व्यापक पहुँच एवम् विस्तार गर्न सोही अनुरूप कार्यक्रम तर्जुमा गरी लागु गरिनेछ । यसैगरी प्रसारण क्षेत्रलाई डिजिटल प्रणालीमा रूपान्तरण गरिनेछ ।

२.२३ श्रमजीवी पत्रकारको सेवा, सर्त र सुविधा सुनिश्चित गर्दै त्यससम्बन्धी कानुनको कार्यान्वयनको आधारमा सञ्चारमाध्यमको वर्गीकरण र लोककल्याणकारी तथा अन्य सरकारी विज्ञापन एवम् सुविधा र सहुलियत प्रदान गर्ने व्यवस्था मिलाइनेछ । यसैगरी श्रमजीवी पत्रकारसम्बन्धी ऐनबमोजिम श्रमजीवी पत्रकार, कर्मचारी र कामदारलाई सुविधा प्रदान गर्ने सञ्चार प्रतिष्ठानलाई प्रोत्साहन गरिने, कानुन कार्यान्वयन नगर्ने सञ्चारमाध्यमलाई सुविधाबाट वञ्चित गरिने र कारबाही गर्ने प्रणालीको विकास गरिनेछ ।

२.२४ राज्यको सञ्चार तथा आमसञ्चारसँग सम्बन्धित संरचना र निकायलाई संविधानको मौलिक हकमा व्यवस्था भएअनुसार समानुपातिक समावेशी बनाइनेछ ।

२.२५ पत्रकारिता क्षेत्रमा निरन्तर रूपमा लामो समयसम्म योगदान पुऱ्याएका ज्येष्ठ पत्रकारहरूलाई मासिक वृत्ति प्रदान गर्न "ज्येष्ठ पत्रकार सम्मान वृत्ति कोष" स्थापना गरी लागु गरिनेछ । साथै कार्यक्षेत्रमा रहँदा कुनै दुर्घटनामा परी घाइते भएका वा दीर्घ रोगबाट पीडित/ग्रसित पत्रकारको उपचारका लागि एक पत्रकार कोष स्थापना गरी सञ्चालन गर्न आवश्यक व्यवस्था गरिनेछ ।

## ३. विषयगत नीति

### ३.१ सेवा प्रसारण

३.१.१ फ्रिक्वेन्सीलाई राष्ट्रिय स्रोत मानी सोही आधारमा राष्ट्रिय फ्रिक्वेन्सी बाँडफाँड तथा वितरण योजना बनाइनेछ । त्यस्तो योजना बनेपछि निश्चित मापदण्डका आधारमा पारदर्शी र प्रतिस्पर्धी रूपमा फ्रिक्वेन्सी प्रयोग इजाजत दिने व्यवस्था मिलाइनेछ ।

३.१.२ एफ.एम. रेडियो र टी.भी.का फ्रिक्वेन्सीलाई सार्वजनिक सेवा प्रसारण, सामुदायिक प्रसारण र व्यापारिक प्रसारणका लागि बाँडफाँड गरिनेछ । यसरी बाँडफाँड भएका फ्रिक्वेन्सीहरूमध्ये सामुदायिक प्रसारण र व्यापारिक प्रसारणका फ्रिक्वेन्सीलाई पारदर्शी तथा खुला प्रतिस्पर्धाको आधारमा प्रदान गरिनेछ ।

यस्तै एफएम रेडियोलाई प्रदान गरिएका फ्रिक्वेन्सीको अवधि अठार वर्षसम्म कायम हुने गरी कानुनी व्यवस्था गरिनेछ। यो प्रावधान लागु हुनुभन्दा अगाडि प्रदान गरिएका फ्रिक्वेन्सीहरूमा नेपाल सरकारले सार्वजनिक सूचना प्रकाशित गरी फ्रिक्वेन्सी अवधि लागु भएको जानकारी दिएको मितिदेखि फ्रिक्वेन्सी अवधि गणना गरिनेछ।

३.१.३ प्रसारणको गुणस्तरीयता र प्रभावकारिता बढाउन नयाँ प्रविधिको उपयोगलाई प्रोत्साहन गर्दै फ्रिक्वेन्सी स्पेक्ट्रम कम भएका ठाउँमा फ्रिक्वेन्सी उपलब्धतालाई सहज बनाइनेछ। प्रसारण तथा दूरसञ्चार क्षेत्रका इजाजत प्राप्त संस्थाले परस्पर सहमतिमा पूर्वाधार तथा भू-उपग्रह साझेदारी गर्न प्रोत्साहनका लागि आवश्यक व्यवस्था गरिनेछ।

३.१.४ प्राकृतिक प्रकोप, महामारी र मानवीय सङ्कट हुँदा उद्धारको जानकारी र सूचना प्रवाहका लागि विशेष आकस्मिक फ्रिक्वेन्सीको व्यवस्था गरिनेछ।

### ३.२ सार्वजनिक सेवा प्रसारण

३.२.१ रेडियो नेपाल र नेपाल टेलिभिजनलाई राष्ट्रिय सार्वजनिक सेवा प्रसारणको रूपमा रूपान्तरण गरी लोकतान्त्रिक मूल्य, मान्यता र स्वतन्त्र पत्रकारिताको मर्मलाई आत्मसात् गर्दै स्वच्छ, निष्पक्ष र जनताप्रति उत्तरदायी रूपमा सञ्चालन हुने व्यवस्था गरिनेछ।

३.२.२ सार्वजनिक सेवा प्रसारण संस्थाले जनताका सञ्चार आवश्यकताको परिपूर्ति गर्ने एवम् कतिपय प्राकृतिक विपत्ति वा महामारीका बारेमा पूर्वसूचना प्रदान गर्ने भएकाले प्रादेशिक र स्थानीय तहमा स्थानीय विषयहरूमै केन्द्रित भई प्रसारण गर्ने व्यवस्थालाई सुनिश्चित गरिनेछ। सार्वजनिक सेवा प्रसारणको पहुँच देशव्यापी हुनुपर्ने भएकाले फ्रिक्वेन्सी वितरणमा प्राथमिकता प्रदान गरिनेछ।

३.२.३ सार्वजनिक सेवा प्रसारणले कुनै व्यक्ति वा समुदायउपर बिना भेदभाव राष्ट्रिय एकता, लोकतान्त्रिक मूल्य र व्यावसायिक पत्रकारिताको स्थापित मान्यता अनुरूप समाचार तथा कार्यक्रम उत्पादन र प्रसारणको नीति अवलम्बन गर्नेछ।

३.२.४ सार्वजनिक सेवा प्रसारणलाई रेडियो, टेलिभिजन, भू-उपग्रह र इन्टरनेटलगायतका माध्यमबाट नेपालका सबै भूभाग र अन्तर्राष्ट्रिय क्षेत्रमा समेत पुऱ्याउन आवश्यक अत्याधुनिक प्रविधिको प्रयोग गर्ने व्यवस्था मिलाइनेछ ।

३.२.५ सार्वजनिक सेवा प्रसारणलाई महिला, अपाङ्गता भएका व्यक्ति, आदिवासी जनजाति, दलित, मधेशी, पिछडिएको क्षेत्र एवम् समुदायको स्वामित्वको बोध गराउन जनशक्ति छनोट गर्दा सबै तहमा समानुपातिक समावेशी नीति अवलम्बन गर्दै विषयवस्तुमा लोपोन्मुख परम्परा, संस्कृति र समुदायगत कार्यक्रम समावेश गर्न प्रोत्साहन गरिनेछ ।

३.२.६ अन्तरसांस्कृतिक, अन्तरजातीय, अन्तर भौगोलिक अन्तरलिङ्गीय र अन्तर भाषिक संवादलाई सौहार्दपूर्ण बनाउने अन्तरवस्तुलाई प्रवर्द्धन गरिनेछ ।

३.२.७ सार्वजनिक सेवा प्रसारणले आफ्नो उत्पादन जनहितका निम्ति निजी क्षेत्रका प्रसारकलाई समेत उपलब्ध गराउन सक्ने व्यवस्था मिलाइनेछ ।

### ३.३ निजी एवम् व्यापारिक प्रसारण

३.३.१ निजी क्षेत्रबाट प्रसारण हुने एफएम रेडियो र टेलिभिजनलगायतका प्रसारण माध्यमलाई स्वतन्त्र पत्रकारिताको स्थापित सिद्धान्त र लोकतान्त्रिक मूल्य, मान्यता अनुरूप स्वतन्त्र, निष्पक्ष, निर्भीक र व्यावसायिक संस्थाको रूपमा सञ्चालन हुने वातावरण सिर्जना गरिनेछ ।

३.३.२ प्रसारण माध्यमलाई प्रसारण पहुँच क्षेत्र, लगानी, भौतिक पूर्वाधार, जनशक्ति, उद्देश्यलगायतका विभिन्न आधारमा राष्ट्रिय, प्रादेशिक र स्थानीय प्रसारकका रूपमा वर्गीकरण गरी प्रसारण फ्रिक्वेन्सीहरूको न्यायोचित वितरण गरिनेछ ।

३.३.३ एफएम रेडियोमा कुनै पनि प्रसारण स्टेसनबाट प्रसारण भइसकेको कुनै पनि सामग्रीको बीस प्रतिशत सामग्रीभन्दा बढी नेटवर्किङ्ग माध्यमबाट वा अरू कुनै माध्यमबाट रिले प्रसारण वा छपाइ पुनः प्रसारण गर्न निरुत्साहन गरिनेछ ।

३.३.४ समाचार वा सूचनामूलक कार्यक्रम प्रसारण गर्ने प्रसारण

संस्थामा सम्पादकीय स्वतन्त्रता सुनिश्चित गर्न समाचारको जिम्मेवारी र जवाफदेहिता वहन गर्ने गरी कानुनद्वारा तोकिएको योग्यता पुगेको सम्पादक नियुक्ति गर्ने व्यवस्था मिलाइनेछ ।

## ३.४ सामुदायिक प्रसारण

३.४.१ उपभोक्ता समूह, स्थानीय निकाय, सार्वजनिक यातायात, जलवायु परिवर्तन, हावा, पानी तथा मौसम, जनस्वास्थ्य र कृषिसँग सम्बन्धित सरकारी निकाय, गैरसरकारी संस्था वा सहकारी, स्थानीय क्लब, गुठी, सामुदायिक वा सार्वजनिक शैक्षिक संस्थाको स्वामित्वमा रहेको नाफा आर्जन नगर्ने उद्देश्यकासाथ सञ्चालित एफ.एम. रेडियो र टेलिभिजनहरूलाई सामुदायिक सेवा प्रसारणका रूपमा परिभाषित गरी ती रेडियो र टेलिभिजनलाई उद्देश्य, स्थायित्व र विषयवस्तुको आधारमा वर्गीकरण गरी तदनुरूप मापदण्ड बनाई सुविधा र सहुलियत प्रदान गरिनेछ । तोकिएको मापदण्डका आधारमा सामुदायिक प्रसारकको आवधिक मूल्याङ्कन गर्ने प्रचलनलाई प्रोत्साहन गरिनेछ ।

३.४.२ सामुदायिक रेडियो तथा टेलिभिजन पत्रकारिताको स्थापित मान्यताको आधारमा लोकतान्त्रिक मूल्यमान्यता अनुरूप स्वतन्त्र, निष्पक्ष, स्वायत्त, समावेशी सञ्चारमाध्यमको रूपमा विकास हुने वातावरण सिर्जना गरिनेछ ।

३.४.३ सामुदायिक रेडियो तथा टेलिभिजनमा स्थानीयता र निकटता भएका समाचार तथा सामग्री प्रवर्द्धन गर्नका लागि कुनै पनि केन्द्रीय प्रसारण माध्यमबाट प्रसारित समाचार तथा समाचार प्रधान सामग्रीलाई सामुदायिक रेडियो तथा सामुदायिक टेलिभिजनले आफ्नो कूल प्रसारित सामग्रीको बीस प्रतिशतभन्दा बढी समाचार तथा सामग्री प्रसारण वा पुनः प्रसारण गर्न निरुत्साहन गरिनेछ । सामुदायिक रेडियो तथा सामुदायिक टेलिभिजनको प्रसारण क्षेत्र स्थानीय विषयवस्तुमा केन्द्रित हुनेछ ।

३.४.४ सेवा प्रसारणलाई व्यवस्थित, व्यावसायिक र मर्यादित रूपमा सञ्चालन गर्न सेवा प्रसारणसँग सम्बन्धित विशेष कानुन निर्माण गरी लागु गरिनेछ ।

### ३.५ समाचार समिति

३.५.१ राष्ट्रिय समाचार समितिको सेवा विस्तार/विविधीकरण गरी सञ्चालनमा सेवाग्राहीको प्रतिनिधित्व रहने व्यवस्था गरी सार्वजनिक सेवा प्रदायक निकायको रूपमा विकास गरिनेछ । यसैगरी राष्ट्रिय समाचार समितिलाई क्षमता र स्तरोन्नति गरी सूचना बैंकका रूपमा स्थापित गरिनेछ ।

३.५.२ निजी तथा गैरसरकारी स्तरमा समाचार एजेन्सीको स्थापनाका निम्ति अनुमति प्रदान गर्न सकिने व्यवस्था गरिनेछ ।

### ३.६ छापा सञ्चार माध्यम

३.६.१ गोरखापत्रसम्बन्धी नीति (क) गोरखापत्र संस्थानलाई सम्पादकीय स्वतन्त्रतासहित स्वायत्त, सक्षम र स्रोतसाधनयुक्त संस्थाका रूपमा विकास गरी यसका प्रकाशनहरूलाई व्यावसायिक, स्तरीय, आधुनिक प्रविधिमैत्री, समावेशी र प्रतिस्पर्धात्मक बनाइनेछ । साथै यसका प्रकाशनहरूलाई प्रादेशिक स्तरमा पनि प्रकाशन गर्नका लागि आवश्यक व्यवस्था गरिनेछ । (ख) गोरखापत्र संस्थानलाई स्वायत्त र समावेशी प्रकाशन गृहका रूपमा विकास गर्न यसको स्वामित्वमा जनसाधारणको पहुँच सहज तुल्याउने व्यवस्था गरी यसको व्यावसायिक एवं प्रतिस्पर्धात्मक क्षमता अभिवृद्धिका लागि आवश्यक पुनःसंरचना, व्यवस्थापकीय र सम्पादकीय सुधारका योजना कार्यान्वयन गरिनेछ ।

३.६.२ निजी एवम् व्यापारिक छापा सञ्चारमाध्यम (क) सम्पादकीय स्वतन्त्रता सुनिश्चित गर्दै सञ्चार संस्थामा कार्यरत पत्रकार, कामदार र कर्मचारीको रोजगारी तथा वृत्ति-विकासको प्रत्याभूति गरिने व्यवस्था मिलाइनेछ । (ख) दर्ता भई प्रकाशन नै नभएको पत्रपत्रिकाको नाम दर्ता गर्न चाहने व्यक्ति वा संस्थाले प्रयोग गर्न पाउने गरी आवश्यक कानुनी व्यवस्था गरिनेछ । (ग) पत्रपत्रिकाको सम्पादकीय जनशक्ति र अन्तर्वस्तुमा महिला, सीमान्तकृत, विपन्न, अपाङ्गता भएका व्यक्ति, आदिवासी जनजाति, मधेशी, दलित, अल्पसङ्ख्यक, पिछडिएको क्षेत्रको प्रतिनिधित्व गराउन प्रोत्साहन गरिनेछ । (घ) विविध विधामा केन्द्रित भई गरिने पत्रकारिताको प्रवर्द्धन गर्दै सबै राष्ट्र भाषामा पत्रपत्रिकाको सञ्चालन गर्न प्रोत्साहन गरिनेछ ।

३.६.३ प्रादेशिक, स्थानीय वा सामुदायिक छापा माध्यम (क) प्रादेशिक

तहमा सञ्चालन हुने पत्रपत्रिकाहरूलाई सम्बन्धित प्रदेशले उद्देश्य, स्थायित्व र विषयवस्तुको आधारमा वर्गीकरण गरी तदनुरूप मापदण्ड बनाई सुविधा र सहुलियत प्रदान गर्न सक्नेछ । (ख) स्थानीय तहमा सामुदायिक तथा सहकारीको माध्यमबाट सञ्चालन हुने पत्रपत्रिकाहरूलाई सम्बन्धित स्थानीय तहले उद्देश्य, स्थायित्व र विषयवस्तुको आधारमा वर्गीकरण गरी तदनुरूप मापदण्ड बनाई सुविधा र सहुलियत प्रदान गर्न सक्नेछ । (ग) सामुदायिक तथा सहकारी सञ्चारमाध्यमहरूलाई पत्रकारिताको स्थापित मान्यताको आधारमा लोकतान्त्रिक मूल्यमान्यता अनुरूप स्वतन्त्र र निष्पक्ष सञ्चारमाध्यमका रूपमा विकसित हुन सक्ने वातावरण सिर्जना गरिनेछ ।

**३.७ अनलाइन मिडिया**

३.७.१ समाचारमूलक अनलाइन माध्यमलाई वर्गीकरण गरी अन्य समाचार माध्यम सरह सुविधा र नियमनको व्यवस्था मिलाइनेछ ।

३.७.२ नेपाली भूभागलाई लक्षित गरी इन्टरनेटको माध्यमबाट हुने प्रसारणका सम्बन्धमा कानुनबमोजिम नियमनको व्यवस्था गरिनेछ ।

३.७.३ समाचारमूलक अनलाइन पत्रिकाको रूपमा दर्ता नभएका इन्टरनेटमा आधारित अन्य माध्यमको नियमन सम्बन्धित प्रचलित कानुनबमोजिम हुनेछ ।

३.७.४ इन्टरनेटको माध्यमबाट हुने प्रसारण र प्रकाशनमा अत्याधुनिक प्रविधिको प्रयोग गर्न सम्बन्धित क्षेत्रलाई प्रोत्साहन गर्न आवश्यक वातावरण सिर्जना गरिनेछ ।

३.७.५ सूचना तथा सञ्चार प्रविधिको अवाञ्छित प्रयोग र अनपेक्षित सूचना प्रवाहलाई निरुत्साहन गर्न इन्टरनेट सेवा प्रदायकहरूलाई विशेष उपायहरू अवलम्बन गर्न आवश्यक व्यवस्था गरिने छ ।

३.७.६ व्यक्तिको गोपनीयता तथा वैचारिक स्वतन्त्रतालगायतका मूल्य मान्यताहरूको प्रवर्द्धन गर्न साइबर सुरक्षा नीति तर्जुमा गरी इन्टरनेटबाट हुने साइबर अपराध (Cyber Crime) नियन्त्रणका निम्ति आवश्यक कानुन बनाई प्रभावकारी कार्यान्वयन गरिनेछ ।

## ३.८ चलचित्र

३.८.१ नेपाली चलचित्रलाई नेपालको जातीय, सांस्कृतिक र भाषिक विविधताबीच एकता कायम गरी नेपाली कला, संस्कृति, साहित्य शिक्षालाई प्रवर्द्धन गरी सिर्जनशील, सांस्कृतिक एवम् स्वच्छ र स्वस्थ मनोरञ्जनात्मक उद्योगको रूपमा विकास, विस्तार र संवर्द्धन गरिनेछ ।

३.८.२ नेपाललाई एक आकर्षक राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय चलचित्र छायाङ्कन स्थलको रूपमा विकास गरी चलचित्र पर्यटनलाई प्रोत्साहन गरिनेछ ।

३.८.३ नेपाली मौलिक कला, भाषा एवम् संस्कृतिलाई प्रतिविम्बित गर्दै बनेका चलचित्रहरू, आदिवासी जनजाति तथा विभिन्न मातृभाषामा बनेका चलचित्रहरू तथा राष्ट्रिय अखण्डता र राष्ट्रिय स्वाभिमानलाई उच्च राख्ने चलचित्रहरू, बौद्धिक, चेतनामूलक, शिक्षाप्रद चलचित्रहरूलाई राज्यले विशेष सुविधा एवम् सहुलियत उपलब्ध गराउनेछ ।

३.८.४ चलचित्र क्षेत्रमा लामो समयसम्म महत्वपूर्ण योगदान गर्ने चलचित्रकर्मीलाई प्रोत्साहन र सम्मान गर्ने नीति लिइनेछ ।

३.८.५ टिकट बिक्री र त्यसबाट भएको आम्दानी, कर, प्रदर्शन-अवधि र लोकप्रियतासम्बन्धी सूचनाको पारदर्शिताका निम्ति चलचित्र क्षेत्रमा 'बक्स अफिस' प्रणाली लागु गर्न प्रोत्साहन गरिनेछ ।

## ३.९ विज्ञापन

३.९.१ विज्ञापन व्यवसायलाई सेवा उद्योगको रूपमा सूचीकृत गरी आवश्यक सुविधा र सहुलियतहरू प्रदान गरिनेछ । यसैगरी विज्ञापन एजेन्सीलाई लगानी, पूर्वाधार, कार्यक्षमता र कार्यप्रकृति आदिका आधारमा वर्गीकरण गरिनेछ ।

३.९.२ समाचार माध्यमका अन्तर्वस्तुमा विज्ञापनबाट हुने आम्दानीको दुष्प्रभाव र विविध वस्तु तथा सेवासम्बन्धी कुनै पनि विज्ञापनबाट उपभोक्तालाई भ्रममा पर्न नदिन र उपभोक्ताको उत्पादन र सेवा छनोट गर्न पाउने अधिकार सुनिश्चित गर्ने प्रयोजनका लागि अमर्यादित, अशोभनीय र संविधानको भावना प्रतिकूल सामग्रीलाई विज्ञापनका रूपमा प्रकाशन वा प्रसारण

गर्न नपाइने व्यवस्था गरी उपभोक्ता हितको संरक्षण गरिनेछ ।

३.९.३ राज्यद्वारा उपलब्ध गराइने लोक कल्याणकारी विज्ञापनलाई समानुपातिक ढङ्गले वितरणको व्यवस्था मिलाइनेछ ।

३.९.४ सञ्चारमाध्यममा प्रकाशन वा प्रसारण हुने विज्ञापन सामग्रीको कुल समाचार र अन्य सामग्रीसँगको अनुपात निर्धारण गरी तदनुकूल प्रसारण गराउने दायित्व त्यससम्बन्धी नियामक निकायले गर्ने गरी आवश्यक व्यवस्था गरिनेछ ।

३.९.५ आमसञ्चारमाध्यमले राजनीतिक सङ्गठनको नाममा निर्वाचनको समय वा अन्य समयमा निर्वाचनको स्वच्छता र सार्वजनिक मर्यादामा प्रतिकूल प्रभाव पार्ने विज्ञापन वा अन्य सामग्री प्रवाहित गर्न नपाउने गरी आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

३.९.६ आमसञ्चारमाध्यमले कुनै निश्चित विचार, धर्म र आस्था अथवा ब्राण्ड, उत्पादन वा सेवाको मात्र प्रचार वा एकाधिकार रहने गरी प्रकाशन, प्रसारण वा प्रदर्शन गर्न नपाउने गरी आवश्यक कानुनी व्यवस्था गरिनेछ ।

३.९.७ सर्वसाधारणलाई उपयोगी हुने विज्ञापनलाई प्रसारण गर्ने प्रसारकलाई प्रोत्साहन र प्रवर्द्धन गरिनेछ ।

३.९.८ प्राकृतिक विपत् तथा प्रकोपले खडा गरेको सङ्कटका समयमा आवश्यक सूचना प्रवाह गर्ने विज्ञापनका लागि प्राथमिकताका साथ सहुलियत दरमा वा निःशुल्क प्रकाशन, प्रसारणको व्यवस्था सुनिश्चित गरिनेछ ।

३.९.९ कुनै उत्पादन वा सेवाका सम्बन्धमा गलत सूचना प्रवाह हुन नदिन त्यस्तो उत्पादन वा सेवा प्रवाह भएका सूचनाहरूको कानुनी दायित्व सम्बन्धित विज्ञापनदाता, प्रकाशक र प्रसारकले वहन गर्नुपर्ने व्यवस्था गरिनेछ ।

३.९.१० उपभोक्तामा भ्रम उत्पन्न हुन नदिन समाचार सामग्री र विज्ञापन सामग्रीबीचको अन्तर छुट्याउन ध्वनि, दृश्य वा चित्र सङ्केतको प्रयोग गर्ने गरी विशेष व्यवस्थाहरू मिलाउने व्यवस्था गरिनेछ ।

३.९.११ नेपालभित्र प्रसारणको अनुमति लिने विदेशी टेलिभिजन च्यानललाई विज्ञापनरहित (Clean Feed) बनाउने नीति

अवलम्बन गरिनेछ । प्रसारण अनुमति लिइसकेका टेलिभिजन च्यानलको हकमा अवधि तोकी विज्ञापनरहित (Clean Feed) प्रसारण गराउन आवश्यक व्यवस्था गरिनेछ ।

३.९.१२ नेपालमा प्रकाशन, प्रसारण र प्रदर्शन गरिने विज्ञापनहरूमा ध्वनीकरण (Dubbing) गरिएका विज्ञापनहरूलाई रोक लगाइनेछ ।

३.९.१३ होर्डिङ्ग बोर्ड, विद्युतीय डिस्प्ले, टावर, बिलबोर्ड, भित्तेलेखन र उच्च बेलुनजस्ता बाह्य (आउटडोर) विज्ञापन प्रदर्शन गर्न, राख्न अनुमति दिइने क्षेत्र छुट्याई जनताको सुरक्षा, स्थानीय क्षेत्रको सौन्दर्य र वातावरणको स्वच्छता सुनिश्चित गर्न स्थानीय तह एवम् अन्य सम्बद्ध निकायमार्फत कार्य गर्ने र त्यस्ता संरचना निर्माण वा विज्ञापन प्रदर्शन गर्नुअघि पूर्वअनुमति प्राप्त गर्नुपर्ने प्रणाली स्थापना गरिनेछ ।

३.९.१४ स्थानीय विज्ञापनलाई स्थानीय तहकै सञ्चारमाध्यममा वितरण गर्नका लागि प्रोत्साहन गरिनेछ ।

### ३.१० टेलिभिजन सिग्नल र केबुल वितरकसम्बन्धी व्यवस्था

३.१०.१ प्रकाशन र प्रसारणजस्तै सामग्रीको वितरणसमेत अभिव्यक्ति स्वतन्त्रतासँग अभिन्न रूपमा जोडिएकाले टेलिभिजन सिग्नल वितरण र केबुल वितरणलाई सञ्चारको आधार भूत पूर्वाधारको रूपमा ग्रहण गर्दै सबै प्रकारका केबुल वितरणसम्बन्धी व्यवस्थालाई डिजिटल प्रणालीमा रूपान्तरण गरिनेछ ।

३.१०.२ केबुल प्रसारकहरूले स्थानीय वा सामुदायिक टेलिभिजनको प्रसारणलाई प्राथमिकतासाथ प्रसारण गर्ने व्यवस्था मिलाइनेछ ।

३.१०.३ टेलिभिजन सिग्नल वितरक तथा केबुल वितरकहरूले विदेशी टेलिभिजन च्यानलहरूमा विज्ञापनरहित (Clean Feed) नीति अवलम्बन गर्ने गरी आवश्यक व्यवस्था गरिनेछ ।

३.१०.४ टेलिभिजन सिग्नल वितरण र केबुल वितरणको नियमन र अनुगमन कानुनद्वारा व्यवस्थित गरिनेछ ।

### ४. विविध

४.१ यस नीतिमा गरिएका व्यवस्थाहरूलाई कार्यान्वयन गर्न गराउन विद्यमान कानुनमा समयानुकूल पुनरावलोकन गरी आवश्यकतानुसार सुधारका साथै अन्य आवश्यक नयाँ कानुनहरू बनाई प्रभावकारी कार्यान्वयन गरिनेछ ।

४.२ यस नीतिमा उल्लिखित भएका विषयहरूको कार्यान्वयन, अनुगमन र नियमनका लागि आवश्यक संरचनाहरू बनाई लागु गरिनेछ ।

४.३ यो राष्ट्रिय आमसञ्चार नीति प्रत्येक दश वर्षमा पुनरावलोकन गरिनेछ ।

**५. खारेजी सञ्चार नीति, २०४९ खारेज गरिएको छ ।**

# राष्ट्रिय प्रसारण ऐन, २०४९

लालमोहर प्रकाशन मिति
२०५०।२।२७४

संशोधन गर्ने ऐन
१. सञ्चारसम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५७
२०५७/१०/१८

**२०४९ सालको ऐन नं. ६**
**राष्ट्रिय प्रसारणसम्बन्धमा व्यवस्था गर्न बनेको ऐन**

**प्रस्तावनाः** ●नेपाल अधिराज्यको संविधान, २०४७ द्वारा प्रत्याभूति गरिएको जनताको अभिव्यक्ति स्वतन्त्रता तथा सुसूचित हुन पाउने हकलाई संरक्षण एवं संवर्द्धन गर्न तथा प्रसारण प्रणालीको माध्यमबाट मुलुकको आर्थिक, सामाजिक तथा सांस्कृतिक क्रियाकलापलाई जनसमक्ष पुऱ्याई सबै जाति, भाषा, वर्ग, क्षेत्र र धार्मिक सम्प्रदायबीच समानता, आपसी सद्भावना र सामन्जस्यताको वातावरण सृजना गरी राष्ट्रभाषा एवं राष्ट्रिय भाषाको माध्यमबाट समेत जन चेतना जगाउन, सूचना र सञ्चारका क्षेत्रमा उपलब्ध आधुनिक प्रविधिको प्रयोग गरी प्रसारणका माध्यमहरूलाई विश्वसनीय, प्रभावकारी एवं सुदृढ बनाई राष्ट्रिय र अन्तर्राष्ट्रिय स्तरमा भएका निष्पक्ष एवं आधिकारिक समाचार तथा सूचनाको जानकारी आम जनताले पाउने गरी सूचनाको प्रवाहलाई निर्वाध रूपले प्रसारण गर्ने सम्बन्धमा कानुनी व्यवस्था गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको बाईसौँ वर्षमा संसद्ले यो ऐन बनाएको छ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम "राष्ट्रिय प्रसारण ऐन, २०४९" रहेको छ।
(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,- (क) "प्रसारण" भन्नाले इसारा, आवाज, आकृति, तस्वीर वा अन्य यस्तै प्रकारबाट

● नेपालको अन्तरिम संविधान, २०६३ ले नेपाल अधिराज्यको संविधान, २०४७ लाई खारेज गरेको।

आम जनताले जानकारी पाउन सक्ने गरी पठाइने रेडियो सञ्चार सेवा सम्झनुपर्छ ।

(ख) "कार्यक्रम" भन्नाले श्रव्य वा श्रव्यदृश्यको माध्यमद्वारा प्रसारण हुने जुनसुकै किसिमको कार्यक्रम सम्झनुपर्छ ।

(ग) "फ्रीक्वेन्सी मोडुलेसन प्रसारण प्रणाली" भन्नाले फ्रीक्वेन्सी मोडुलेसन प्रसारण प्रविधि प्रयोग गरी प्रसारण संस्थाले रेडियो वा टेलिभिजन प्रविधिका लागि तोकिएको च्यानलबाट गरिएको प्रसारण सम्झनुपर्छ ।

(घ) "इजाजतपत्र" भन्नाले कुनै कार्यक्रमको प्रसारण गर्नको लागि दफा ६बमोजिम दिइने प्रसारण इजाजतपत्र वा फ्रीक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी प्रसारण गर्न दिइने इजाजतपत्रलाई समेत जनाउँछ ।

(ङ) "प्रसारण संस्था" भन्नाले यस ऐनबमोजिम कार्यक्रम प्रसारण गर्न इजाजतपत्र प्राप्त व्यक्ति वा सङ्गठित संस्था सम्झनुपर्छ ।

(च) "स्याटेलाइट" भन्नाले विभिन्न प्रसारण सामग्री प्राप्त गर्न वा अन्यत्र पठाउनको लागि अन्तरिक्षमा अवस्थित भू-उपग्रह सम्झनुपर्छ ।

(छ) "केबुल" भन्नाले कुनै निश्चित प्रसारण केन्द्रबाट तारको माध्यमद्वारा प्रसारण सामग्रीहरू विभिन्न ग्राहक, सदस्य वा उपभोक्तासमक्ष पुऱ्याउने प्रविधि सम्झनुपर्छ ।

(ज) "भू-उपग्रह प्रसार केन्द्र (अर्थ स्टेसन)" भन्नाले स्याटेलाइट मार्फत प्रसारण कार्यक्रम आदान प्रदान गर्न पृथ्वीको धरातलमा स्थापना गरिने केन्द्र (स्टेसन) सम्झनुपर्छ ।

(झ) "प्रसारक" भन्नाले प्रसारण संस्थाबाट प्रसारण हुने कार्यक्रम वाचन गर्ने व्यक्ति सम्झनुपर्छ र सो शब्दले त्यस्तो कार्यक्रम तयार गर्ने तथा सम्पादन गर्ने व्यक्तिलाई समेत जनाउनेछ ।

(ञ) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यस ऐनअन्तर्गत बनेको नियममा तोकिएको वा तोकिएबमोजिम सम्झनुपर्छ ।

३. **प्रसारणसम्बन्धी कार्यक्रमको रेखदेख र सञ्चालन** : नेपालभित्र प्रसारणसम्बन्धी कार्यक्रमको रेखदेख र सञ्चालनको नीति निर्माण गर्ने अधिकार नेपाल सरकारलाई हुनेछ ।

४. **इजाजतपत्र नलिई प्रसारण गर्न नहुने** : कसैले पनि यस ऐनबमोजिम इजाजतपत्र नलिई कुनै पनि कार्यक्रम प्रसारण गर्नु हुँदैन ।

५. **इजाजतपत्रको लागि निवेदन दिनुपर्ने** : नेपालभित्रको कुनै ठाउँमा स्याटेलाइट, केबुल वा अन्य सञ्चार माध्यमद्वारा कुनै कार्यक्रमको प्रसारण गर्न वा फ्रीक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी शिक्षाप्रद, मनोरञ्जनात्मक तथा समाचारमूलक कार्यक्रम प्रसारण गर्न चाहने व्यक्ति वा सङ्गठित संस्थाले तोकिएको दस्तुरसहित तोकिएको ढाँचामा नेपाल सरकारसमक्ष निवेदन दिनुपर्नेछ ।

६. **इजाजतपत्र दिन सकिने** : दफा ५ बमोजिमको निवेदन पर्न आएमा नेपाल सरकारले उक्त निवेदनउपर आवश्यक जाँचबुझ गरी निवेदकलाई तोकिएको सर्तहरू पालना गर्ने गरी कार्यक्रम प्रसारण गर्न तोकिएको ढाँचामा इजाजतपत्र दिन सक्नेछ ।

७. **प्रसारणमा रोक लगाउन सकिने** : राष्ट्र र राष्ट्रिय हितलाई ध्यानमा राखी नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी एकपटकमा छ महीनामा नबढाई कुनै खास विषय, घटना वा क्षेत्रसँग सम्बन्धित कुनै कार्यक्रम प्रसारण संस्थाबाट प्रसारण गर्न नपाउने गरी रोक लगाउन सक्नेछ ।

८. **प्रसारण संस्थाको इजाजतपत्र रद्द गर्न सकिने** : (१) कुनै प्रसारण संस्थाले यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियमको विपरीत कुनै कार्यक्रम प्रसारण गरेमा नेपाल सरकारले त्यस्तो प्रसारण संस्थाले प्राप्त गरेको इजाजतपत्र रद्द गर्न सक्नेछ ।
(२) उपदफा (१) बमोजिम इजाजतपत्र रद्द गर्नुअघि नेपाल सरकारले त्यस्तो प्रसारण संस्थालाई आफ्नो सफाइ पेस गर्न मनासिब मौका दिनुपर्नेछ ।

९. **भू–उपग्रह प्रसार केन्द्रको स्थापनासम्बन्धी विशेष व्यवस्था** : (१) कुनै व्यक्ति वा सङ्गठित संस्था वा संयुक्त लगानीमा स्वदेशी र विदेशी व्यक्ति वा सङ्गठित संस्थाले स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्र स्थापना गरी कुनै कार्यक्रम प्रसारण गर्न चाहेमा स्वीकृतिको लागि नेपाल सरकारसमक्ष निवेदन दिनुपर्नेछ ।
(२) उपदफा (१) बमोजिमको निवेदन पर्न आएमा नेपाल सरकारले उक्त निवेदनउपर आवश्यक जाँचबुझ गर्दा निवेदकलाई स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्र स्थापना गरी कार्यक्रम प्रसारण गर्ने स्वीकृति दिन मनासिब देखेमा तोकिएको सर्तहरू पालना गर्ने सर्तमा

तोकिएको कार्यक्रमहरू प्रसारण गर्न पाउने गरी तोकिएबमोजिम स्वीकृति दिन सक्नेछ ।

(३) भू-उपग्रह प्रसार केन्द्रको स्थापना तथा प्रसारणसम्बन्धी अन्य व्यवस्था तोकिएबमोजिम हुनेछ ।

१०. **प्रसारण तथा वितरण शुल्क** : प्रसारण संस्थाले कुनै कार्यक्रम वितरण गरी सञ्चालन गर्न चाहेमा नेपाल सरकार वा तोकिएको संस्थालाई तिर्नुपर्ने शुल्क र त्यस्तो कार्यक्रम उपयोग गर्ने व्यक्ति वा संस्थाबाट लिनुपर्ने शुल्क तोकिएबमोजिम हुनेछ ।

११. **कार्यक्रम उत्पादन तथा प्रसारण** : प्रसारण संस्थाले कुनै कार्यक्रमको उत्पादन तथा प्रसारण गर्दा देहायका कुरालाई प्राथमिकता दिनुपर्नेछ :-

(क) कृषि, शिक्षा, उद्योग, वाणिज्य, विज्ञान र प्रविधि, स्वास्थ्य, परिवार नियोजन र वन तथा वातावरण संरक्षण जस्ता विकासमूलक कार्यक्रमहरू,

(ख) सबै जाति, भाषा, वर्ग, क्षेत्र तथा धार्मिक सम्प्रदायबीच समानता, आपसी सद्भावना र सामञ्जस्यता अभिवृद्धि गर्ने किसिमका कार्यक्रमहरू,

(ग) नेपालका विभिन्न भाषा र संस्कृतिको उत्थानमा सहयोग पुऱ्याउने कार्यक्रमहरू,

(घ) राष्ट्रिय हित र राष्ट्रिय एकतामा अभिवृद्धि गराउने विषयका कार्यक्रमहरू,

(ङ) राष्ट्रिय चेतना तथा नैतिक जागरण वृद्धि गर्ने विषयका कार्यक्रमहरू,

(च) जनतामा सामाजिक चेतना बढाउने र प्रजातान्त्रिक मूल्य, मान्यता एवं संस्कारको विकास गराउने किसिमका कार्यक्रमहरू,

(छ) नेपाल र छिमेकी मुलुक तथा मित्रराष्ट्रहरूसँगको सम्बन्धमा प्रतिकूल प्रभाव नपार्ने विषयका कार्यक्रमहरू,

(ज) राष्ट्रले अख्तियार गरेको परराष्ट्र नीतिसम्बन्धी कार्यक्रमहरू,

(झ) लोक गीत र लोक संस्कृतिको प्रवर्द्धन हुने कार्यक्रमहरू,

(ञ) राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा भए गरेका महत्त्वपूर्ण गतिविधिहरू ।

१२. **कार्यक्रम उत्पादन तथा प्रसारणमा निजी क्षेत्रलाई सहभागी गराउन सकिने** : कार्यक्रम निष्पक्ष, सरल, सक्षम तथा प्रभावकारी बनाउन सरकारी क्षेत्रको

अतिरिक्त निजी क्षेत्रलाई समेत सहभागी गराउन सकिनेछ ।

१३. **विदेशी प्रशारण संस्था वा सञ्चार माध्यमलाई प्रसारण समय उपलब्ध गराउन सकिने** : विदेशी प्रसारण संस्था वा सञ्चार माध्यमहरूले प्रसारण संस्थाबाट कुनै कार्यक्रम प्रसारण गराउन चाहेमा राष्ट्रिय हितमा प्रतिकूल प्रभाव नपर्ने गरी तोकिएको मापदण्डको आधारमा शिक्षाप्रद, मनोरञ्जनात्मक तथा समाचारमूलक कार्यक्रम प्रसारण गर्न समय उपलब्ध गराउन सकिनेछ ।

१४. **विज्ञापन प्रसारण गर्न समय उपलब्ध गराउन सकिने** : कसैले कुनै विषयमा प्रचार प्रसार गरी आम जनतामा विज्ञापन प्रसारण गराउन चाहेमा त्यस्तो व्यक्ति, संस्था वा निकायबाट तोकिएको दस्तुर लिई विज्ञापन प्रसारण गराउने समय उपलब्ध गराउन सकिनेछ । तर जनस्वास्थ्यलाई हानि पुऱ्याउने धुम्रपान तथा मदिरा जस्ता पदार्थहरूको विज्ञापन प्रसारणलाई निरुत्साहित गरिनेछ ।

१५. **विज्ञापन प्रसारण गर्न नपाइने** : (१) दफा १४ मा जुनसुकै कुरा लेखिएको भए तापनि कसैले पनि देहायको कुराहरूको विज्ञापन प्रसारण गर्न गराउन पाउने छैन :-

(क) राजनैतिक दलहरूलाई प्रतिकूल असरपर्ने विषयका कुराहरू,
(ख) अश्लिल किसिमका सामग्रीहरू,
(ग) निर्वाचित सरकारलाई हिंसात्मक शक्ति प्रयोग गरी हटाउने उद्देश्यका सामग्रीहरू,
(घ) जनमानसमा अस्वाभाविक भय तथा आतङ्क पैदा गर्ने प्रकृतिका कुराहरू,
(ङ) नेपालको असंलग्न परराष्ट्र नीति विपरीतका कुराहरू,
(च) कुनै पनि जाति, भाषा, धर्म र संस्कृतिलाई अपव्याख्या, अवहेलना, अपमानित तथा अवमूल्याङ्कन गर्ने सामग्रीहरू ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि निर्वाचनको समयमा नेपाल सरकारले निर्वाचन आयोगको परामर्श लिई कुनै पनि राजनैतिक दललाई आफ्नो घोषणापत्र, कार्यक्रम वा त्यस्तो दलको दर्शन जस्ता कुराहरूको जानकारी गराउन दिनलाई यस दफाको कुनै कुराले बन्देज लगाएको मानिने छैन ।

१६. **प्रसारकको काम, कर्तव्य र अधिकार** : प्रसारकको काम, कर्तव्य र अधिकार देहायबमोजिमको हुनेछ :-

(क) आफूसमक्ष प्राप्त हुन आएका सूचना, समाचार, लेख वा कार्यक्रमहरूको सत्यताबारे आवश्यक छानबीन गरी निर्धारित समयमा प्रसारण गर्ने, गराउने,

(ख) राजनैतिक रूपमा निष्पक्ष भै समाचारको सम्पादन तथा प्रसारण गर्ने गराउने,

(ग) सार्वजनिक सुरक्षा, नैतिक र सामाजिक मर्यादामा आँच आउने किसिमका कार्यक्रमहरू प्रसारण नगर्ने तथा गर्न नलगाउने,

(घ) लापरबाही वा हेलचक्र्याईंपूर्वक कुनै पनि कुराको प्रसारण गर्न वा गराउन नहुने,

(ङ) कुनै विवादास्पद विषयमा प्रसारण गर्नु परेमा पनि सम्भव भएसम्म सबै दृष्टिकोणबाट विश्लेषण गरी वस्तुस्थितिलाई नबङ्ग्याई प्रसारण गर्नुपर्ने,

(च) गलत तथा भ्रामक समाचारको सङ्कलन तथा प्रसारण गर्न नहुने,

(छ) प्रसारण संस्थाले तोकिदिएबमोजिम अन्य कार्य गर्ने ।

१७. **सजाय** : (१) कसैले दफा ६बमोजिम प्रसारण संस्थाको इजाजतपत्र नलिई वा दफा ९ बमोजिम स्वीकृति नलिई कुनै कार्यक्रम प्रसारण गरे गराएमा त्यस्तो व्यक्तिलाई तोकिएको अधिकारीको आदेशबाट ● इजाजतपत्र तथा अनुमतिपत्र दस्तुर र दफा १० बमोजिम लाग्ने शुल्क असुल गरी सो दस्तुर र शुल्क बराबरको रकम जरिबाना वा एक वर्षसम्म कैद वा दुवै सजाय हुनेछ ।
(२) कसैले यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियम विपरीत कुनै कार्यक्रम प्रसारण गरे गराएमा वा यो ऐन वा यस ऐनअन्तर्गगत बनेको नियम विपरीत कुनै कार्य गरे गराएमा त्यस्तो प्रसारण संस्था, प्रसारक वा सम्बन्धित अन्य व्यक्तिलाई तोकिएको अधिकारीले दशहजार रुपैयाँसम्म जरिवाना वा एक वर्षसम्म कैद वा दुवै सजाय गर्न सक्नेछ ।

१८. **पुनरावेदन** : यस ऐनबमोजिम नेपाल सरकार वा तोकिएको अधिकारीले दिएको आदेश वा सजायउपर चित्त नबुझ्नेले पैंतीस दिनभित्र सम्बन्धित पुनरावेदन अदालतमा पुनरावेदन दिन सक्नेछ ।

● सञ्चार सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५७ द्वारा संशोधित ।

१९. **प्रसारण संस्थाको सुरक्षा** : प्रसारण संस्थामा हुलदङ्गा वा अशान्तिबाट कुनै किसिमको हानि नोक्सानी हुने सम्भावना छ भन्ने लागेमा नेपाल सरकारले त्यस्तो ठाउँमा आवश्यक सम्झेको अवधिसम्मको लागि सुरक्षाकर्मी पठाई सुरक्षाको व्यवस्था गर्नेछ ।

२०. **अधिकार प्रत्यायोजन** : नेपाल सरकारले यस ऐनबमोजिम आफूलाई प्राप्त अधिकारमध्ये कुनै वा सबै अधिकार कुनै अधिकारी वा निकायलाई प्रत्यायोजन गर्न सक्नेछ ।

२१. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वयन गर्न नेपाल सरकारले आवश्यक नियम बनाउन सक्नेछ ।

२२. **प्रचलित कानुनबमोजिम हुने** : यस ऐनमा लेखिएका कुरामा यसै ऐनबमोजिम र अरूमा प्रचलित कानुनबमोजिम हुनेछ ।

२३. **बचाउ** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि यो ऐन प्रारम्भ हुनुअघि स्थापित नेपाल सरकारको पूर्ण वा आंशिक स्वामित्व भएका सङ्गठित संस्थाले यस ऐनबमोजिम प्रसारण संस्थाको इजाजतपत्र पाएको मानिनेछ ।

---

**द्रष्टव्यः** केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।

# राष्ट्रिय प्रसारण नियमावली, २०५२

| | |
|---|---|
| | नेपाल राजपत्रमा प्रकाशित मिति |
| संशोधन | २०५२/२/२८ |
| १) राष्ट्रिय प्रसारण (पहिलो संशोधन) नियमावली, २०६२ | २०६२/३/२९ |
| २) राष्ट्रिय प्रसारण (दोस्रो संशोधन) नियमावली, २०६३ | २०६३/३/२६ |
| ३) राष्ट्रिय प्रसारण (तेस्रो संशोधन) नियमावली, २०६५ | २०६५/१०/१ |
| ४) राष्ट्रिय प्रसारण (चौथो संशोधन) नियमावली, २०६६ | २०६६/८/२२ |

राष्ट्रिय प्रसारण ऐन, २०४९ को दफा २१ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरू बनाएकोछ :

१. **सङ्क्षिप्त नाम र प्रारम्भः** (१) यी नियमहरूको नाम "राष्ट्रिय प्रसारण नियमावली, २०५२" रहेको छ ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषाः** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस नियमावलीमा, -

(क) "ऐन" भन्नाले राष्ट्रिय प्रसारण ऐन, २०४९ सम्झनुपर्छ ।

❹(ख) "अनुमतिपत्र" भन्नाले ऐनको दफा ९ को उपदफा (२) बमोजिम स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्र स्थापना गरी कार्यक्रम प्रसारण गर्न दिइएको स्वीकृति सम्झनुपर्छ र सो शब्दले कार्यक्रम डाउनलिङ्क गर्न तथा सिग्नल वितरणको लागि नियम ६बमोजिम प्रदान गरिएको अनुमतिपत्र समेतलाई जनाउँछ ।

❹(ग) "अन्य सञ्चार माध्यम" भन्नाले स्याटेलाइट तथा केबुलबाहेकका अन्य सञ्चार माध्यम सम्झनुपर्छ र सो शब्दले मल्टिच्यानल मल्टिप्वाइन्ट डिष्ट्रिब्यूसन सिस्टम (एम.एम.डी. एस.), अप्टिकल फाइबर ट्रान्समिसन प्रणाली वा इन्टरनेट प्रोटोकलमा आधारित टेलिभिजन (आइपीटीभी) प्रणालीसमेतलाई जनाउँछ ।"

+(ग१) "डाउनलिङ्क" भन्नाले स्याटेलाइट मार्फत प्रसारण गरिएका कार्यक्रमलाई स्थानीय वितरण प्रणाली वा स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट प्रसारण गर्ने उद्देश्यले कार्यक्रम डाउनलिङ्क

---

❹ चौथो संशोधनद्वारा संशोधित ।

\+ चौथो संशोधनद्वारा थप ।

गर्ने कार्य सम्झनुपर्छ ।

+(ग२) "स्थानीय वितरण प्रणाली" भन्नाले स्याटेलाइट वा भू-उपग्रह प्रसार केन्द्रबाट प्रसारण गरिएका कार्यक्रम केबुल, मल्टिच्यानल मल्टिप्वाइन्ट डिष्ट्रिब्यूसन सिस्टम वा यस्तै अन्य किसिमका वितरण प्रणाली प्रयोग गरी कुनै खास क्षेत्रका उपभोक्तासमक्ष वितरण गर्ने प्रणाली सम्झनुपर्छ ।

+(ग३) "स्याटेलाइट वितरण प्रणाली" भन्नाले नेपालभित्र स्थापना गरिएको भू-उपग्रह प्रसार केन्द्रको माध्यमबाट उपभोक्तालाई कार्यक्रम वितरण गर्ने प्रणाली सम्झनुपर्छ र सो शब्दले केयू ब्याण्ड भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने कार्य (डाइरेक्ट टु होम) समेतलाई जनाउँछ ।"

(घ) "उपभोक्ता" भन्नाले इजाजतपत्र तथा अनुमतिपत्र प्राप्त प्रसारण संस्था वा व्यक्तिको सञ्चार सेवा उपभोग गर्ने व्यक्ति वा संस्था सम्झनुपर्छ ।

(ङ) "मन्त्रालय" भन्नाले नेपाल सरकार, सूचना तथा सञ्चार मन्त्रालय सम्झनुपर्छ ।

३. **इजाजतपत्रको लागि निवेदन दिनुपर्ने** : ऐनको दफा ५ बमोजिम स्याटेलाइट, केबुल वा अन्य सञ्चार माध्यमद्वारा कुनै कार्यक्रम प्रसार गर्न वा फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कुनै कार्यक्रम प्रसारण गर्न इजाजतपत्र लिन चाहने व्यक्ति वा सङ्गठित संस्थाले नियम ७ को उपनियम (१) बमोजिमको दस्तुरसहित क्रमशः अनुसूची - १ (क) र अनुसूची-१ (ख) बमोजिमको ढाँचामा मन्त्रालयसमक्ष निवेदन दिनुपर्नेछ ।

४. **इजाजतपत्र दिन सकिने**: नियम ३ बमोजिम इजाजतपत्रको लागि कुनै निवेदन पर्न आएमा मन्त्रालयले सो निवेदनउपर आवश्यक जाँचबुझ गर्दा निवेदकलाई इजाजतपत्र दिन हुने देखिएमा नियम ७ को उपनियम (२) बमोजिमको दस्तुर लिई स्याटेलाइट, केबुल वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्न वा फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्नको लागि क्रमश : अनुसूची-२ (क) र अनुसूची-२ (ख) बमोजिमको ढाँचामा इजाजतपत्र दिन सक्नेछ ।

+तर रेडियो फ्रिक्वेन्सी उपलब्ध गराउन नसकिने भएमा इजाजतपत्र दिइने छैन ।

**५. भू-उपग्रह प्रसारसार केन्द्रको स्थापना गरी +वा स्याटेलाइट वितरण प्रणालीको**

+ चौथो संशोधनद्वारा थप ।

**माध्यमबाट कार्यक्रम प्रसारण गर्न अनुमतिपत्र लिनुपर्ने** : ऐनको दफा ९ को उपदफा (१) बमोजिमका कुनै व्यक्ति वा सङ्गठित संस्थाले स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्र स्थापना गरी +वा स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट कुनै कार्यक्रम प्रसार गर्न चाहेमा अनुमतिपत्रको लागि नियम ७ को उपनियम (१) बमोजिमको दस्तुरसहित अनुसूची-३ बमोजिमको ढाँचामा मन्त्रालय समक्ष निवेदन दिनुपर्नेछ ।

+**५क. डाउनलिङ्क गर्न अनुमतिपत्र लिनुपर्ने**: (१) कुनै विदेशी प्रसारण संस्थाले आफ्नो मुलुकबाट प्रसारण भएको कुनै कार्यक्रम डाउनलिङ्क गरी नेपालभित्र प्रसारण गराउन चाहेमा अनुमतिपत्रको लागि नियम ७ को उपनियम (१) बमोजिमको दस्तुरसहित अनुसूची-३ (क) बमोजिमको ढाँचामा मन्त्रालय समक्ष निवेदन दिनुपर्नेछ ।

(२) यो नियम प्रारम्भ हुँदाका बखत विदेशी मुलुकबाट प्रसारण भएको कार्यक्रम डाउनलिङ्क गरी नेपालभित्र प्रसारण गर्ने विदेशी प्रसारण संस्थाले अनुमतिपत्रको लागि यो नियम प्रारम्भ भएको मितिले छ महिनाभित्र उपनियम (१) बमोजिम निवेदन दिइसक्नुपर्नेछ ।

+**५ख. सिग्नल वितरणको लागि अनुमतिपत्र लिनुपर्ने** : (१) नेपालभित्र कार्यक्रम डाउनलिङ्क गरी प्रसारण गर्न अनुमतिपत्र पाएको विदेशी प्रसारण संस्थाबाट प्रसारण भएका सशुल्क च्यानेलको सिग्नल वितरण गर्न चाहने व्यक्ति वा सङ्गठित संस्थाले अनुमतिपत्रको लागि नियम ७ को उपनियम (१) बमोजिमको दस्तुरसहित अनुसूची-३(ख) बमोजिमको ढाँचामा मन्त्रालय समक्ष निवेदन दिनुपर्नेछ ।

(२) यो नियम प्रारम्भ हुँदाका बखत विदेशी प्रसारण संस्थाबाट प्रसारण भएको सशुल्क च्यानेलको सिग्नल नेपालभित्र वितरण गरिरहेका व्यक्ति वा सङ्गठित संस्थाले अनुमतिपत्रको लागि यो नियम प्रारम्भ भएको मितिले नौ महिनाभित्र उपनियम (१) बमोजिम निवेदन दिइसक्नुपर्नेछ ।

❶**६. अनुमतिपत्र दिन सक्ने**: (१) नियम ५, ५क. वा ५ख.बमोजिम अनुमतिपत्रको लागि कुनै निवेदन पर्न आएमा मन्त्रालयले सो निवेदनउपर आवश्यक जाँचबुझ गर्नेछ र त्यसरी जाँचबुझ गर्दा निवेदकले पूरा गर्नुपर्ने सर्त पूरा गरेको र प्राविधिक रूपमा सम्भव भएमा नियम ७ को उपनियम (२) बमोजिमको दस्तुर लिई देहायबमोजिम अनुमतिपत्र दिन सक्नेछः-

(क) स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्रको स्थापना गरी वा स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट कार्यक्रम

❶ चौथो संशोधनद्वारा संशोधित ।
+ चौथो संशोधनद्वारा थप ।

प्रसारण गर्नको लागि अनुसूची-४ बमोजिमको ढाँचामा,

(ख) कार्यक्रम डाउनलिङ्क गर्नको लागि अनुसूची-४(क) बमोजिमको ढाँचामा, र

(ग) सिग्नल वितरणको लागि अनुसूची-४(ख) बमोजिमको ढाँचामा ।

(२) उपनियम (१) को खण्ड (ख) बमोजिम कार्यक्रम डाउनलिङ्क गर्नको लागि अनुमतिपत्र दिनुअघि मन्त्रालयले कार्यक्रम डाउनलिङ्क गरिने प्रसारण संस्थाबाट प्रसारण हुने कार्यक्रमको भाषा तथा विषयवस्तुसमेतलाई विचार गर्नेछ ।

(३) उपनियम (१) बमोजिम डाउनलिङ्क गर्न अनुमतिपत्र दिइसकेपछि मन्त्रालयले सो सम्बन्धी सूचना राष्ट्रिय स्तरको कुनै पत्रिकामा प्रकाशन गर्नेछ ।

७. **निवेदन र इजाजतपत्र तथा अनुमतिपत्रबापत लाग्ने दस्तुर**: (१) इजाजतपत्र तथा अनुमतिपत्रको लागि निवेदन दिँदा अनुसूची-५ (क) मा उल्लेख भएबमोजिम दस्तुर लाग्नेछ ।

(२) इजाजतपत्र तथा अनुमतिपत्र दिँदा लाग्ने दस्तुर अनुसूची -५ (ख) मा उल्लेख भएबमोजिम हुनेछ ।

८. **कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्तिले पालन गर्नुपर्ने सर्तहरू** : इजाजतपत्र तथा अनुमतिपत्र प्राप्त प्रसारण संस्था वा व्यक्तिले कार्यक्रम प्रसारण गर्दा नियम ९ को अधिनमा रही देहायका सर्तहरू पालन गर्नुपर्नेछ :

(क) कार्यक्रम प्रसारण वा वितरण गर्दा सम्बन्धित प्रसारण संस्था वा व्यक्तिको सहमति लिनुपर्ने ।

(ख) एउटा प्रसारण संस्था वा व्यक्तिले प्राप्त गरेको इजाजतपत्र वा अनुमतिपत्र अन्य कुनै व्यक्ति वा संस्थालाई बिक्री गर्न वा अन्य कुनै तरिकाले हक हस्तान्तरण गर्न नपाइने ।

(ग) इजाजतपत्र तथा अनुमतिपत्रमा उल्लेखित कार्यक्रमबाहेकका अन्य कुनै कार्यक्रम प्रसारण वा वितरण गर्न नपाइने ।

(घ) चारभन्दा कम च्यानेलबाट कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्तिले आफ्नो कार्यक्रम प्रसारण गर्ने समयको एक चौथाई र चार वा सो भन्दा बढी च्यानेलबाट कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्तिले कम्तीमा एक च्यानेलबाट नेपाल सरकारको स्वामित्वमा रहेको प्रसारण संस्थासँग सम्झौता गरी उक्त संस्थाको कार्यक्रम प्रसारण गर्नुपर्ने ।

(ङ) आपत्कालीन वा दैवी प्रकोपको समयमा मन्त्रालयबाट निर्देशन भएमा एक पटकमा पाँच मिनेटसम्म र दैनिक ६ घण्टासम्म सरकारी सूचनाहरू निःशुल्क प्रसारण गर्नुपर्ने ।

(च) युद्व वा सङ्कटकालीन समयमा मन्त्रालयले कुनै खास कार्यक्रमहरू मात्र प्रसारण गर्ने गरी निर्देशन दिएमा सोही कार्यक्रमहरू मात्र प्रसारण गर्नुपर्ने ।

(छ) कार्यक्रम प्रसारण वा वितरण गर्दा कसैको व्यक्तिगत घर कम्पाउण्ड वा सार्वजनिक जग्गा वा सडक, बिजुलीको खम्बा आदि प्रयोग गर्नुपर्ने भए सम्बन्धित व्यक्ति वा निकायसँग सम्झौता गर्नुपर्ने ।

+(छ१) सशुल्क च्यानेलको सिग्नल माग गर्ने इजाजतपत्र वा अनुमतिपत्र प्राप्त व्यक्ति वा संस्थालाई समान रूपमा सिग्नल उपलब्ध गराउनुपर्ने ।

(ज) कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्ति र उपभोक्ताबीच कार्यक्रम वितरण तथा उपभोग गर्ने सम्बन्धमा सम्झौता गर्नुपर्ने ।

(झ) कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्तिले कार्यक्रम प्रसारणको आरम्भ, बीच र अन्त्यमा आफ्नो परिचय (कल साइन) दिनुपर्ने ।

(ञ) मन्त्रालयले आवश्यक सम्झी तोकी दिएका अन्य सर्तहरू पालन गर्नुपर्ने ।

९. **प्रसारण गर्न नपाउने** : कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्तिले देहायका विषयका कुनै कार्यक्रम प्रसारण गर्न पाउने छैन :

(क) x..........

(ख) नेपालको सुरक्षा, शान्ति र व्यवस्थामा खलल पर्न जाने ।

(ग) सर्वसाधारण जनताको सदाचार, नैतिकता र सामाजिक मर्यादामा आघात पर्न जाने ।

(घ) नेपालको सार्वभौमसत्ता र अखण्डतामा आँच पुऱ्याउने ।

(ङ) विभिन्न जात, जाति, धर्म, वर्ण, क्षेत्र, सम्प्रदायका मानिसहरूबीच वैमनश्यता सिर्जना गर्ने वा सामाजिक दुर्भावना फैलाउने ।

(च) अदालतको अवहेलना हुने

(छ) सामाजिक विकृति फैलाउने किसिमका अश्लिल सामग्रीहरू ।

(ज) कुनै व्यक्तिको नाम किटान गरी कसैको मान, मर्यादा वा प्रतिष्ठामा आघात पार्ने सामग्रीहरू ।

+ चौथो संशोधनद्वारा थप ।
x चौथो संशोधनद्वारा झिकिएको ।

(झ) मन्त्रालयले समय-समयमा प्रसारण गर्न नहुने भनी तोकिदिएका अन्य सामग्रीहरू ।

+९क. **कार्यक्रम प्रसारण प्रारम्भ गर्नुपर्ने**: (१) इजाजतपत्र वा अनुमतिपत्र प्राप्त व्यक्ति वा सङ्गठित संस्थाले इजाजतपत्र वा अनुमतिपत्र पाएको मितिले बाह्र महिनाभित्र आफ्नो प्रसारण प्रारम्भ गर्नुपर्नेछ ।

(२) इजाजतपत्र वा अनुमतिपत्र प्राप्त कुनै व्यक्ति वा सङ्गठित संस्थाले उपनियम (१) बमोजिमको अवधिभित्र प्रसारण प्रारम्भ गर्न नसक्ने भएमा सोको आधार र कारणसमेत खुलाई अवधि थपको लागि त्यस्तो अवधि भुक्तान हुनुअगावै मन्त्रालय समक्ष निवेदन दिनुपर्नेछ ।

(३) उपनियम (२) बमोजिम पर्न आएको निवेदन उपर आवश्यक जाँचबुझ गर्दा अवधि थप गर्न मनासिब देखेमा मन्त्रालयले छ महिनासम्मको अवधि थप गर्न सक्नेछ ।

(४) उपनियम (१) वा (३) बमोजिमको अवधिभित्र पनि प्रसारण प्रारम्भ नगर्ने व्यक्ति वा सङ्गठित संस्थाको इजाजतपत्र वा अनुमतिपत्र स्वतः रद्द हुनेछ ।

१०. **विवरण दर्ता गर्नुपर्ने**: (१) इजाजतपत्र तथा अनुमतिपत्रको विवरण मन्त्रालयले अनुसूची-६बमोजिमको दर्ता किताबमा जनाई राख्नुपर्नेछ ।

(२) इजाजतपत्र तथा अनुमतिपत्रमा उल्लेखित कुनै विवरण नियम १५ बमोजिम बदलिएमा वा इजाजतपत्र तथा अनुमतिपत्रको नवीकरण भएमा समेत मन्त्रालयले उपनियम (१) बमोजिमको दर्ता किताबमा सो व्यहोरा जनाई राख्नुपर्नेछ ।

१०क. ✂.............

●११. **प्रसारण तथा वितरण शुल्क**: ●(१) कार्यक्रम प्रसारण वा वितरण गर्ने प्रसारण संस्था वा व्यक्तिले आफूले गरेको वार्षिक कुल आम्दानीको दुई प्रतिशत वा वार्षिक कुल नाफाको दश प्रतिशतमध्ये जुन बढी हुन्छ सो रकम प्रसारण शुल्कबापत नेपाल सरकारलाई बुझाउनुपर्नेछ ।

स्पष्टीकरणः यस उपनियमको प्रयोजनको लागि "कुल आम्दानी" भन्नाले ऋण वा सापटी लिएको रकमबाहेक प्रसारण संस्थालाई प्राप्त हुने जुनसुकै आयलाई जनाउँछ ।

(२) उपनियम (१) बमोजिम प्रसारण शुल्क बुझाउँदा सम्बन्धित प्रसारण

✂दोस्रो संशोधनद्वारा खारेज ।
● तेस्रो संशोधनद्वारा संशोधित ।
● चौथो संशोधनद्वारा संशोधित ।

संस्था वा व्यक्तिले सो आर्थिक वर्षको लेखापरीक्षण सम्पन्न गराई सोको प्रतिवेदन प्रसारण शुल्क साथ पेस गर्नुपर्नेछ ।

(३) उपनियम (१) बमोजिम प्रसारण शुल्क नबुझाउने वा उपनियम (२) बमोजिम लेखापरीक्षणको प्रतिवेदन पेस नगर्ने प्रसारण संस्था वा व्यक्तिका सम्बन्धमा नेपाल सरकारले देहायबमोजिम गर्न सक्नेछ :-

(क) नेपाल सरकारबाट उपलब्ध गराउने अनुदान वा विज्ञापनमा रोक लगाउन वा कटौती गर्न ।

(ख) सञ्चार सामग्री एवं सोसँग सम्बन्धित कच्चा पर्दाथको पैठारीमा रोक लगाउन ।

(ग) सरकारी भ्रमण दलमा सहभागी नगराउन ।

(घ) त्यस्तो संस्था वा व्यक्तिको प्रेस प्रतिनिधि प्रमाणपत्र रद्द गर्न ।

+(ङ) विदेशी मुद्रा विनिमय सुविधा नदिन ।

(४) कार्यक्रम प्रसारण गर्ने प्रसारण संस्था वा व्यक्तिले उपभोक्तासँग लिनुपर्ने शुल्क त्यस्तो संस्था वा व्यक्तिको वास्तविक रूपमा हुन गएको खर्चसमेतका आधारमा मन्त्रालयले निर्धारण गरेबमोजिम हुनेछ ।

१२. **प्रसारण समय उपलब्ध गराउन सकिने**: ऐनको दफा १३ बमोजिमको कुनै कार्यक्रम प्रसारण गर्न चाहने विदेशी प्रसारण सस्था वा सञ्चार माध्यमलाई नियम ९ को अधीनमा रही कार्यक्रम प्रसारण गर्ने समय उपलब्ध गराउन सकिनेछ ।

१३. **विज्ञापन प्रसारण गर्न समय उपलब्ध गराउन सकिने**: कसैले ऐनको दफा १४ बमोजिम कुनै विज्ञापन प्रसारण गर्न चाहेमा त्यस्तो व्यक्ति, संस्था वा निकायबाट लिइने विज्ञापन दस्तुर सो विज्ञापन प्रसारण गर्न समय उपलब्ध गराउने प्रसारण संस्था वा व्यक्तिको उक्त विज्ञापन प्रसारण गर्दा खास हुन जाने खर्च र सार्क मुलुकका प्रसारण संस्थाहरूले लिने विज्ञापन दस्तुर समेतलाई आधार मानी मन्त्रालयले तोकिदिएबमोजिम हुनेछ ।

१४. **प्रसारणसम्बन्धी कार्य बन्द गर्न सक्न**: इजाजतपत्र तथा अनुमतिपत्र प्राप्त प्रसारण संस्था वा व्यक्तिले कुनै कारणवश आफूले प्रसारण गर्दै आएको प्रसारणसम्बन्धी कार्य बन्द गर्न चाहेमा सो कुराको लिखित जानकारी एक महिनाअगावै मन्त्रालयलाई दिनुपर्नेछ र मन्त्रालयले पनि सो व्यहोरा नियम १० बमोजिमको दर्ता किताबमा जनाउनुपर्नेछ ।

+ चौथो संशोधनद्वारा थप ।

**१५. विवरण बदल्न सक्नेः** (१) कसैले इजाजतपत्र तथा अनुमतिपत्रमा उल्लेखित कुनै विवरण बदल्न चाहेमा पाँचसय रुपैयाँ दस्तुरसहित अनुसूची-७ बमोजिमको ढाँचामा मन्त्रालयसमक्ष निवेदन दिनुपर्नेछ ।

(२) उपनियम (१) बमोजिम विवरण बदल्न दिएको निवेदनको व्यहोरा मुनासिब देखिएमा मन्त्रालयले निवेदनबमोजिमको विवरण बदल्न सक्नेछ ।

**१६. इजाजतपत्र तथा अनुमतिपत्रको अवधि र नवीकरण दस्तुरः** )(१) इजाजतपत्र तथा अनुमतिपत्रको अवधि एक आर्थिक वर्षको हुनेछ ।

❸(२) इजाजतपत्र वा अनुमतिपत्र नवीकरण गराउन चाहने प्रसारण संस्था वा व्यक्तिले इजाजतपत्र वा अनुमतिपत्र बहाल रहने अवधि भुक्तान नहुँदै नियम ११ बमोजिम बुझाउनुपर्ने अघिल्लो आर्थिक वर्षको प्रसारण तथा वितरण शुल्क बुझाएको प्रमाण संलग्न गरी इजाजतपत्र वा अनुमतिपत्र नवीकरणको लागि अनुसूची-८ बमोजिमको ढाँचामा मन्त्रालयसमक्ष निवेदन दिनुपर्नेछ ।

❹(३) उपनियम (२) बमोजिम इजाजतपत्र वा अनुमतिपत्र नवीकरणको लागि कुनै निवेदन पर्न आएमा मन्त्रालयले इजाजतपत्र वा अनुमतिपत्र दिँदा लाग्ने दस्तुरको दश प्रतिशतले हुने रकम लिई त्यस्तो इजाजतपत्र वा अनुमतिपत्र नवीकरण गरी दिन सक्नेछ ।

(४) उपनियम (२) बमोजिमको म्याद भुक्तान भएपछि इजाजतपत्र वा अनुमतिपत्र नवीकरण गर्न आएमा पहिलो एक महिनासम्मको लागि दश प्रतिशत, दोस्रो एक महिनासम्म बीस प्रतिशत, तेस्रो एक महिनासम्म तीस प्रतिशत, चौथो एक महिनासम्म चालीस प्रतिशत, पाँचौ एक महिनासम्म पचास प्रतिशत र छैठौं एक महिनासम्म शत प्रतिशत जरिबानासमेत लिई मन्त्रालयले त्यस्तो इजाजतपत्र तथा अनुमतिपत्र नवीकरण गरी दिन सक्नेछ । ६ महिनाभित्र पनि इजाजतपत्र वा अनुमतिपत्र नवीकरण नगराएमा त्यस्तो इजाजतपत्र वा अनुमतिपत्र स्वत : रद्द हुनेछ ।

☑(५) यस नियममा अन्यत्र जुनसुकै कुरा लेखिएको भएतापनि इजाजतपत्र वा अनुमतिपत्र प्राप्त कुनै प्रसारण संस्था वा व्यक्तिले बढीमा ५ वर्षको लागि एकै पटक इजाजतपत्र वा अनुमतिपत्र नवीकरण गर्न चाही मन्त्रालयसमक्ष निवेदन दिएमा मन्त्रालयले प्रत्येक वर्षको लागि उपनियम (३) बमोजिमको दस्तुर लिई त्यस्तो इजाजतपत्र वा अनुमतिपत्र नवीकरण गरिदिन सक्नेछ । यसरी एक वर्षभन्दा बढी अवधिको लागि एकैपटक इजाजतपत्र वा अनुमतिपत्र नवीकरण गर्दा लाग्ने दस्तुरमा पच्चीस प्रतिशत छुट हुनेछ ।

---

❸ तेस्रो संशोधनद्वारा संशोधित ।
❹ चौथो संशोधनद्वारा संशोधित ।
☑ तेस्रो संशोधनद्वारा थप ।

[+]**१६क. विदेशी मुद्रा विनिमयका लागि सिफारिस गर्न सक्ने**: कुनै प्रसारण संस्थालाई आवश्यकपर्ने उपकरण विदेशबाट आयात गर्नुपर्ने भएमा वा कुनै प्रसारण संस्था विदेशी प्रसारण संस्थासँग आबद्ध हुँदा वा त्यस्तो संस्थासँग सिग्नल वितरणसम्बन्धमा सम्झौता गर्दा विदेशी मुद्रा आवश्यकपर्ने भएमा त्यस्तो मुद्रा प्रचलित खुल्ला विनिमय दरमा उपलब्ध गराउन मन्त्रालयले सम्बन्धित निकायमा सिफारिस गर्न सक्नेछ ।

**१७. इजाजतपत्र वा अनुमतिपत्रको प्रतिलिपि दिने**: इजाजतपत्र वा अनुमतिपत्र हराएमा वा दैवी प्रकोप परी मासिएमा वा पुरानो भई च्यातिएमा वा नवीकरण गर्ने ठाउँ समाप्त भएको कारण देखाई कसैले प्रतिलिपि माग गरेमा मन्त्रालयले पाँचसय रुपैयाँ दस्तुर लिई त्यस्तो इजाजतपत्र वा अनुमतिपत्रको प्रतिलिपि दिन सक्नेछ ।

**१८. निरीक्षण तथा छानबीन गर्न सक्ने**: (१) ऐन, यस नियमावली वा इजाजतपत्र तथा अनुमतिपत्रमा उल्लेखित सर्तहरूबमोजिम कार्यक्रम प्रसारण गरे वा नगरेको सम्बन्धमा मन्त्रालयले वा मन्त्रालयले तोकिदिएको अधिकारीले प्रसारणसम्बन्धी संस्थाको निरीक्षण तथा छानबीन गर्न गराउन सक्नेछ ।

(२) उपनियम (१) बमोजिम निरीक्षण तथा छानबीन गर्दा सर्तबमोजिम कार्यक्रम प्रसारण गरेको नदेखिएमा मन्त्रालयले अवस्थाअनुसार एकपटक सर्तबमोजिम काम गर्न मौका दिन सक्नेछ र त्यसरी मौका दिँदा पनि सर्तबमोजिम काम नगरेको भन्ने पुन : गरिएको निरीक्षण तथा छानबीनबाट देखिएमा मन्त्रालयले त्यस्तो प्रसारण संस्था वा व्यक्तिले प्राप्त गरेको इजाजतपत्र वा अनुमतिपत्र रद्द गर्न सक्नेछ ।

[+](३) कसैले ऐन वा यस नियमावलीबमोजिम इजाजतपत्र वा अनुमतिपत्र नलिई अनधिकृत रूपमा कुनै कार्यक्रम प्रसारण वा वितरण गरेको देखिएमा मन्त्रालयले त्यस्तो कार्यक्रम प्रसारण वा वितरण गर्न प्रयोग गरेको यन्त्र वा उपकरण आफ्नो नियन्त्रणमा लिन वा सो यन्त्र वा उपकरण प्रयोग गर्न नसक्ने गरी आवश्यक व्यवस्था गर्न सक्नेछ ।

[+](४) यस नियमबमोजिम मन्त्रालय वा मन्त्रालयले तोकिदिएको अधिकारीबाट गरिने निरीक्षण तथा छानबीनका क्रममा आवश्यक सहयोग पुऱ्याउनु वा प्रसारण क्षेत्रभित्र मन्त्रालयले तोकेको स्थानमा कुनै कार्यक्रम हेर्न वा सुन्न सकिने व्यवस्था गर्नु सम्बन्धित प्रसारण संस्थाको कर्तव्य हुनेछ ।

**१९. इजाजतपत्र वा अनुमतिपत्र अनुमतिपत्र प्राप्त प्रसारण संस्था वा व्यक्ति**

+ चौथो संशोधनद्वारा थप ।

**जवाफदेही हुने**: ऐन वा यस नियमावलीबमोजिम कसैले कुनै कार्यक्रम प्रसारण गरेबाट कसैको हक, हित, इज्जत वा प्रतिष्ठामा असर पर्न गएमा त्यसको जवाफदेही सम्बन्धित इजाजतपत्र वा अनुमतिपत्र प्राप्त प्रसारण संस्था वा व्यक्ति नै हुनेछ ।

२०. **समिति गठन गर्न सक्ने**: ऐन वा यस नियमावलीको उद्देश्य पूर्ति गर्न वा मन्त्रालयले गर्ने कामको सम्बन्धमा सरसल्लाह र सुझाव दिन मन्त्रालयले आवश्यक ठानेमा सञ्चार क्षेत्रमा विशेष ज्ञान भएका व्यक्तिहरू रहेको समिति गठन गर्न सक्नेछ । त्यस्तो समितिको गठन, काम, कर्तव्य र अधिकार तथा अन्य कार्यविधि सो समिति गठन गर्दाको अवस्थामा तोकिदिएबमोजिम हुनेछ ।

⊕२१. **सजाय गर्ने अधिकारी**: (१) ऐनको दफा १७ बमोजिमको सजाय गर्ने अधिकार मन्त्रालयको सचिवलाई हुनेछ ।
(२) उपनियम (१) बमोजिम सजायको आदेश गर्नुअघि सम्बन्धित पक्षलाई सफाइको लागि मनासिव मौका दिनुपर्नेछ ।

+२१क. **दस्तुर वा प्रसारण तथा वितरण शुल्क छुट दिन सक्ने**: यस नियमावलीमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी नेपाल सरकारको पूर्ण स्वामित्वमा रहेका प्रसारण संस्थालाई यस नियमावलीबमोजिम लाग्ने इजाजतपत्र दस्तुर, प्रसारण तथा वितरण शुल्क र नवीकरण दस्तुर पूर्ण वा आंशिक रूपमा छुट दिन सक्नेछ ।

२२. **अनुसूचीमा हेरफेर तथा थपघट गर्न सक्ने**: मन्त्रालयले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी अनुसूचीमा हेरफेर तथा थपघट गर्न सक्नेछ ।

---
⊕ चौथो संशोधनद्वारा संशोधित ।
+ चौथो संशोधनद्वारा थप ।

## अनसूची – १ (क)

(नियम ३ सँग सम्बन्धित)

## स्याटेलाइट, केबुल वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्ने इजाजतपत्रको लागि दिइने निवेदन

श्री ............................

राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ३ बमोजिम स्याटेलाइट। केबुल वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्ने इजाजतपत्र पाउनको लागि देहायका विवरणहरू खुलाई यो निवेदन गरेको छु/छौं।

१. निवेदकको,

| (क) स्थायी ठेगाना - | (ख) अस्थायी ठेगाना - |
|---|---|
| जिल्ला :- | जिल्ला :- |
| नगरपालिका। गा.वि.स. नगरपालिका। | गा.वि.स. |
| वडा नं. :- | वडा नं. :- |
| गाउँ। टोल :- | गाउँ। टोल :- |
| फोन नं. :- | फोन नं. :- |
| * घर नं :- | * घर नं :- |
| * फ्याक्स नं :- | * फ्याक्स नं :- |
| * नागरिकता लिएको जिल्ला | * इमेल ठेगाना :- |
| * मिति र नागरिकता नं :- | |
| * इमेल ठेगाना :- | |

२. निवेदकको नागरिकता :-

३. प्रसारण संस्था वा व्यक्तिको
   (क) नाम :
   (ख) आर्थिक स्थिति (स्थिर तथा चालु पुँजी)
   (ग) अनुभव :-
   (घ) प्राविधिक दक्षता :-

४. प्रसारण गरिने स्थान :-

५. प्रसारण हुने क्षेत्र ).......... :-

६. प्रसारण सुरु हुने मिति :-

७. प्रसारणको माध्यम :-

८. प्रसारणको क्षमता :-

* नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा थप।

९. प्रसारण गर्दा प्रयोग गरिने फ्रिक्वेन्सी र च्यानेल :-

१०. प्रसारण गर्दा प्रयोग गरिने उपकरणहरू :-

११. प्रसारणसम्बन्धमा उपभोक्ता तथा अन्य व्यक्ति वा निकायसँग गरिएको सम्झौताः-

१२. प्रसारणमा प्रयोग हुने भाषा :-

१३. प्रसारणको ☒........समयावधि :-

१४. प्रसारण गरिने कार्यक्रमहरू :-

माथि लेखिएको व्यहोरा ठीक साँचो छ, झुट्टा ठहरे कानुनबमोजिम सहुँला बुझाउँला ।

निवेदकको :-

सही :-

नाम :-

मिति :-

☜ द्रष्टव्य :- निवेदन साथ देहायको कागजात संलग्न गर्नुपर्नेछ :-

- सम्बन्धित विषयमा अनुभवी तथा ख्याती प्राप्त व्यक्ति वा मान्यता प्राप्त अनुसन्धनात्मक संस्थाबाट आफूले इजाजतपत्र लिन खोजेको विषयको आर्थिक, प्राविधिक तथा व्यावसायिक पक्षमा विस्तृत अध्ययन गर्न लगाई तयार गरेको प्रतिवेदन । तर केबुल टेलिभिजन माध्यमद्वारा कार्यक्रम प्रसारण गर्न चाहने निवेदकले मन्त्रालयले तोकेबमोजिमको ढाँचाको प्रतिवेदन ।
- प्रसारण संस्था दर्ताको प्रमाणपत्र सम्बन्धित विधान तथा सञ्चालकहरूको नागरिकताको प्रमाणपत्रको प्रतिलिपि ।
- निवेदन दस्तुर रु २०००।- (दुई हजार) बुझाएको नगदी रसिद वा तोकिएको राजश्व खातामा जम्मा गरेको दोस्रो प्रति भौचर ।
- प्रसारण केन्द्र (Headedd) रहने ठाउँको विवरण र प्रसारण संस्थाको प्रसारण पहुँच देखाएको नक्सा ।
- प्रसारणमा गरिने च्यानेलहरूको सङ्ख्या, प्रत्येक च्यानलको नाम, प्रकार (सःशुल्क), (निःशुल्क) तथा स्याटेलाइट रिसिभरको विवरणको कागजात ।
- स्याटेलाइट, रिसिभर, मोडुलेटर र नेटवर्क डिटेल्स ।
- मन्त्रालयले समय समयमा तोकिदिएको अन्य कागजात ।

☒ नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा झिकिएको ।

☜ नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा संशोधित ।

## अनुसूची – १ (ख)

(नियम ३ सँग सम्बन्धित)

## फ्रिवेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्ने इजाजतपत्रको लागि दिइने निवेदन

श्री ........................

राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ३ बमोजिम फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्ने इजाजतपत्र पाउनको लागि देहायका विवरणहरू खुलाई यो निवेदन गरेको छु । छौं ।

१. निवेदकको,

| (क) स्थायी ठेगाना - | (ख) अस्थायी ठेगाना - |
|---|---|
| जिल्ला :- | जिल्ला :- |
| नगरपालिका । गा.वि.स. | नगरपालिका । गा.वि.स. |
| वडा नं. :- | वडा नं. :- |
| गाउँ । टोल :- | गाउँ । टोल :- |

२. निवेदकको नागरिकता :-

३. प्रसारण संस्था वा व्यक्तिको

(क) नाम :

(ख) आर्थिक स्थिति (स्थिर तथा चालु पुँजी)

(ग) अनुभव :-

(घ) प्राविधिक दक्षता :-

४. प्रसारण प्रणाली स्थापना हुने ठाउँ र प्रसारण केन्द्र :-

५. प्रसारण हुने क्षेत्र र जनसङ्ख्या :-

६. प्रसारण सुरु हुने मिति :-

७. प्रसारणको माध्यम :-

८. प्रसारणको क्षमता :-

९. प्रसारण गर्दा प्रयोग गरिने

(क) फ्रिक्वेन्सी (ख) बैण्ड

(ग) च्यानेल (घ) ट्रान्समिटर

(ङ) एण्टेना

१०. प्रसारण गर्दा प्रयोग गरिने उपकरणहरू :-

११. प्रसारण सम्बन्धमा उपभोक्ता तथा अन्य व्यक्ति वा निकायसँग गरिएको सम्झौता:-

१२. प्रसारणमा प्रयोग हुने भाषा :-

१३. प्रसारणको समय र समयावधि :-

१४. प्रसारण गरिने कार्यक्रमहरू :-

माथि लेखिएको व्यहोरा ठीक साँचो छ, झुट्टा ठहरे कानुनबमोजिम सहुँला बुझाउँला ।

निवेदकको :-

सही :-

नाम :-

मिति :-

द्रष्टव्य :-निवेदकले सम्बन्धित विषयमा अनुभवी तथा ख्यातिप्राप्त व्यक्ति वा मान्यताप्राप्त अनुसन्धानात्मक संस्थाबाट आफूले इजाजतपत्र लिन खोजेको विषयको आर्थिक, प्राविधिक तथा व्यावसायिक पक्षमा विस्तृत अध्ययन गर्न लगाई सोको प्रतिवेदन निवेदनसाथ संलग्न गर्नुपर्नेछ ।

## अनुसूची – २ (क)

(नियम ४ सँग सम्बन्धित)

**स्याटेलाइट, केबुल वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्ने इजाजतपत्र इजाजतपत्र नं. :–**

१. इजाजतपत्र पाउने व्यक्ति वा संस्थानको नाम :-

२. ठेगाना :-

(क) स्थायी ठेगाना -
जिल्ला :-
नगरपालिका । गा.वि.स.
वडा नं. :-
गाउँ । टोल :-
फोन नं. :-

(ख) अस्थायी ठेगाना -
जिल्ला :-
नगरपालिका । गा.वि.स.
वडा नं. :-
गाउँ । टोल :-
फोन नं. :-

३. प्रसारण संस्था वा व्यक्तिको नाम :-

४. प्रसारणको माध्यम :-

५. प्रसारणको क्षमता

६. प्रसारण गर्दा प्रयोग गरिने
(क) फ्रिक्वेन्सी :- (ख) च्यानेल :-

७. प्रसारण गरिने स्थान :-

८. प्रसारण हुने क्षेत्र ●.....:-

९. प्रसारण सुरु हुने मिति :-

१०. प्रसारणमा प्रयोग हुने भाषा :-

११. प्रसारणको ●.......समयावधि :-

१२. प्रसारण गरिने कार्यक्रमहरू :-

१३. इजाजतपत्र बहाल रहने मिति :-

☙१४. राष्ट्रिय प्रसारण ऐन, २०४९ तथा राष्ट्रिय प्रसारण नियमावली,२०५२ मा तोकिएका सर्तका अतिरिक्त मन्त्रालयले समय समयमा तोकिदिएका अन्य सर्तहरूको समेत पालना गरी केबुल प्रसारण गर्नुपर्नेछ ।

● नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा झिकिएको ।
☙ नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा संशोधित ।

कार्यालयको छाप इजाजतपत्र दिने अधिकारीको

सही :-

नाम :-

दर्जा :-

कार्यालय :-

मिति :-

नवीकरणको विवरण

| आर्थिक वर्ष | नवीकरण दस्तुर तथा अन्य विवरण | नवीकरण मिति | नवीकरण गर्ने अधिकारीको दस्तखत |
|---|---|---|---|
| | | | |

● नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा झिकिएको ।
☞ नेपाल राजपत्र मिति २०६४।११।६ को सूचनाद्वारा संशोधित ।

**अनुसूची – २ (ख)**
(नियम ४ सँग सम्बन्धित)
**फ्रिवेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्ने इजाजतपत्र**

इजाजतपत्र नं. :-
१. इजाजतपत्र पाउने व्यक्ति वा संस्थाको नाम :-
२. ठेगाना :-

| | |
|---|---|
| (क) स्थायी ठेगाना - | (ख) अस्थायी ठेगाना - |
| जिल्ला :- | जिल्ला :- |
| नगरपालिका । गा.वि.स. | नगरपालिका । गा.वि.स. |
| वडा नं. :- | वडा नं. :- |
| गाउँ । टोल :- | गाउँ । टोल :- |
| फोन नं. :- | फोन नं. :- |

३. प्रसारण संस्था वा व्यक्तिको नाम :-
४. प्रसारणको माध्यम :-
५. प्रसारणको क्षमता
६. प्रसारण गर्दा प्रयोग गरिने

| | |
|---|---|
| (क) फ्रिक्वेन्सी :- | (ख) बैण्ड :- |
| (ग) च्यानेल :- | (घ) ट्रान्समिटर :- |
| (ङ) एण्टेना :- | |

७. प्रसारण प्रणाली स्थापना हुने ठाउँ र प्रसारण केन्द्र :-
८. प्रसारण हुने क्षेत्र र जनसङ्ख्या :-
९. प्रसारण सुरु हुने मिति :-
१०. प्रसारणमा प्रयोग हुने भाषा :-
११. प्रसारणको समय र समयावधि :-
१२. प्रसारण गरिने कार्यक्रमहरू :-
१३. इजाजतपत्र बहाल रहने मिति :-
१४. अन्य सर्तहरू :-
(क)
(ख)
(ग)

कार्यालयको छाप इजाजतपत्र दिने अधिकारीको :-

सही :-
नाम :-
दर्जा :-
कार्यालय :-
मिति :-

नवीकरणको विवरण

| आर्थिक वर्ष | नवीकरण दस्तुर तथा अन्य विवरण | नवीकरण मिति | नवीकरण गर्ने अधिकारीको दस्तखत |
|---|---|---|---|
| | | | |

## ❁अनुसूची- ३

(नियम ५ सँग सम्बन्धित)

स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्रको स्थापना गरी वा स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट कार्यक्रम प्रसारण गर्ने अनुमतिपत्रको लागि दिइने निवेदेदन

श्री..................

राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ५ बमोजिम स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्रको स्थापना गरी वा स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट कार्यक्रम प्रसारण गर्ने अनुमतिपत्र पाउनको लागि देहायका विवरण खुलाई यो निवेदन गरेको छु/छौं ।

१. निवेदकको,-

(क) नाम:

| (ख) स्थायी ठेगाना - | (ग) अस्थायी ठेगाना - |
|---|---|
| जिल्ला : - | जिल्ला : |
| नगरपालिका/गा.वि.स :- | नगरपालिका/गा.वि.स.:- |
| वडा नं :- | वडा नं :- |
| गाउँ/ टोल :- | गाउँ/ टोल :- |
| घर नं:- | घर नं:- |
| फोन नं :- | फोन नं :- |
| फ्याक्स नं :- | फ्याक्स नं :- |
| इमेल :- | इमेल :- |

(घ) निवेदक व्यक्ति भए नागरिकता नम्बर र संस्था भए संस्था दर्ता नम्बर:-

(ङ) आर्थिक स्थिति (स्थिर तथा चालु पुँजी):-

(च) अनुभव :-

(छ) प्राविधिक दक्षता :-

२. प्रसारणको लागि गरिने लगानी,-

(क) प्रस्तावित लगानी:-

(ख) लगानीको स्रोत :-

३. प्रसारणबाट हुने आय र आयको स्रोत :-

४. कार्यक्रम प्रसारण तथा वितरणको माध्यम

❁ चौथो संशोधनद्वारा संशोधित ।

(क) स्याटेलाइटसँग अपलिङ्क गर्ने :-

(ख) वितरण गर्ने प्रणाली :-

(ग) अन्य तरिकाबाटः-

५. भू-उपग्रह प्रसार केन्द्रको विवरण,-

(क) लिङ्क गरिने स्याटेलाइट/फुटप्रिन्ट :-

(ख) प्रयोग गरिने फ्रिक्वेन्सी व्याण्ड/फ्रिक्वेन्सी/एन्टेनासम्बन्धी विवरण :-

(ग) प्रसारण वितरण गर्ने सतह माध्यम :-

(घ) प्रसारण वितरण गर्ने च्यानेल सङ्ख्या/ विवरण :-

६. प्रसारण केन्द्र स्थापना गरिने ठाउँ :-

७. प्रसारण हुने क्षेत्र :-

८. प्रसारण प्रारम्भ हुने मिति :-

९. प्रसारणमा प्रयोग हुने च्यानेल र भाषा :-

१०. प्रसारणको समय र समयावधि :-

११. प्रसारण गरिने कार्यक्रमहरू :-

१२. उपकरण आयात गरिने मुलुकको नाम :-

१३. अन्य विवरण,-

(क)

(ख)

(ग)

निवेदकको,-

सहीः-

निवेदक संस्था भए संस्थाको छाप

नाम :-

मिति :-

द्रष्टव्य : निवेदकले आफूले अनुमतिपत्र लिन खोजेको विषयको आर्थिक, प्राविधिक तथा व्यावसायिक पक्षमा विस्तृत अध्ययन गर्न लगाई सोको प्रतिवेदन निवेदनसाथ संलग्न गर्नुपर्नेछ ।

## ▷अनुसूची–३(क)

(नियम ५क.सँग सम्बन्धित)

फाराम नं (क)

## डाउलिङ्क गर्ने अनुमतिपत्रको लागि दिइने निवेदन

श्री..................

राष्ट्रिय प्रसारण नियमावली,२०५२ को नियम ५क.बमोजिम डाउनलिङ्क गरी नेपालभित्र कार्यक्रम प्रसारण गर्ने अनुमतिपत्र पाउनको लागि देहायका विवरण खुलाई यो निवेदन गरेको छु/छौं ।

१. निवेदकको,-

(क) नामः-

| (ख) स्थायी ठेगाना - | (ग) अस्थायी ठेगाना - |
|---|---|
| जिल्ला : - | जिल्ला : |
| नगरपालिका/गा.वि.स :- | नगरपालिका/गा.वि.स.:- |
| वडा नं :- | वडा नं :- |
| गाउँ/ टोल :- | गाउँ/ टोल :- |
| घर नंः- | घर नंः- |
| फोन नं. :- | फोन नं :- |
| फ्याक्स नं. :- | फ्याक्स नं :- |
| इमेल :- | इमेल :- |

(घ) निवेदक व्यक्ति भए नागरिकता नम्बर र संस्था भए संस्था दर्ता नम्बरः-

२. कार्यक्रम प्रसारण तथा वितरणको माध्यम,-

(क) स्याटेलाइटसँग अपलिङ्क गर्ने (डाइरेक्ट टु होम):-

(ख) केबुलः-

(ग) अन्य तरिकाबाटः-

३. डाउनलिङ्क गर्ने च्यानेलको विवरण,-

(क) लिङ्क गरिने स्याटेलाइट/फुटप्रिन्ट र च्यानल प्रसारण गर्ने देशः-

(ख) डाउनलिङ्क गरी प्रसारण वितरण गर्ने सतह माध्यम :-

(ग) प्रसारण वितरण गर्ने च्यानेल सङ्ख्या/विवरण :-

४. प्रयोग गरिने डाउनलिङ्क फ्रिक्वेन्सी र एन्टेनासम्बन्धी विवरण :-

५. डाउनलिङ्क गरिने ठाउँ :-

---

▷ चौथो संशोधनद्वारा थप भई नेपाल राजपत्र मिति २०६७।६।४ को सूचनाद्वारा संशोधित ।

६. प्रसारण हुने क्षेत्र :-
७. डाउनलिङ्क गरिने मिति :-
८. च्यानेलमा प्रयोग हुने भाषा :-
९. प्रसारणको समय र समयावधि :-
१०. प्रसारण गरिने कार्यक्रमहरू :-
११. अन्य विवरण,-
(क)
(ख)
(ग)

निवेदकको,-

सही:-

निवेदक संस्था भए संस्थाको छाप

नाम :-

मिति :-

फाराम नं (ख)

**Application for Down-link License**

To,
The Ministry of Information and Communications
Singhadurbar, Kathmandu, Nepal.

We hereby apply, under the provisions of Rule 5A of National Broadcasting Regulation, 2052 (1995) with the following details, for the Down-link License to broadcast our programs within the territory of Nepal.

1. Applicant's

(a) Name:

| (b) Permanent Address: | (c)Temporary Address: |
|---|---|
| District: | District: |
| Municipality/VDC: | Municipality/VDC |
| Ward No: | Ward No: |
| Area/location: | Area/location: |
| House No: | House No: |

| | |
|---|---|
| Phone No: | Phone No: |
| Fax No: | Fax No: |
| Email: | Email: |

(d) Citizenship Number (in case of person):
Company Registration No. (in case of company):

2. Program transmission and Distribution Medium:
   (a) Direct- to-home with satellite up-linking:
   (b) Ground Cable:
   (c) Other modes:
3. Description of down-linking channels:
   (a) Up-linked Satellite/Footprint and country transmitting channel:
   (b) Medium of ground distribution for down- linking channel:
   (c) Number of channels to be distributed:
4. Description of down-linked Frequency and Antenna:
5. Down-linking System Place:
6. Down-linked channel distribution area:
7. Down-linking date:
8. Language used in channel:
9. Broadcasting Time and duration:
10. Program to be transmitted:
11. Other details:

(a)
(b)
(c)

| | **Applicant's** |
|---|---|
| | Signature: |
| seal | Name: |
| (If the applicant is a Company) | Date: |

## +अनुसूची–३(ख)
(नियम ५ख. को उपनियम (१) सँग सम्बन्धित)
## सिग्नल वितरण गर्ने अनुमतिपत्रको लागि दिइने निवेदन

श्री..................

राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ५ख.बमोजिम सिग्नल वितरण गर्ने अनुमतिपत्र पाउनको लागि देहायका विवरण खुलाई यो निवेदन गरेको छु/छौं ।

१. निवेदकको,-

(क) नामः-

| (ख) स्थायी ठेगाना - | (ग) अस्थायी ठेगाना - |
|---|---|
| जिल्ला : - | जिल्ला : |
| नगरपालिका/गा.वि.स :- | नगरपालिका/गा.वि.स.:- |
| वडा नं :- | वडा नं :- |
| गाउँ/ टोल :- | गाउँ/ टोल :- |
| घर नंः- | घर नंः- |
| फोन नं :- | फोन नं :- |
| फ्याक्स नं :- | फ्याक्स नं :- |
| इमेल :- | इमेल :- |

(घ) निवेदक व्यक्ति भए नागरिकता नम्बर र संस्था भए संस्था दर्ता नम्बरः-

(ङ) आर्थिक स्थिति (स्थिर तथा चालु पुँजी):-

(च) अनुभव :-

२. कार्यालयको,-

ठेगाना :-

टेलिफोन नं :-

फ्याक्स नं :-

इमेल :-

३. प्रसारणबाट हुने आय र आयको स्रोत :-

४. कार्यक्रम प्रसारण तथा वितरणको माध्यम

(क) स्याटेलाइटसँग अपलिङ्क गर्ने (डाइरेक्ट टु होम):-

(ख) केबुल :-

+ चौथो संशोधनद्वारा थप ।

(ग) अन्य तरिकाबाटः-

५. सिग्नल वितरण गरिने च्यानेलको विवरण,-

(क) लिङ्क गरिने स्याटेलाइट/फुटप्रिन्ट र च्यानल प्रसारण गर्ने देशः-

(ख) प्रयोग गरिने फ्रिक्वेन्सी व्याण्ड/डाउनलिङ्क फ्रिक्वेन्सीसम्बन्धी विवरण :-

(ग) डाउनलिङ्क गरी प्रसारण वितरण गर्ने सतह माध्यम :-

(घ) डाउनलिङ्क गर्ने च्यानेलहरूको सङ्ख्या र नाम :-

६. प्रसारण हुने क्षेत्रः-

७. सिग्लन वितरण सुरु हुने मिति :-

८. च्यानेलमा प्रयोग हुने भाषा :-

९. प्रसारणको समय र समयावधि :-

१०. प्रसारण गरिने कार्यक्रमहरू :-

११. अन्य विवरण :-

(क)

(ख)

(ग)

१२. संलग्न गर्नुपर्ने कागजातः

सिग्नल वितरणसम्बन्धमा विदेशी प्रसारण संस्थासँग भएको सम्झौताको प्रतिलिपि ।

निवेदकको,-

सहीः-

निवेदक संस्था भए संस्थाको छाप

नाम :-

मिति :-

## ❖अनुसूची–४

(नियम ६ को उपनियम (१) को खण्ड (क) सँग सम्बन्धित)

स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्रको स्थापना गरी वा स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट कार्यक्रम प्रसारण गर्ने

### अनुमुमतिपत्र

अनुमतिपत्र नं :-

१. अनुमतिपत्र पाउने व्यक्ति वा संस्थाको नाम :-

२. ठेगाना :-

| | |
|---|---|
| (क) स्थायीः- | (ख) अस्थायीः- |
| जिल्ला :- | जिल्ला :- |
| नगरपालिका/गा.वि.स. :- | नगरपालिका/गा.वि.स. :- |
| वडा नं : - | वडा नं : - |
| गाउँ/टोल :- | गाउँ/टोल :- |
| फोन नं :- | फोन नं :- |

३. अनुमतिपत्र पाउने व्यक्ति भए नागरिकता नम्बर र संस्था भए संस्था दर्ता नम्बरः-

४. भू-उपग्रह प्रसार केन्द्रको :-

(क) लिङ्क गरिने स्याटेलाइट/फुट प्रिन्टः-

(ख) प्रयोग गरिने फ्रिक्वेन्सी ब्याण्ड/फ्रिक्वेन्सीः-

(ग) प्रसारण वितरण गर्ने सतह माध्यमः-

(घ) एण्टेनाः-

(ङ) प्रसारण गर्ने च्यानेल सङ्ख्या/विवरण :-

५. प्रसारणको माध्यम :-

६. प्रसारण केन्द्र स्थापना गर्ने ठाउँ :-

७. प्रसारण हुने क्षेत्र :-

८. प्रसारण प्रारम्भ हुने मिति :-

९. प्रसारणमा प्रयोग हुने च्यानेल र भाषा :-

१०. प्रसारणको समय र समयावधि :-

११. प्रसारण गरिने कार्यक्रम :-

❖ चौथो संशोधनद्वारा संशोधित ।

१२. अनुमतिपत्र बहाल रहने अवधि :-

१३. अन्य सर्तहरू :-

(क)

(ख)

(ग)

अनुमतिपत्र दिने अधिकारीको,-

कार्यालयको छाप

सही :-

नाम : -

दर्जा :-

मिति :-

कार्यालय :-

## ▷अनुसूची–४(क) फाराम नं (क)

(नियम ६ को उपनियम (१) को खण्ड (ख) सँग सम्बन्धित)

डाउनलिङ्क गर्ने

**अनुमुमतिपत्र**

अनुमतिपत्र नं :-

१. अनुमतिपत्र पाउने व्यक्ति वा संस्थाको नाम :-

२. ठेगाना :-

| (क) स्थायी :- | (ख) अस्थायी :- |
| --- | --- |
| जिल्ला : - | जिल्ला : |
| नगरपालिका/गा.वि.स :- | नगरपालिका/गा.वि.स.:- |
| वडा नं :- | वडा नं :- |
| गाउँ/टोल :- | गाउँ/टोल :- |
| घर नं:- | घर नं:- |
| फोन नं :- | फोन नं :- |
| फ्याक्स नं :- | फ्याक्स नं :- |
| इमेल :- | इमेल :- |

३. अनुमतिपत्र पाउने व्यक्ति भए नागरिकता नम्बर र संस्था भए संस्था दर्ता नम्बर:-

४. कार्यक्रम प्रसारण तथा वितरणको माध्यम:-

(क) स्याटेलाइटसँग अपलिङ्क गर्ने (डाइरेक्ट टु होम):-

(ख) केबुल :-

(ग) अन्य तरिकाबाट:-

५. डाउनलिङ्क गर्ने च्यानेलको विवरण :-

(क) लिङ्क गरिने स्याटेलाइट/फ्रुटप्रिन्ट र च्यानल प्रसारण गर्ने देश:-

(ख) डाउनलिङ्क गरी प्रसारण वितरण गर्ने सतह माध्यम :-

(ग) प्रसारण वितरण गर्ने च्यानल सङ्ख्या/विवरण :-

६. प्रयोग गरिने डाउनलिङ्क फ्रिक्वेन्सी र एन्टेनासम्बन्धी विवरण :-

७. डाउनलिङ्क गर्ने प्रणाली :-

८. डाउनलिङ्क गरिने ठाउँ :-

▷ चौथो संशोधनद्वारा थप भई नेपाल राजपत्र मिति २०६७।६।४ को सूचनाद्वारा संशोधित ।

९. डाउनलिङ्क च्यानेल वितरण गर्ने क्षेत्र :-
१०. डाउनलिङ्क गरिने मिति :-
११. च्यानेलमा प्रयोग हुने भाषा :-
१२. प्रसारणको समय र समयावधि :-
१३. प्रसारण गरिने कार्यक्रम :-
१४. अनुमतिपत्र बहाल रहने अवधि :-
१५. अन्य सर्तहरू :-
(क)
(ख)
(ग)

कार्यालयको छाप

अनुमतिपत्र दिने अधिकारीको,-
सही :-
नाम : -
दर्जा :-
कार्यालय :-

मिति :-

फाराम नं.(ख)

Down-linking License

License No.

1. Licensee person or company's name:

2. Address:

| (a) Permanent | (b) Temporary |
|---|---|
| District: | District: |
| Municipality/VDC | Municipality/VDC: |
| Ward No: | Ward No: |
| Area/location: | Area/location: |
| House No: | House No: |
| Phone No: | Phone No: |
| Fax No: | Fax No: |
| Email: | Email: |

3. Citizenship Number in the case of licensee being an individual; and Company Registration Number in the case of a company:

4. Medium of broadcast and distribution of program:
   (a) Direct-to-home with satellite up-linking:
   (b) Ground cable:
   (c) Other modes:

5. Description of down-linking channels:
   (a) Up-linking Satellite/Footprint and country transmitting the channel:
   (b) Medium of ground distribution or down-linking the channel:
   (c) Number/description of channels to be distributed:

6. Description of down-linking frequency and antenna:

7. Down-linking system:

8. Down-linking place:

9. Down-linked channel distribution area:

10. Down-linking date:

11. Language used in the channel:

12. Broadcasting time and duration:
13. Program to be transmitted:
14. Period of up-linking:
15. Other terms and conditions:

Seal

License Issuing Authority's:
Signature:
Name:
Designation:
Office:
Date:

**+अनुसूची– ४(ख)**

(नियम ६ को उपनियम (१) को खण्ड (ग) सँग सम्बन्धित)

सिग्नल वितरणको

**अनुमुमतिपत्र**

अनुमतिपत्र नं :-

१. अनुमतिपत्र पाउने व्यक्ति वा संस्थाको नाम :-

२. ठेगाना :-

| | |
|---|---|
| (क) स्थायी :- | (ख) अस्थायी :- |
| जिल्ला : - | जिल्ला : |
| नगरपालिका/गा.वि.स :- | नगरपालिका/गा.वि.स.:- |
| वडा नं :- | वडा नं :- |
| गाउँ/टोल :- | गाउँ/टोल :- |
| फोन नं :- | फोन नं :- |
| फ्याक्स नं :- | फ्याक्स नं :- |
| इमेल :- | इमेल :- |

३. अनुमतिपत्र पाउने व्यक्ति भए नागरिकता नम्बर र सङ्गठित संस्था भए संस्था दर्ता नम्बरः-

४. सिग्नल वितरण गरिने भू-उपग्रह प्रसार केन्द्रको,-

(क) लिङ्क गरिने स्याटेलाईट/प्रसार केन्द्र रहने देश :-

(ख) प्रयोग गरिने फ्रिक्वेन्सी ब्याण्ड/डाउनलिङ्क फ्रिक्वेन्सी :-

(ग) प्रसारण वितरण गर्ने सतह माध्यम :-

(घ) डाउनलिङ्क गर्ने च्यानेलको सङ्ख्या र नाम :-

५. च्यानेल वितरण हुने क्षेत्र :-

६. च्यानेल प्रसारण सुरु हुने मिति :-

७. च्यानलमा प्रयोग हुने भाषा :-

८. प्रसारणको समय र समयावधि :-

९. प्रसारण गरिने कार्यक्रमहरू :-

१०. अनुमतिपत्र बहाल रहने अवधि :-

+ चौथो संशोधनद्वारा थप ।

## ❶अनुसूची–५(क)

(नियम ७ को उपनियम (१) सँग सम्बन्धित)

इजाजतपत्र तथा अनुमतिपत्र लिनको लागि निवेदन दिँदा लाग्ने दस्तुर

१. फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणाली स्थापना गरी वा केबुलको माध्यमद्वारा कार्यक्रम प्रसारण गर्नको लागि रु. २,०००।-

२. स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसारण केन्द्र स्थापना गरी वा स्याटेलाइट वितरण प्रणाली वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्नको लागि रु. ५,०००।-

३. डाउनलिङ्क गर्न वा सिग्नल वितरण गर्नको लागि रु. ५,०००।- ) चौथो संशोधनद्वारा संशोधित ।

❶ चौथो संशोधनद्वारा संशोधित ।

**अनुसूची – ५ (ख)**
(नियम ७ को उपनियम (२) सँग सम्बन्धित)
इजाजतपत्र तथा अनुमतिपत्र दिँदा लाग्ने दस्तुर

☞ १. स्याटेलाइट वा केबुलसम्बन्धी सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्नको लागि

(क) काठमाण्डौं उपत्यकाभर कार्यक्रम प्रसारण गर्नको लागि रु. ५,००,०००।-
(ख) महानगरपालिका क्षेत्रभर कार्यक्रम प्रसारण गर्नको लागि रु. १,००,०००।-
(ग) उपमहानगरपालिका क्षेत्रभर कार्यक्रम प्रसारण गर्नको लागि रु. ५०,०००।-
(घ) नगरपालिकाभर कार्यक्रम प्रसारण गर्नका लागि रु. २५,०००।-
(ङ) महानगरपालिकासँग सिमाना जोडिएका प्रत्येक गाउँ विकास समितिमा कार्यक्रम प्रसारण गर्नको लागि रु. १५,०००।-
(च) उपमहानगरपालिकासँग सिमाना जोडिएका प्रत्येक गाउँ विकास समितिमा कार्यक्रम प्रसारण गर्नको लागि रु. १०,०००।-
(छ) दुर्गम र अति विकट गाउँ विकास समितिका लागि रु. १,०००।-
(ज) खण्ड (ङ), (च) र (छ) बाहेकका अन्य प्रत्येक गाउँ विकास समितिमा कार्यक्रम प्रसारण गर्नको लागि रु. ५,०००।-

***द्रष्टव्यः–**

दुर्गम र अति विकट गाउँ विकास समिति भन्नाले ताप्लेजुङ, पाँचथर, तेह्रथुम, भोजपुर, सोलुखुम्बु, ओखलढुङ्गा, खोटाङ, रामेछाप, दोलखा, रसुवा, धादिङ, गोरखा, सिन्धुपाल्चोक, सङ्खुवासभा, मनाङ, मुस्ताङ, रुकुम, रोल्पा, डोल्पा, जुम्ला, कालिकोट, मुगु, हुम्ला, जाजरकोट, बाजुरा, बझाङ, अछाम, दार्चुलाका सदरमुकाममापर्ने गाउँ विकास समिति बाहेकका अन्य गाउँ विकास समिति सम्झनुपर्दछ ।

□ क. Satellite Audio Broadcasting Earth Station (VSAT) उपकरणहरू

(Audiomono वा Stereo) द्वारा प्रसारण गर्नको लागि प्रति च्यानल रु.x ....... १,००,०००।-

❸२. फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्नको लागिः-

(क) २० वाटसम्मको लागि - रु. १,०००।-

☞नेपाल राजपत्र मिति २०६४/११/६ को सूचनाद्वारा संशोधित ।
* नेपाल राजपत्र मिति २०६४/११/६ को सूचनाद्वारा थप ।

(ख) २० वाटभन्दा माथि ५० वाटसम्मको लागि - रु. २,०००।-

(ग) ५० वाटभन्दा माथि १०० वाटसम्मको लागि - रु. २०,०००।-

(घ) १०० वाटभन्दा माथि २५० वाटसम्मको लागि - रु. १,५०,०००।-

(ङ) २५० वाटभन्दा माथि ५०० वाटसम्मको लागि - रु. ३,००,०००।-

(च) ५०० वाटभन्दा माथि १००० वाटसम्मको लागि- रु. ७,५०,०००।-

(छ) १००० वाटभन्दा माथि २००० वाटसम्मको लागि- रु. १०,००,०००।-

(ज) २००० वाटभन्दा माथिको लागि - रु.२०,००,०००।-

❹३. स्याटेलाइट तथा केबुल टेलिभिजनसम्बन्धी भू-उपग्रह प्रसार केन्द्र स्थापना गरी कार्यक्रम प्रसारण गर्नको लागि -

रु. १०,००,०००।-

❹४. स्याटेलाइट वितरण प्रणालीको माध्यमबाट कार्यक्रम प्रसारण गर्नको लागि प्रति च्यानेल रु. २५,०००।-

+४क. नि:शुल्क वा विज्ञापन समावेश नभएको स:शुल्क च्यानेलको डाउनलिङ्क गरी कार्यक्रम प्रसारण गर्नको लागि प्रति च्यानेल रु. २५,०००।-

+४ख. विज्ञापन समावेश भएको स:शुल्क च्यानेलको डाउनलिङ्क गरी कार्यक्रम प्रसारण गर्नको लागि प्रति च्यानेल रु. ५०,०००।-

◖४ग. सिग्नल वितरणको लागि रु.२५,०००।-

=५. अन्य सञ्चार माध्यमअन्तर्गत निम्न प्रणालीद्वारा कार्यक्रम प्रसारण गर्नको लागि

❹१. मल्टिच्यानल मल्टिप्वाइन्ट डिष्ट्रिव्यूसन सिस्टम (एम.एम.डी.एस) बाट हुने प्रसारणको लागि प्रति च्यानेल रु २५,०००।-

❹२. भेरी हाई फ्रिक्वेन्सी (भी.एच.एफ) र अल्ट्रा हाइ फ्रिक्वेन्सी (यू.एच.एफ) प्रयोग गर्ने ट्रान्समिटर प्रणालीबाट गरिने सतहगत टेलिभिजन प्रसारण केन्द्र वा प्रत्येक रिले स्टेसनको लागि -

(क) ५०० वाटसम्मको लागि - रु.५,००,०००।-

(ख) ५०० वाटभन्दा माथि १००० वाटसम्मको लागि - रु.७,५०,०००।-

(ग) १००० वाटभन्दा माथि ३००० वाटसम्मको लागि - रु.१०,००,०००।-

(घ) ३००० वाटभन्दा माथि ५००० वाटसम्मको लागि - रु.१५,००,०००।-

(ङ) ५००० वाटभन्दा माथि १०००० वाटसम्मको लागि - रु.२५,००,०००।-

---

⊡ नेपाल राजपत्र मिति २०६३।१२।५ को सूचनाद्वारा थप ।

x चौथो संशोधनद्वारा झिकिएको ।

❹ चौथो संशोधनद्वारा संशोधित ।

+ चौथो संशोधनद्वारा थप ।

◖ नेपाल राजपत्र मिति २०६६।९।२० को सूचनाद्वारा थप ।

३. उपखण्ड (१) र (२) मा उल्लेखबाहेक अन्य प्रणालीको हकमाx ............. रु. १,००,०००।-

+४. इन्टरनेट प्रोटोकलमा आधारित टेलिभिजन (आइ.पी.टी.भी.) प्रणालीबाट कार्यक्रम प्रसारण गर्नको लागि प्रति च्यानेल रु. २५,०००।-

**द्रष्टव्यः**- प्रसारण केन्द्रमा रहने स्ट्याण्ड बाई ट्रान्समिटरको दस्तुर लाग्ने छैन ।

x चौथो संशोधनद्वारा झिकिएको ।
+ चौथो संशोधनद्वारा थप ।

## अनुसूची – ६

(नियम १० को उपनियम (१) सँग सम्बन्धित)

इजाजतपत्र तथा अनुमतिपत्रसम्बन्धी दर्ता किताब

| सि. नं | इजाजतपत्र तथा अनुमतिपत्र पाउनेको नाम र ठेगाना | इजाजतपत्र तथा अनुमतिपत्र दिइएको मिति र किसिम | इजाजतपत्र तथा अनुमतिपत्र बहाल रहने अवधि | इजाजतपत्र तथा अनुमतिपत्र नवीकरण गर्दा लाग्ने दस्तुर र नवीकरण भएको मिति | इजाजतपत्र तथा अनुमतिपत्रमा कुनै विवरण बदलिएको भए त्यसको व्यहोरा | प्रसारण सम्बन्धी कार्य बन्द गरेको भए त्यसको विवरण र मिति | कैफियत |
|---|---|---|---|---|---|---|---|
| | | | | | | | |

## अनुसूची – ७

(नियम १५ को उपनियम (१) सँग सम्बन्धित)

इजाजतपत्र । अनुमतिपत्रमा उल्लेखित विवरण बदल्नको लागि दिइने निवेदन

श्री ....................

मैले । हामीले मिति ............... मा प्राप्त गरेको इजाजतपत्र । अनुमतिपत्रमा उल्लिखित विवरणहरूमध्ये देहायका विवरणहरू बदल्नुपरेको हुँदा राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम १५ बमोजिम लाग्ने दस्तुरसहित इजाजतपत्र । अनुमतिपत्रको सक्कल प्रति संलग्न गरी यो निवेदन गरेको छु । छौं ।

विवरण बदल्नुपर्ने कुराहरू

(क)

(ख)

(ग)

(घ) निवेदकको

सही :-

नाम :-

ठेगाना :-

मिति :-

## ▹अनुसूची ८

(नियम १६ को उपनियम (२) सँग सम्बन्धित)

इजाजतपत्र/अनुमतिपत्रमा नवीकरणको लागि दिइने निवेदन

श्री सूचना तथा सञ्चार मन्त्रालय,
श्रव्यदृश्य तथा प्रसारण शाखा,
सिंहदरबार, काठमाण्डौ ।

मैले/हामीले मिति ............... मा प्राप्त गरेको इजाजतपत्र/अनुमतिपत्रको अवधि मिति ................... मा समाप्त हुने भएकोले सो इजाजतपत्र/अनुमतिपत्र नवीकरण गर्नको लागि नियमानुसार लाग्ने दस्तुर र इजाजतपत्र/अनुमतिपत्रको प्रतिलिपिसमेत संलग्न गरी यो निवेदन गरेको छु /छौं ।

निवेदकको

सही :-
नाम :-
ठेगाना :-
मिति :-

**संलग्नः**

१. ............... आ.व. को प्रसारण तथा वितरण शुल्क रु. .................. रसिद नं......................... बाट मिति ................... आ.प्र. शाखामा बुझाएको सक्कल रसिद ।
२. ............. आ.व. को नवीकरण दस्तुर रु................ रसिद नं. ............................ बाट मिति .................................... मा आ.प्र. शाखामा बुझाएको सक्कल रसिद
३. इजाजतपत्र/अनुमतिपत्रको प्रतिलिपि

प्रसारण संस्थाको नामः
इजाजतपत्र/अनुमतिपत्र नं.
सम्पर्क टेलिफोन नं
इमेल :

नोटः नवीकरणको निर्णय भएपछि सक्कल प्रति पेस गर्नुपर्नेछ ।

▹ मिति २०६७।६।४ को राजपत्रको सूचनाद्वारा संशोधित ।

# राष्ट्रिय प्रसारण (पाँचौ संशोधन) नियमावली, २०६९

राष्ट्रिय प्रसारण नियमावली, २०५२ लाई संशोधन गर्न वाञ्छनीय भएकोले, राष्ट्रिय प्रसारण ऐन, २०४९ को दफा २१ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरू बनाएको छ ।

१. सङ्क्षिप्त नाम र प्रारम्भः (१) यी नियमहरूको नाम "राष्ट्रिय प्रसारण (पाँचौ संशोधन) नियमावली, २०६९" रहेको छ ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ ।

२. राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ८ मा संशोधनः राष्ट्रिय प्रसारण नियमावली, २०५२ (यसपछि "मूल नियमावली" भनिएको को नियम ८ को (१) खण्ड (क) र (घ) को सट्टा देहायको खण्ड (क) र (घ) राखिएका छन् :-

"(क) कार्यक्रम प्रसारण वा वितरण गर्दा सम्बन्धित प्रसारण संस्था, व्यक्ति वा निजका आधिकारिक वितरकको सहमति लिनुपर्ने । तर निशुल्क वितरण गरिने च्यानलको हकमा सहमति लिन आवश्यकपर्ने छैन ।"

"(घ) प्रसारण संस्थाले नेपाल सरकारको पूर्ण स्वामित्वमा रहेका प्रसारण संस्थाबाट सञ्चालित कम्तीमा दुईवटा च्यानल प्रसारण गर्नुपर्ने र अन्य नेपाली राष्ट्रिय च्यानलहरूलाई प्रसारणमा प्राथमिकता दिनुपर्ने ।"

३. मूल नियमावलीको नियम ११ मा संशोधनः मूल नियमावलीको नियम ११ को उपनियम (१) को सट्टा देहायको उपनियम (१) राखिएको छः-

"(१) कार्यक्रम प्रसारण वा वितरण गर्ने प्रसारण संस्थाले आफूले गरेको वार्षिक कूल आम्दानीको दुई प्रतिशतले हुन आउने रकम प्रसारण शुल्कबापत नेपाल सरकारलाई बुझाउनुपर्नेछ ।

**स्पष्टीकरणः** यस प्रयोजनको लागि "कूल आम्दानी" भन्नाले ऋण वा सापटी लिएको वा शेयरबापतको रकमबाहेक प्रसारण संस्थालाई प्राप्त हुने जुनसुकै आयलाई जनाउँछ ।"

४. मूल नियमावलीको नियम १५ मा संशोधनः मूल नियमावलीको नियम १५ को उपनियम (१)मा देहायको स्पष्टीकरण थपिएको छ :-

"**स्पष्टीकरणः** यस नियमको प्रयोजनको लागि "विवरण" भन्नाले इजाजतपत्र वा अनुमतिपत्रमा उल्लिखित नाम, थर, ठेगाना जस्ता सामान्य विवरण सम्झनुपर्छ ।

५. मूल नियमावलीको नियम १७ मा संशोधनः मूल नियमावलीको नियम १७ मा रहेका “हराएमा वा दैवी प्रकोप परी मासिएमा वा पुरानो भई च्यातिएमा वा नवीकरण गर्ने ठाउँ समाप्त भएको” भन्ने शब्दहरूको सट्टा “हराएको, दैवि प्रकोप परी मासिएको वा पुरानो भई च्यातिएको” भन्ने शब्दहरू राखिएका छन् ।

आज्ञाले,
अवनीन्द्रकुमार श्रेष्ठ
नेपाल सरकारको सचिव

# राष्ट्रिय प्रसारण (छैठौं संशोधन) नियमावली, २०६९

राष्ट्रिय प्रसारण नियमावली, २०५२ लाई संशोधन गर्न वाञ्छनीय भएकोले, राष्ट्रिय प्रसारण ऐन, २०४९ को दफा २१ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरू बनाएको छ ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भः** (१) यी नियमहरूको नाम "राष्ट्रिय प्रसारण (छैठौं संशोधन) नियमावली, २०६९" रहनेछ ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ ।

२. **राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ३ मा संशोधन** : राष्ट्रिय प्रसारण नियमावली, २०५२ (यसपछि "मूल नियमावली" भनिएको को नियम ३ को सट्टा देहायको नियम ३ राखिएको छ :-

"३. **इजाजतपत्रको लागि निवेदन दिनुपर्ने** : (१) ऐनको दफा ५ बमोजिम इजाजतपत्र लिन चाहने व्यक्ति वा सङ्गठित संस्थाले इजाजत पत्रको लागि नियम ७ को उपनियम (१) बमोजिमको निवेदन दस्तुरसहित देहायका ढाँचामा मन्त्रालय समक्ष निवेदन दिनुपर्नेछ :-

(क) स्याटेलाइट वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्न, डिजिटल प्रविधिमा आधारित प्रसारण केन्द्र (डिजिटल हेडइण्ड) स्थापना गरी सिग्नल वितरण गर्न, अन्य व्यक्ति वा सङ्गठित संस्थाले स्थापना गरेको डिजिटल प्रसारण केन्द्रबाट सिग्नल प्राप्त गरी कार्यक्रम प्रसारण गर्न वा एनालग प्रविधिमा आधारित प्रसारण केन्द्र स्थापना गरी

केबुलको माध्यमद्वारा कायर्क्रम प्रसारण गर्न अनुसूची -१ (क) बमोजिमको ढाँचामा, (ख) फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्न अनुसूची- १(ख) बमोजिमको ढाँचामा, (ग) केबुल वा भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणाली (डाइरेक्ट टु होम) मा आधारित भई टेलिभिजन प्रसारण गर्नको लागि अनुसूची -१(ग) बमोजिमको ढाँचामा ।

(२) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि यो नियम प्रारम्भ हुनुअघि केबुलको माध्यमबाट कार्यक्रम प्रसारण गर्न इजाजतपत्र लिई एनालग प्रविधिमा आधारित सिग्नल वितरण गरेका व्यक्ति वा सङ्गठित संस्थाले उपनियम (१) को खण्ड (क) बमोजिमको इजाजतपत्र प्राप्त व्यक्ति वा सङ्गठित संस्थाबाट सिग्नल प्राप्त गरी केबुलको माध्यमबाट प्रसारण गर्न

छुट्टै इजाजतपत्र लिनुपर्ने छैन ।

तर त्यस्तो इजाजतपत्र प्राप्त नगरेको व्यक्ति वा सङ्गठित संस्थाले डिजिटल प्रविधिमा आधारित प्रसारण केन्द्र स्थापना गर्नको लागि इजाजतपत्र प्राप्त अर्को व्यक्ति वा सङ्गठित संस्थाबाट सिग्नल प्राप्त गरी वितरण गर्ने भएमा यस नियमबमोजिम इजाजतपत्र लिनुपर्नेछ ।"

३. **मूलूल नियमावलीको नियम ४ मा संशोधन** : मूल नियमावलीको नियम ४ को सट्टा देहायको नियम ४ राखिएको छ :-

"४. **इजाजतपत्र दिन सकिनेः** (१) नियम ३ बमोजिम इजाजतपत्रको लागि कुनै निवेदन पर्न आएमा मन्त्रालयले सो निवेदन उपर आवश्यक जाँचबुझ गर्दा निवेदकलाई इजाजतपत्र दिन मनासिब देखिएमा नियम ७ को उपनियम (२) बमोजिमको इजाजतपत्र दस्तुर लिई देहायको ढाँचामा इजाजतपत्र दिन सक्नेछ :-

(क) स्याटेलाइट वा अन्य सञ्चार माध्यमद्वारा कार्यक्रम प्रसारण गर्न, डिजिटल प्रविधिमा आधारित प्रसारण केन्द्र स्थापना गरी सिग्नल वितरण गर्न, अन्य व्यक्ति वा सङ्गठित संस्थाले स्थापना गरेको डिजिटल प्रसारण केन्द्रबाट सिग्नल प्राप्त गरी कार्यक्रम प्रसारण गर्न वा एनालग प्रविधिमा आधारित प्रसारण केन्द्र स्थापना गरी केबुलको माध्यमद्वारा कार्यक्रम प्रसारण गर्न अनुसूची-२(क) बमोजिमको ढाँचामा, (ख) फ्रिक्वेन्सी मोडुलेसन प्रसारण प्रणालीको स्थापना गरी कार्यक्रम प्रसारण गर्न अनुसूची - २(ख) बमोजिमको ढाँचामा,

(ग) केबुल वा भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणालीमा आधारित भई टेलिभिजन प्रसारण गर्नको लागि अनुसूची-२(ग) बमोजिमको ढाँचामा ।

(२) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि रेडियो फ्रिक्वेन्सी उपलब्ध गराउन नसकिने भएमा इजाजतपत्र दिइने छैन ।"

४. **मूल नियमावलीमा नियम ४क. थप** : मूल नियमावलीको नियम ४ पछि देहायको नियम ४क. थपिएको छ :-

"**४क. डिजिटल प्रणालीमा परिवर्तन गर्नुपर्ने** : यो नियम प्रारम्भ हुनुअघि एनालग प्रणालीद्वारा सिग्नल वितरण गरेका व्यक्ति वा सङ्गठित संस्थाले मन्त्रालयले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकेको मितिले देहायको अवधिभित्र एनालग प्रणालीलाई डिजिटल प्रणालीमा परिवर्तन गरी सोको जानकारी मन्त्रालयलाई दिनुपर्नेछ :-

(क) काठमाडौ महानगरपालिका र उपमहानगर पालिका क्षेत्रमा तीन वर्षभित्र,

(ख) नगरपालिका क्षेत्रभित्र चार वर्षभित्र,

(ग) अन्य क्षेत्रमा पाँच वर्षभित्र ।"

**५. मूलूल नियमावलीको नियम ८ मा संशोधन** : मूल नियमावलीको नियम ८ को खण्ड (ग) पछि देहायका खण्ड (ग१), (ग२), (ग३), (ग४), (ग५) र (ग६) थपिएका छन् :-

"(ग१) केबुल वा भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणालीमा आधारित भई टेलिभिजन प्रसारण गर्दा मन्त्रालयले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएको मापदण्डबमोजिमको स्टुडियो तथा प्रविधिको प्रयोग गर्नुपर्ने,

(ग२) डिजिटल प्रविधिमा आधारित प्रसारण केन्द्र स्थापना गरी अन्य व्यक्ति वा सङ्गठित संस्थालाई सिग्नल वितरण गर्दा यस नियमावलीबमोजिम केबुलको माध्यमबाट कार्यक्रम प्रसारण गर्ने इजाजतपत्र प्राप्त व्यक्ति वा सङ्गठित संस्थालाई मात्र वितरण गर्न सक्ने,

(ग३) अन्य व्यक्ति वा सङ्गठित संस्थाले स्थापना गरेको डिजिटल प्रविधिमा आधारित प्रसारण केन्द्रबाट सिग्नल प्राप्त गरी प्रसारण गर्ने व्यक्ति वा सङ्गठित संस्थाले जसको प्रसारण केन्द्रबाट सिग्नल प्राप्त गरेको हो सोही इजाजतपत्रवालाले प्रसारणमा प्रयोग गरेको चिन्ह, सङ्केत वा लोगो (कल साइन) मात्र प्रयोग गर्नुपर्ने,

(ग४) इजाजतपत्रमा उल्लिखित प्रविधिको प्रयोग गरी इजाजतपत्रमा उल्लिखित स्थानबाट कार्यक्रम प्रसारण गर्नुपर्ने,

(ग५) भू-सतही माध्यमबाट टेलिभिजन प्रसारण गर्ने इजाजतपत्र लिएको व्यक्ति वा संस्थाले केबुल वा भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणाली (डाइरेक्ट टु होम) मार्फत कार्यक्रम वितरण गर्न नपाउने,

(ग६) डिजिटल प्रविधिमा आधारित प्रसारण केन्द्र स्थापना गरी सिग्नल वितरण गर्न इजाजतपत्र लिएका व्यक्ति वा संस्थाले त्यस्तो प्रसारण केन्द्रबाट सिग्नल प्राप्त गरी केबुलको माध्यमबाट कार्यक्रम प्रसारण गर्ने इजाजतपत्र लिएका व्यक्ति वा संस्थालाई सिग्नल वितरण गर्न इन्कार गर्न नपाउने,"

**६. मूलूल नियमावलीको नियम ११ मा संशोधन** : मूल नियमावलीको नियम ११ को,-

(१) उपनियम (१) मा रहेका "शुल्कबापत" भन्ने शब्दहरू पछि "आर्थिक वर्ष समाप्त भएको छ महिनाभित्र" भन्ने शब्दहरू थपिएका छन् ।

(२) उपनियम (१) पछि देहायका उपनियम (१क) र (१ख) थपिएका छन्:-

"(१क) उपनियम (१) बमोजिमको अवधिभित्र कुनै प्रसारण संस्था वा व्यक्तिले प्रसारण वा वितरण शुल्क नबुझाएमा सो अवधिपछि प्रत्येक महिनाको लागि

दश प्रतिशतले थप दस्तुर लाग्नेछ ।

(१ख) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि नियम ५ख.बमोजिम सिग्नल वितरणको अनुमतिपत्र लिएको व्यक्ति वा संस्थाले इजाजतपत्र नवीकरणका लागि आफूले सिग्नल वितरण गरेको प्रत्येक च्यानलको दशहजार रुपैयाँ प्रसारण तथा वितरण शुल्कबापत नेपाल सरकार लाई बुझाउनुपर्नेछ ।"

(४) उपनियम (२) मा रहेका "उपनियम (१) बमोजिम" भन्ने शब्दहरूको सट्टा "उपनियम (१) वा (१क) बमोजिम" भन्ने शब्दहरू राखिएका छन् ।

(५) उपनियम (३) झिकिएको छ ।

७. **मूल नियमावलीको अनुसूचीमा संशोधन** : मूल नियमावलीको,-

(१) अनुसूची -१(क) को सट्टा यसैसाथ संलग्न भएबमोजिमको अनुसूची - १(क) राखिएको छ ।

(२) अनुसूची -१(ख) पछि यसैसाथ संलग्न भएबमोजिमको अनुसूची - १(ग) थपिएको छ ।

(३) अनुसूची -२(क) को सट्टा यसैसाथ संलग्न भएबमोजिमको अनुसूची - २(क) राखिएको छ ।

(४) अनुसूची -२(ख) पछि यसैसाथ संलग्न भएबमोजिमको अनुसूची - २(ग) थपिएको छ ।

(५) अनुसूची - ५(क) को खण्ड (१) मा रहेका "वा केबुलको माध्यमद्वारा" भन्ने शब्दहरू झिकिएका छन् ।

(६) अनुसूची - ५ (ख) को,- (क) खण्ड ५ पछि देहायको खण्ड ६, ७ र ८ थपिएका छन् :-

"६. केबुलको माध्यमबाट टेलिभिजन प्रसारण गर्नको लागि प्रतिच्यानल,

(क) नेपाल राज्यभरको लागि रु. ३०,००,०००।-

(ख) काठमाडौँ उपत्यकाको लागि रु. १०,००,०००।-

(ग) उपमहानगरपालिका भएको प्रत्येक जिल्लाको लागि रु. ३,००,०००।-

(घ) अन्य जिल्लाको लागि रु. १,००,०००।-

७. डिजिटल प्रविधिमा आधारित केबुलको माध्यमबाट कार्यक्रम प्रसारण गर्नको लागि -

(क) डिजिटल हेडइण्ड स्थापना गरी अन्य इजाजत पत्र वालालाई डिजिटल सिग्नल वितरण गर्नको लागि प्रतिच्यानल रु. १,००,०००।-

(ख) अन्य व्यक्ति वा सङ्गठित संस्थाबाट सिग्नल प्राप्त गरी कार्यक्रम प्रसारण गर्नको लागि प्रति च्यानल रु. २५,०००।-

८. भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणालीमा आधारित भई टेलिभिजन प्रसारण गर्नको लागि,-

(क) भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणालीमा आधारित कार्यक्रम वितरण गर्ने इजाजत पत्र प्राप्त संस्था तथा व्यक्ति आफैँले टेलिभिजन प्रसारण गर्ने भएमा प्रति च्यानल रु. ३०,००,०००।-

(ख) स्याटेलाइटको माध्यमबाट टेलिभिजन प्रसारण गर्ने गरी अनुमतिपत्र प्राप्त संस्था वा व्यक्तिले भू-उपग्रहको माध्यमबाट उपभोक्तासमक्ष सोझै कार्यक्रम वितरण गर्ने प्रणाली मार्फत टेलिभिजन प्रसारण गर्ने भएमा प्रति च्यानल रु १०,००,०००।-"

(ख) द्रष्टव्यको सट्टा देहायको द्रष्टव्य राखिएको छ :- "द्रष्टव्यः-(१) प्रसारण केन्द्रमा रहने स्ट्रायाण्ड बाई ट्रान्समिटरको दस्तुर लाग्ने छैन ।

(२) कुनै इजाजतपत्रवालाले आफैले डिजिटल हेडइण्ड स्थापना गरी आफैँ कार्यक्रम वितरण गर्ने भएमा खण्ड ७ को उपखण्ड (क) र (ख) बमोजिमको दुबै दस्तुर बुझाउनुपर्नेछ ।"

(१२) रेडियो नेभिगेसन स्टेसनको लागि (प्रयोग गरेको प्रति फ्रिक्वेन्सीबापत) रु.२००।-

(१३) रेडियो डिटरमिनेसन स्टेसनको लागि रु.२००।-

(१४) भी.एच.एफ.एअर कम्युनिकेसन सेवा सार्वजनिक स्वीच्ड नेटवर्कमार्फत भै अन्य अन्तर्राष्ट्रिय नेटवर्कसँग मेल खाने भी. एच. एफ. ट्रान्समिटर वा ट्रान्सरिसिभर प्रणालीको लागि १० वाटसम्म आर एफ. पावर आउटपुट क्षमताको भएमा रु.५०,०००।- र सो भन्दा बढी आर.एफ. पावर आउटपुट क्षमताको लागि रु.१,००,०००।-

(१५) गतिशिल वा अचल उद्धार योजना स्टेसनको लागि रु. ५००।-

(१६) कर्डलेस टेलिफोनको लागि रु. ५००।-

(आ) एमेच्योर रेडियो कन्ट्रोल अपरेटरको लागि रु. १००।-

(इ) एमेच्योर रेडियो सञ्चालनको लागि रु. ५००।-

(ई रेडियो यन्त्र उत्पादन गर्नको लागि रु. २,०००।-

(उ) रेडियो यन्त्र बिक्री वितरणको लागि रु. २,०००।-

(ऊ) रेडियो (लाइसेन्स) नियमावली, २०४८ को अधीनमा रही विदेशी नागरिकहरूलाई कुनै रेडियो यन्त्र राख्न तथा प्रयोग गर्न पाउने गरी लाइसेन्स दिँदा खण्ड (अ), (आ) र (इ) मा उल्लेखित दस्तुरको चार दोब्बर परिवर्त्य विदेशी मुद्रा लाग्नेछ ।

**अनुसूची–८**

(नियम १०(२) सँग सम्बन्धित)

**लाइसेन्स नवीकरणको लागि दरखास्त**

श्री.........................

....................................

मिति ..................मा प्राप्त गरेको .......................... रेडियो यन्त्रको लाइसेन्स नवीकरण गर्नको लागि नियम १० (३) बमोजिम लाग्ने लाइसेन्स नवीकरण दस्तुर नियम १०(४) बमोजिम लाग्ने जरिबाना दस्तुर बुझाएको भौचर र सो लाइसेन्सको सक्कल प्रतिसमेत यसैसाथ संलग्न राखी नियम १०(२) बमोजिम सो लाइसेन्स नवीकरण गरी पाउनको लागि अनुरोध गर्दछु।

दरखास्तवालाको

सहीः-

नामः-

ठेगानाः-

मितिः-

**अनुसूची–९**

(नियम १२ सँग सम्बन्धित)

लाइसेन्सको विवरण बदल्नको लागि

**दरखास्त**

श्री ..................

मिति........................ मा प्राप्त गरेको ..................... को लाइसेन्सको विवरण बदल्नुपरेकोले नियम १२ (२) बमोजिम लाग्ने दस्तुर बुझाएको भौचर र सो लाइसेन्सको सक्कल प्रतिसमेत यसै साथ राखी नियम १२ (१) बमोजिम सो लाइसेन्समा देहायबमोजिमको विवरण बदल्नको लागि अनुरोध गर्दछु ।

लाइसेन्समा बदल्नुपर्ने विवरण

(क)

(ख)

(ग)

(घ)

दरखास्तवालाको

सही:-

नाम:-

ठेगाना:-

मिति:-

## अनुसूची–१०

(नियम १३ (१) सँग सम्बन्धित)

रेडियो यन्त्रको नामसारी गर्नको लागि

**दरखास्त**

श्री............................

..........................रेडियो यन्त्र मिति............................ ..................मैले श्री .................................. लाई हक छाडी दिएकोले मिति ............ मा प्राप्त सो रेडियो यन्त्रको लाइसेन्स निजको नाममा नामसारी गरी दिन मेरो मन्जुरी भएकोले सो रेडियो यन्त्रको लाइसेन्सको सक्कल प्रति यसै साथ संलग्न राखी नियम १३ (१) बमोजिम रेडियो यन्त्रको लाइसेन्स नामसारी गरी दिनको लागि अनुरोध गर्दछु ।

हक छाडी दिनेको

सहीः-

नामः-

ठेगानाः-

मितिः-

उपरोक्तबमोजिम श्री.............. ले मलाई .................. रेडियो यन्त्र हक छाडी दिनुभएकोले सो रेडियो यन्त्रको लाइसेन्स मेरो नाममा नामसारी गरी पाउनको लागि नियम १३ (१) बमोजिम अनुरोध गर्दछु ।

हक पाउनेको

सहीः-

नामः-

ठेगानाः-

मितिः-

# छापाखाना र प्रकाशनसम्बन्धी ऐन, २०४८

लालमोहर र प्रकाशन मिति २०४८।२।१६

**संशोधन गर्ने ऐन:** छापाखाना र प्रकाशनसम्बन्धी (पहिलो संशोधन) ऐन, २०४८ २०४८।७।१४।५

**प्रस्तावना:** विभिन्न वर्ग र क्षेत्रका जनताबीच सुसम्बन्ध, सदाचार, शिष्टाचार, नैतिकता कायम राख्न र देशको पत्रकारिता क्षेत्रले अभिव्यक्तिको स्वतन्त्रतालाई मर्यादित एवं जिम्मेवारीपूर्ण तबरले स्वतन्त्र र निर्भिक भई उपभोग गर्न सक्ने वातावरण सृजना गर्नको लागि छापाखाना र प्रकाशनसम्बन्धमा समयानुकूल कानुनी व्यवस्था गर्न वाञ्छनीय भएकोले,

**श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेब**बाट नेपाल अधिराज्यको संविधान, २०४७ को धारा १२९ बमोजिम मन्त्रिपरिषद्को सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेको छ।

## परिच्छेद -१

## प्रारम्भिक

१. **सङ्क्षिप्त नाम र प्रारम्भ:** (१) यस ऐनको नाम "छापाखाना र प्रकाशन सम्बन्धी ऐन, २०४८" रहेको छ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ।

२. **परिभाषा:** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "छापाखाना" भन्नाले किताब, समाचारपत्र, समाचारपत्रिका वा लिखतपत्र निकाल्ने साधन सम्झनुपर्छ र सो शब्दले छाप्ने मेसिन, टाइप, लिथो गर्ने मेसिन, सबै कलहरू, ज्यावल, कार्यालय र त्यसका हिस्साहरूलाई समेत जनाउँछ।

(ख) "प्रकाशन" भन्नाले किताब, समाचारपत्र, समाचारपत्रिका, अन्य पत्रपत्रिका र लिखतपत्रलाई समेत सम्झनुपर्छ।

(ग) "किताब" भन्नाले समग्र वा खण्ड खण्ड रूपमा छापिएको वा यन्त्रद्वारा

निकालिएको वा लिथो भएको प्रत्येक पुस्तक पुस्तिका, पर्चा, विवरणपत्र, स्वरलिपि, नक्सा, मानचित्र आदि समेतलाई जनाउँछ ।

(घ) "समाचारपत्र" भन्नाले सार्वजनिक महत्त्वका समसामयिक विषयका क्षेत्रमा टिप्पणी भएको वा नभएको लिखत, समाचार तथा विचार हरूसमेत भएको सार्वजनिक रूपमा बिक्री वा वितरण हुने पत्र सम्झनुपर्छ ।

(ङ) "समाचारपत्रिका" भन्नाले सार्वजनिक समाचार वा त्यसको टिप्पणी तथा विश्लेषण भएको तर समाचारपत्रमा नगनिने समाचारसम्बन्धी कागजपत्र सम्झनुपर्छ ।

(च) "पत्रपत्रिका" भन्नाले समाचारपत्र र समाचारपत्रिका र अन्य पत्रपत्रिकालाई समेत सम्झनुपर्छ ।

(छ) "अन्य पत्रपत्रिका" भन्नाले समाचारपत्र र समाचारपत्रिकामा नगनिने कला, साहित्य, विज्ञान, पर्यटन, चलचित्रलगायतका विभिन्न विधामा प्रकाशित हुने अन्य पत्रपत्रिका सम्झनुपर्छ ।

(ज) "लिखतपत्र" भन्नाले पोष्टर, चित्र, नक्सा, फोटो वा अरू कुनै प्रत्यक्ष चित्रणलाई समेत जनाउँछ ।

(झ) "प्रकाशक" भन्नाले दफा ७ बमोजिम पत्रपत्रिका प्रकाशन गर्न प्रमाणपत्र पाएको व्यक्ति सम्झनुपर्छ ।

(ञ) "सम्पादक" भन्नाले पत्रपत्रिकामा प्रकाशित हुने सामग्रीको चयन तथा सम्पादन गर्ने उत्तरदायित्व भएको व्यक्ति सम्झनुपर्छ ।

(ट) "मुद्रक" भन्नाले छापाखाना धनी आफैंले छापाखाना सञ्चालन गरेको भए छापाखाना धनी वा छापाखाना सञ्चालन गर्न कुनै व्यक्ति नियुक्ति भएको भए त्यसरी नियुक्त भएको व्यक्ति सम्झनुपर्छ ।

(ठ) "पत्रकार" भन्नाले पत्रपत्रिकामा प्रकाशित हुने सामग्री सङ्कलन वा सम्पादन गर्ने व्यक्ति सम्झनुपर्छ र सो शब्दले सम्पादक र सम्पादन गर्ने व्यक्ति सम्झनुपर्छ र सो शब्दले सम्पादक र स्तम्भ लेखक समेतलाई जनाउँछ ।

(ड) "प्रतिबन्धित प्रकाशन" भन्नाले दफा १४ बमोजिम प्रकाशित गर्न नहुने कुरा समावेश भएको प्रकाशन सम्झनुपर्छ ।

(ढ) "निषेधित प्रकाशन" भन्नाले दफा १५ बमोजिम निषेधित गरिएको कुरा समावेश भएको प्रकाशन सम्झनुपर्छ ।

(ण) "प्रेस रजिष्ट्रार" भन्नाले दफा १९ बमोजिम नियुक्त गरिएको अधिकारी सम्झनुपर्छ ।

(त) "स्थानीय अधिकारी" भन्नाले नेपाल सरकारले नेपाल राजपत्रमा

सूचना प्रकाशित गरी तोकिदिएको अधिकारी सम्झनुपर्छ र त्यसरी अधिकारी नतोकिएकोमा प्रमुख जिल्ला अधिकारीलाई सम्झनुपर्छ ।

(थ) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यस ऐनअन्तर्गत बनेको नियममा तोकिएको वा तोकिएबमोजिम सम्झनुपर्छ ।

## परिच्छेद –२

## छापाखानासम्बन्धी व्यवस्था

३. **छापाखाना दर्ता गर्नुपर्ने:** (१) छापाखाना सञ्चालन गर्न चाहने व्यक्तिले छापाखाना सञ्चालन गर्नको लागि तोकिएको विवरणहरू खुलाई तोकिएको ढाँचामा स्थानीय अधिकारीसमक्ष दरखास्त दिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त प्राप्त भएपछि स्थानीय अधिकारीले उक्त दरखास्तउपर आवश्यक छानवीन गरी तोकिएको दस्तुर लिई दरखास्तवालालाई छापाखाना सञ्चालन गर्न तोकिएबमोजिम प्रमाणपत्र दिनुपर्नेछ ।

(३) उपदफा (२) बमोजिम प्रमाणपत्र दिएपछि स्थानीय अधिकारीले छापाखानासम्बन्धी विवरण दर्ता किताबमा जनाई राख्नुपर्नेछ ।

(४) उपदफा (१) बमोजिम पेस भएको विवरणमा कुनै परिवर्तन भएमा मुद्रकले स्थानीय अधिकारीलाई तुरुन्त सूचना गर्नुपर्नेछ । स्थानीय अधिकारीले पनि त्यस्तो सूचना प्राप्त हुनासाथ उपदफा (३) बमोजिमको दर्ता किताबमा त्यस्तो परिवर्तन भएको मिति र विवरण जनाई राख्नुपर्नेछ।

(५) उपदफा (४) मा जुनसुकै कुरा लेखिएको भए तापनि एक जिल्लामा दर्ता भएको छापाखाना अर्को जिल्लामा लगी सञ्चालन गर्नुपर्ने भएमा उपदफा (१) बमोजिम पुनः दरखास्त दिई प्रमाणपत्र लिनुपर्नेछ ।

४. **छापाखाना बन्द वा जफत नगरिने** : दफा ३ बमोजिम दर्ता भएको छापाखानाले समाचार, लेख वा अन्य पाठ्यसामग्री मुद्रण गरेबापत त्यस्तो छापाखाना बन्द वा जफत गरिने छैन ।

## परिच्छेद –३

## किताब सम्बन्धी व्यवस्था

५. **किताब दर्ता गर्ने** : (१) किताबको प्रकाशकले आफूले प्रकाशन गरेको किताब बिक्री वितरण गर्नुभन्दा अघि त्यस्तो किताबको दुईप्रति बिना मूल्य स्थानीय अधिकारीलाई बुझाउनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम प्राप्त भएको किताबहरू स्थानीय अधिकारीले दर्ता किताबमा दर्ता गरी देहायका कुराहरूसमेत उल्लेख गरी राख्नुपर्नेछ :-

(क) किताबको नाम र मुखपृष्ठमा छापिएको व्यहोरा (नेपाली भाषामा नभए अनुवाद गरी नेपाली भाषामा राख्ने,

(ख) किताब लेखिएको भाषा,

(ग) किताब वा त्यसको भागको लेखक, अनुवादक वा सम्पादकको नाम,

(घ) किताबको विषय,

(ङ) मुद्रण गरिएको र प्रकाशन गरिएको स्थान,

(च) मुद्रक वा मुद्रण गर्ने संस्था र प्रकाशक वा प्रकाशन गर्ने संस्थाको नाम,

(छ) प्रकाशन गरिएको मिति,

(ज) पृष्ठ सङ्ख्या,

(झ) आकार,

(ञ) संस्करण सङ्ख्या,

(ट) सो संस्करणमा छापिएको प्रति,

(ठ) छापिएको वा लिथो भएको,

(ड) बिक्री मूल्य, र

(ढ) प्रतिलिपि अधिकार पाउने व्यक्तिको नाम, थर र वतन ।

६. **किताबमा उल्लेख गर्नुपर्ने कुराहरू:** किताबको प्रकाशकले प्रत्येक किताबमा प्रकाशक, सम्पादक वा लेखक वा अनुवादक, मुद्रक, छापाखाना र प्रतिलिपि अधिकार पाउने व्यक्तिसमेत सबैको पूरा नाम, संस्करणको सङ्ख्या, वर्ष र सो संस्करणमा छापिएको प्रति तथा बिक्री मूल्य आदि स्पष्ट बुझिने गरी उल्लेख गर्नुपर्नेछ ।

## परिच्छेद –४

## पत्रपत्रिकासम्बन्धी व्यवस्था

७. **पत्रपत्रिका दर्ता गर्नुपर्ने :** ▲(१) सार्वजनिक रूपमा बिक्री वितरण हुने पत्रपत्रिका नेपाल अधिराज्यभित्र प्रकाशित गर्न चाहने व्यक्तिले पत्रपत्रिकाको नाम, किसिम, भाषा, आकार, पृष्ठ सङ्ख्या, छापिने सङ्ख्या र प्रकाशित हुने स्थान समेत खुलाई पत्रपत्रिका दर्ता गर्नको लागि तोकिएबमोजिमको दस्तुर

▲ पहिलो संशोधनद्वारा संशोधित ।

सहित तोकिएको ढाँचामा स्थानीय अधिकारीसमक्ष दरखास्त दिनुपर्नेछ ।

तर नेपाल सरकारको कार्यालय, नेपाल सरकारको स्वामित्व भएको सङ्गठित संस्था, विश्वबिदालय, नेपाल सरकारको स्वीकृति प्राप्त शिक्षण संस्था, प्रचलित कानुनबमोजिम स्थापित सङ्घ संस्था, फर्म, कम्पनी वा कुनै राजनैतिक दल वा संगठनको मुखपत्रको रूपमा प्रकाशित हुने पत्रपत्रिकालाई यस दफाबमोजिम दर्ता गराउन आवश्यकपर्ने छैन ।

(२) उपदफा (१) बमोजिमको दरखास्त प्राप्त भएपछि स्थानीय अधिकारीले सो दरखास्तउपर आवश्यक छानविन गरी दरखास्तवालासँग कुनै कुरा बुझ्नुपर्ने भएमा सो समेत बुझी दरखास्त प्राप्त भएको मितिले पैंतीस दिनभित्र दरखास्तवालालाई त्यस्तो पत्रपत्रिका प्रकाशन गर्न तोकिएबमोजिम अस्थायी प्रमाणपत्र दिनेछ ।

तर दरखास्तमा उल्लिखित पत्रपत्रिकाको नामसित मिल्ने गरी अर्को कुनै पत्रपत्रिका स्थानीय अधिकारीको कार्यालयमा दर्ता भैसकेको रहेछ भने दरखास्तवालालाई त्यस्तो अस्थायी प्रमाणपत्र दिइने छैन ।

(३) उपदफा (२) बमोजिम अस्थायी प्रमाणपत्र दिइसकेपछि स्थानीय अधिकारीले त्यस्तो पत्रपत्रिकाको सम्पूर्ण विवरणसहित सो कुराको सूचना प्रेस रजिष्ट्रारलाई दिनुपर्नेछ ।

(४) उपदफा (३) बमोजिम सूचना प्राप्त भएपछि प्रेस रजिष्ट्रारले सो पत्रपत्रिकाको नामसित मिल्ने गरी अन्य कुनै पत्रपत्रिका कुनै स्थानीय अधिकारीको कर्यालयमा दर्ता भएको छ छैन हेरी सो नामसित मिल्ने गरी दर्ता भएको रहेनछ भने त्यस्तो पत्रपत्रिका प्रकाशन गर्न स्थायी प्रमाणपत्र दिने गरी प्रेस रजिष्ट्रारले स्वीकृति दिनेछ ।

(५) उपदफा (४) बमोजिम प्रेस रजिष्ट्रारबाट स्वीकृति पाएपछि स्थानीय अधिकारीले सम्बन्धित दरखास्तवालालाई स्थायी प्रमाणपत्र दिनेछ ।

(६) ट्ट दरखास्तवालालाई स्थायी प्रमाणपत्र दिन नमिल्ने उचित कारण भएमा स्थानीय अधिकारीले सोही कुराको जानकारी दरखास्तवालालाई दरखास्त परेको मितिले सामान्यतया तीन महीनाभित्र दिनुपर्नेछ । त्यस्तो जानकारी दिएपछि दरखास्तवालाको अस्थायी प्रमाणपत्र स्वतः खारेज हुनेछ ।

(७) उपदफा (५) बमोजिम प्रमाणपत्र दिएपछि स्थानीय अधिकारीले पत्रपत्रिकासम्बन्धी विवरण दर्ता किताबमा जनाई राख्नुपर्नेछ ।

▲(८) पत्रपत्रिकाको नाम, किसिम र भाषा परिवर्तन गर्नुपर्ने भएमा वा कुनै पत्रपत्रिका एकभन्दा बढी भाषामा प्रकाशित गर्नुपरेमा वा एक जिल्लाबाट

▲ पहिलो संशोधनद्वारा संशोधित ।

प्रकाशित भइरहेको पत्रपत्रिका अन्य जिल्ला वा एकभन्दा बढी जिल्लाबाट प्रकाशित गर्नुपर्ने भएमा उपदफा (१) बमोजिम स्थानीय अधिकारीसमक्ष दरखास्त दिई सोको समेत प्रमाणपत्र लिनुपर्नेछ ।

(९) उपदफा (८) मा लेखिएदेखि बाहेक पत्रपत्रिकासम्बन्धी अन्य विवरणमा कुनै परिवर्तन गर्नुपर्ने भएमा स्वीकृतिको निमित्त त्यसको विवरण प्रकाशकले स्थानीय अधिकारीलाई दिनुपर्नेछ ।

(१०) उपदफा (९) बमोजिम विवरण प्राप्त हुनासाथ स्थानीय अधिकारीले उपदफा (७) बमोजिमको दर्ता किताबमा जनाई त्यसको स्वीकृति सम्बन्धित प्रकाशकलाई दिनुपर्नेछ ।

(११) यस दफाबमोजिम दर्ता भएको पत्रपत्रिकाको विवरणमा भएका परिवर्तनहरूको जानकारी स्थानीय अधिकारीले प्रेस रजिष्ट्रारलाई दिनुपर्नेछ ।

८. **पत्रपत्रिकाको स्वामित्व हस्तान्तरणः** (१) दफा ७ बमोजिम दर्ता भएको पत्रपत्रिकाको प्रकाशनको स्वामित्व कानुनबमोजिम हस्तान्तरण भई कसैले प्राप्त गरेमा सो प्राप्त गर्ने व्यक्तिले सात दिनभित्र त्यसको जानकारी तोकिएको ढाँचामा स्थानीय अधिकारीलाई दिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिमको जानकारी प्राप्त भएपछि स्थानीय अधिकारीले तत्सम्बन्धी विवरण दर्ता किताबमा जनाई त्यसरी पत्रपत्रिकाको स्वामित्व हस्तान्तरण भएको जानकारी प्रेस रजिष्ट्रारलाई दिनुपर्नेछ ।

९. **पत्रपत्रिकामा उल्लेख गर्नुपर्ने :** पत्रपत्रिकामा प्रकाशक, सम्पादक, मुद्रक र छापाखानाको नाम तथा प्रकाशन वर्ष र अङ्क तोकिएबमोजिम स्पष्ट बुझिने गरी उल्लेख गर्नुपर्नेछ ।

□**९क. पत्रपत्रिकाको आकार र पृष्ठ सङ्ख्याः** (१) दफा ७ बमोजिम दर्ता भई प्रकाशित हुने पत्रपत्रिकको न्यूनतम आकार र पृष्ठ सङ्ख्या तोकिएबमोजिम हुनेछ ।

(२) उपदफा (१) बमोजिम तोकिएको आकार र पृष्ठ सङ्ख्यामा घटी गरी प्रकाशित हुने पत्रपत्रिकालाई नेपाल सरकार वा नेपाल सरकारको स्वामित्व भएको संस्थाबाट दिइने सुविधा, सहायता वा विज्ञापन दिइने छैन ।

१०. **पत्रपत्रिकाको प्रककाशनः** प्रकाशकले पत्रपत्रिकाको प्रत्येक संस्करण दफा ७ बमोजिमको दर्ता किताबमा उल्लिखित विवरणमा फरक नपारी प्रकाशित गर्नुपर्नेछ ।

□ पहिलो संशोधनद्वारा थप ।

**११. प्रकाशन बन्द गरेको सूचना दिनुपर्ने :** दफा ७ बमोजिम प्रमाणपत्र लिई सञ्चालन गरेको पत्रपत्रिकाको प्रकाशन बन्द गरेमा सो बन्द गरेको सूचना प्रकाशकले स्थानीय अधिकारीलाई दिनुपर्नेछ ।

**१२. पूर्व प्रतिबन्ध नलगाइने :** दफा १४ र १५ बमोजिमको अवस्थामा बाहेक कुनै पत्रपत्रिकामा कुनै समाचार, लेख वा अन्य कुनै पाठ्यसामग्री प्रकाशित गर्न पूर्व प्रतिबन्ध लगाइने छैन ।

**१३. पत्रपत्रिका दर्ता खारेज नगरिने :** दफा ७ बमोजिम दर्ता भएको कुनै पत्रपत्रिकामा कुनै समाचार, लेख वा पाठ्य सामग्री प्रकाशित गरेबापत त्यस्तो पत्रपत्रिकाको दर्ता खारेज गरिने छैन ।

**१४. प्रकाशनमा प्रतिबन्धः** देहायका कुराहरू किताब वा पत्रपत्रिकामा प्रकाशित गर्न पाइने छैनः-

(क) श्री ५ महाराजाधिराज वा राजपरिवारप्रति घृणा वा निरादर पैदा गराउने वा अपहेलना वा द्वेष बढाउने वा श्री ५ को प्रतिष्ठामा आँच आउने,

(ख) नेपाल अधिराज्यको सार्वभौमसत्ता र अखण्डतामा आँच आउने,

(ग) नेपाल अधिराज्यको सुरक्षा, शान्ति र व्यवस्थामा खलल पर्न जाने,

(घ) विभिन्न जात जाति, धर्म, वर्ग, क्षेत्र, सम्प्रदायका मानिसहरूबीच वैमनस्य उत्पन्न गर्ने तथा साम्प्रदायिक दुर्भावना फैलाउने, र

(ङ) सर्वसाधारण जनताको सदाचार, नैतिकता र सामाजिक मर्यादामा आघात पर्न जाने ।

**१५. प्रकाशनमा निषेधः** (१) राष्ट्रिय हितलाई ध्यानमा राखी नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी कुनै खास विषय, घटना वा क्षेत्रसँग सम्बन्धित समाचार, सूचना वा अन्य कुनै पाठ्यसामग्री सोही सूचनामा तोकिएको अवधिसम्मका लागि प्रकाशित गर्न नपाउने गरी वा □सोही सूचनामा तोकिएको अधिकारीबाट जँचाएर मात्र प्रकाशित गर्न पाउने गरी आदेश जारी गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको आदेश जारी भएपछि कसैले पनि त्यस्तो समाचार, सूचना वा पाठ्यसामग्री प्रकाशन, अनुवाद वा उद्दरण गर्न समेत हुँदैन ।

□ पहिलो संशोधनद्वारा थप ।

१६. **विदेशी प्रकाशनको पैठारीमा नियन्त्रणः** (१) देहायको उद्देश्य भएको वा त्यस्तो सम्भावित परिणाम हुन सक्ने सामग्री भएको विदेशी प्रकाशनको पैठारीमा रोक लगाउने गरी नेपाल सरकारले आदेश जारी गर्न सक्नेछः-

(क) राष्ट्रिय हित र मर्यादाविरुद्ध हुने कुराहरू गर्ने,

(ख) राष्ट्रको शान्ति, व्यवस्था र सुरक्षामा खलल पुऱ्याउने,

(ग) विदेशी राज्य तथा सरकारसँगको सम्बन्धमा खलल पुऱ्याउने,

(घ) विभिन्न जात जाति, धर्म, वर्ग, क्षेत्र, सम्प्रदायका मानिसहरूबीच वैमनस्य उत्पन्न गर्ने तथा साम्प्रदायिक दुर्भावना फैलाउने, र

(घ) सर्वसाधारण जनताको सदाचार, नैतिकता र सामाजिक मर्यादामा आघात पर्न जाने ।

(२) उपदफा (१) बमोजिम रोक लगाइएका प्रकाशन पैठारी हुन लागेको शङ्का लागेमा सम्बन्धित भन्सार वा हुलाक अधिकृतले त्यस्तो माल वस्तु समेत रोकी शंका लागेको प्रकाशनको दुई प्रति स्थानीय अधिकारीकहाँ चलानी साथ पठाई बाँकी आफूकहाँ रोकी राख्नुपर्नेछ ।

(३) उपदफा (२) बमोजिम भन्सार वा हुलाक हाकिमले पठाएको प्रकाशन प्राप्त भएपछि स्थानीय अधिकारीले त्यस्तो प्रकाशन रोक्नुपर्ने कुनै कारण भएमा सो कारणसमेत जनाई पैठारीकर्तालाई सूचना दिनुपर्नेछ र रोक्नुपर्ने कुनै कारण नभए त्यस्तो प्रकाशन प्राप्त भएको बाह्र घण्टाभित्र भन्सार वा हुलाक हाकिमले रोकी राखेको प्रकाशन पैठारीकर्तालाई फिर्ता बुझाउने आदेश दिनुपर्नेछ ।

(४) नेपाल सरकारले आवश्यक देखेमा उपदफा (१) बमोजिम लगाइएको रोक जुनसुकै बखत हटाउन सक्नेछ ।

१७. **प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन निकास, बिक्री वितरण आदि गर्न नहुनु** : (१) कसैले पनि प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन निकासी गर्न हुँदैन ।

(२) कसैले पनि प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन जानी जानी छाप्न, बिक्री वितरण गर्न वा प्रदर्शन गर्न हुँदैन ।

१८. ✖............

✖ पहिलो संशोधनद्वारा खारेज ।

## परिच्छेद –५

## प्रेस रजिष्ट्रार, प्रेस प्रतिनिधि तथा स्वतन्त्र पत्रकारसम्बन्धी व्यवस्था

१९. **प्रेस रजिष्ट्रारः** (१) नेपाल अधिराज्यबाट प्रकाशित हुने पत्रपत्रिकाको सम्पूर्ण विवरणहरूको अभिलेख राख्ने कामको लागि नेपाल सरकारले एक प्रेस रजिष्ट्रारको नियुक्ति गर्नेछ ।

(२) उपदफा (१) बमोजिम नियुक्त भएको प्रेस रजिष्ट्रारको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) दफा ७ बमोजिम पत्रपत्रिकाको स्थायी प्रमाणपत्र दिन स्वीकृति दिने,

(ख) दफा ७ बमोजिम दर्ता भएको पत्रपत्रिकाको सम्पूर्ण विवरण स्थानीय अधिकारीसँग लिई त्यसको अभिलेख राख्ने,

(ग) पत्रपत्रिकाको नाम, भाषा, किसिम, प्रकाशन अवधि, प्रकाशन हुने स्थान आदिमा समय समयमा भएको परिवर्तनका सम्बन्धमा स्थानीय अधिकारीबाट जानकारी लिई अद्यावीधक अभिलेख राख्ने,

(घ) नेपाल अधिराज्यभित्र प्रकाशित हुने पत्रपत्रिकाको नाम, किसिम, प्रकाशन अवधि, भाषा आदि विषयमा वार्षिक प्रतिवेदन तयार गरी प्रकाशित गर्ने,

(ङ) पत्रपत्रिकालाई दिइने सुविधाका सम्बन्धमा नेपाल सरकारलाई सल्लाह दिने,

(च) कसैले पत्रपत्रिकामा विज्ञापन दिने प्रयोजनको लागि कुनै पत्रपत्रिकाको सम्बन्धमा विवरण माग गरेमा तोकिएबमोजिमको शुल्क लिई विवरणहरू दिने,

(छ) यो ऐन वा अन्य प्रचलित कानुनबमोजिम प्रेस रजिष्ट्रारले गर्ने भनी तोकिएको अन्य काम कारबाही गर्ने ।

(३) प्रेस रजिष्ट्रारसम्बन्धी अन्य व्यवस्था तोकिएबमोजिम हुनेछ ।

▲२०. **प्रेस प्रतिनिधि प्रेससिम्बन्धी व्यवस्थाः** (१) कुनै नेपाली वा विदेशी प्रेस वा सञ्चारसम्बन्धी संस्थाले नेपाल अधिराज्यभित्र काम गर्ने आफ्ना प्रतिनिधिहरूको नाम, योग्यता र कार्यक्षेत्र समेत उल्लेख गरी तोकिएबमोजिमको विवरण तोकिएको अधिकारीसमक्ष पठाउनुपर्नेछ ।

तर विदेशी मित्रराष्ट्रका राष्ट्राध्यक्ष वा सरकार प्रमुख वा उच्च स्तरीय प्रतिनिधि मण्डल नेपाल भ्रमणमा आउँदा साथमा आउने पत्रकारहरू वा नेपाल सरकारको निमन्त्रणामा नेपाल भ्रमणमा आउने पत्रकारहरूको लागि उक्त भ्रमणको अवधि भरको लागि त्यस्तो विवरण दिन आवश्यक

▲ पहिलो संशोधनद्वारा संशोधित ।

नपर्ने गरी नेपाल सरकारले छुट दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको विवरण पठाउने प्रेस व सञ्चारसम्बन्धी संस्थाका प्रतिनिधिहरूलाई नेपाल सरकारले प्रेस प्रतिनिधि प्रमाणपत्र दिने व्यवस्था गर्न सक्नेछ ।

(३) नेपालको राष्ट्रिय चाड पर्व वा विशेष अवसरमा छोटो अवधिको लागि नेपाल भ्रमणमा आउने पत्रकारहरूको लागि नेपाल सरकारले अस्थायी प्रेस प्रतिनिधि प्रमाणपत्र दिने व्यवस्था गर्न सक्नेछ ।

(४) उपदफा (२) वा (३) बमोजिम प्रेस प्रतिनिधि प्रमाणपत्र लिन चाहने व्यक्तिले आफू काममा संलग्न रहेको संस्थाको सिफारिससाथ तोकिएबमोजिमको योग्यताको प्रमाणपत्रको प्रतिलिपि संलग्न राखी तोकिएको अधिकारीसमक्ष दरखास्त दिनुपर्नेछ । प्रेस प्रतिनिधि प्रमाणपत्र लिन चाहने स्वतन्त्र पत्रकारले पनि सोहीबमोजिम दरखास्त दिन सक्नेछ ।

(५) उपदफा (४) बमोजिमको दरखास्त प्राप्त भएपछि तोकिएको अधिकारीले त्यस्तो दरखास्तउपर आवश्यक जाँचबुझ गरी तोकिएको दस्तुर लिई तोकिएको ढाँचामा दरखास्तवालालाई प्रेस प्रतिनिधि प्रमाणपत्र वा अस्थायी प्रेस प्रतिनिधि प्रमाणपत्र दिन सक्नेछ ।

(६) उपदफा (५) बमोजिम प्रेस प्रतिनिधि प्रमाणपत्र वा अस्थायी प्रेस प्रतिनिधि प्रमाणपत्र पाएको व्यक्तिले यस ऐन र प्रचलित कानुनको अधिनमा रही आफ्नो कार्य क्षेत्रभित्र समाचार सङ्कलन गर्न सक्नेछ ।

(७) प्रेस प्रतिनिधि तथा स्वतन्त्र पत्रकारसम्बन्धी अन्य व्यवस्था तोकिएबमोजिम हुनेछ ।

## परिच्छेद –६

## दण्ड सजाय

२१. **प्रमाणपत्र नलिई छापाखाना सञ्चालन गरेमाः** (१) कसैले दफा ३ बमोजिम प्रमाणपत्र नलिई छापाखाना सञ्चालन गरेमा स्थानीय अधिकारीले त्यस्तो व्यक्तिलाई दश हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(२) कसैले दफा ३ को उपदफा (४) बमोजिम परिवर्तन भएको विवरण नसच्याई छापाखाना सञ्चालन गरेमा स्थानीय अधिकारीले त्यस्तो व्यक्तिलाई तीन हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

२२. **झुट्टा विवरण दिएमाः** कसैले दफा ३ र ७ अनुसार दिएको विवरण जानी जानी झुट्टा दिएको ठहरेमा निजलाई स्थानीय अधिकारीले तीन हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

२३. **किताब नबुझाएमा:** कसैले दफा ५ बमोजिम बुझाउनुपर्ने किताब नबुझाएमा स्थानीय अधिकारीले बुझाउनुपर्ने किताबको मूल्य र सो मूल्य बराबरको रकम जरिवाना गर्न सक्नेछ ।

२४. **उल्लेख गर्नुपर्ने कुरा उल्लेख नगरेमा:** कुनै प्रकाशकले दफा ६ र ९ अनुसार किताब वा पत्रपत्रिकामा उल्लेख गर्नुपर्ने कुरा उल्लेख नगरेमा त्यस्तो प्रकाशकलाई स्थानीय अधिकारीले पाँच हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

२५. ×.............

२६. **अनधिकृत तबरले प्रकाशन प्रकाशित गरेमा:** (१) कसैले दफा ७ बमोजिम प्रमाणपत्र नलिइकन कुनै प्रकाशन प्रकाशित गरेमा त्यस्तो व्यक्तिलाई पाँच हजार रुपैयाँसम्म जरिवाना वा छ महिनासम्म कैद वा दुवै सजाय हुनेछ ।

(२) कसैले दफा ७ को उपदफा (९) बमोजिम परिवर्तन भएको विवरण नसच्याई प्रकाशन प्रकाशित गरेमा त्यस्ता व्यक्तिलाई स्थानीय अधिकारीले तीन हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

२७. **प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन प्रकाशित गरेमा:** कसैले दफा १४ बमोजिम प्रतिबन्ध लगाइएको वा दफा १५ बमोजिम निषेध गरेको कुनै कुरा प्रकाशन गरेमा त्यस्तो प्रकाशक वा सम्पादकलाई सो काम गरेबापत प्रचलित कानुनले कुनै सजाय हुने रहेछ भने सोहीबमोजिम सजाय हुनेछ र सो नभएमा दश हजार रुपैयाँसम्म जरिवाना वा एकवर्षसम्म कैद वा दुबै सजाय हुनेछ ।

२८. **प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन निकासी, बिक्री वितरण आदि गरेमा:** (१) कसैले प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन निकासी गरेमा निजलाई स्थानीय अधिकारीले पाँच हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो प्रकाशन जफतसमेत गर्न सक्नेछ ।

(२) कसैले प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन जानी जानी छापेमा वा बिक्री वितरण गरेमा वा प्रदर्शन गरेमा स्थानीय अधिकारीले त्यस्तो व्यक्तिलाई पाँच हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो प्रकाशन

× पहिलो संशोधनद्वारा खारेज ।

जफतसमेत गर्न सक्नेछ ।

२९. **निषेधित प्रकाशन अनुवाद तथा उद्धरण गरेमाः** कसैले निषेधित प्रकाशन अनुवाद तथा उद्धरण गरेमा त्यस्तो व्यक्तिलाई स्थानीय अधिकारीले पाँच हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो प्रकाशन जफतसमेत गर्न सक्नेछ ।

३०. **विदेशी प्रकाशन पैठारी गरेमाः** कसैले दफा १६बमोजिम रोक लगाइएको विदेशी प्रकाशन पैठारी गरेमा स्थानीय अधिकारीले त्यस्तो व्यक्तिलाई पाँच हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो प्रकाशन जफतसमेत गर्न सक्नेछ ।

▲३१. **प्रेस प्रतिनिधिको प्रमाणपत्र नलिई काम गरेमाः** (१) दफा २० को उपदफा (५) बमोजिम प्रमाणपत्र नपाएको व्यक्तिलाई नेपाल सरकार वा नेपाल सरकारको स्वामित्वमा रहेको संस्थाबाट प्रेस प्रतिनिधिलाई दिइने सुविधा, सहायता वा सहुलियत दिइने छैन ।

(२) दफा २० को उपदफा (१) बमोजिमको विवरण उपलब्ध नगराउने प्रेस वा सञ्चारसम्बन्धी संस्थालाई नेपाल सरकार वा नेपाल सरकारको स्वामित्वमा रहेको संस्थाबाट दिइने सुविधा, सहायता वा सहुलित दिइने छैन ।

(३) दफा २० को उपदफा (५) बमोजिम प्रमाणपत्र पाएको कुनै व्यक्तिले नेपाल सरकार वा नेपाल सरकारको स्वामित्वमा रहेको संस्थाबाट पाएको सुविधा, सहायता वा सहुलियत दुरुपयोग गरेमा नेपाल सरकारले त्यस्तो व्यक्तिको प्रमाणपत्र अवधि तोकी निलम्बन गर्न, फिर्ता लिन वा रद्द गर्न सक्नेछ ।

(४) दफा २० को उपदफा (५) बमोजिम प्रमाणपत्र पाएको कुनै विदेशी प्रेस प्रतिनिधिको क्रियाकलाप राष्ट्रिय हित प्रतिकूल छ भन्ने लागेमा नेपाल सरकारले त्यस्तो व्यक्तिको प्रेस प्रतिनिधि प्रमाणपत्र फिर्ता लिन वा रद्द गर्न सक्नेछ ।

३२. **पुनरावेदनः** यस परिच्छेदबमोजिम स्थानीय अधिकारीले गरेको निर्णयउपर चित्त नबुझ्ने व्यक्तिले सो निर्णय भएको मितिले पैँतीस दिनभित्र तोकिएको अदालतमा पुनरावेदन दिन सक्नेछ ।

---

▲ पहिलो संशोधनद्वारा संशोधित ।

## परिच्छेद–७
## विविध

**३३. क्षतिपूर्ति पाउने :** यस ऐनबमोजिम जफत गरिएको प्रकाशन प्रतिबन्धित प्रकाशन वा निषेधित प्रकाशन नठहरेमा वा जुन अभियोगबापत जफत भएको हो सो अभियोग प्रमाणित नभएमा प्रकाशक वा धनीले नेपाल सरकारबाट निम्नानुसार क्षतिपूर्ति पाउनेछः-

(क) मूल्य तोकिएको प्रकाशन जफत भएकोमा त्यस्तो प्रकाशन बिक्री गर्दा प्रकाशक वा धनीले पाउन सक्ने वास्तविक मोल बराबरको रकममा नबढाई,

तर किताबको हकमा प्रकाशक वा किताब धनीले किताब फिर्ता बुझी लिएमा क्षतिपूर्ति पाउने छैन ।

(ख) मूल्य किटान नभएको अन्य सामग्रीको हकमा त्यस्तो सामग्री प्राप्त वा प्रकाशित गर्दा बेहोर्नु परेको वास्तविक मूल्यमा नबढाई ।

**३४. सम्पादक वा प्रेस प्रतिनिधिको योग्यताः** यस ऐनबमोजिम प्रमाणपत्र लिई प्रकाशन हुने पत्रपत्रिकाको सम्पादक हुन तथा प्रेस प्रतिनिधि भई काम गर्ने व्यक्तिको योग्यता तोकिएबमोजिम हुनेछ ।

**३५. पत्रपत्रिकाको श्रेणी विभाजनः** तोकिएको अधिकारीले पत्रपत्रिकालाई तोकिएको आधारमा श्रेणी विभाजन गर्न सक्नेछ । यसरी श्रेणी विभाजन गर्नु पर्दा तोकिएको अधिकारीले प्रेस काउन्सिलसँग परामर्श लिनुपर्नेछ ।

**३६. नगरेकेको कामबापत नाम प्रकाशित गरेमाः** कुनै व्यक्तिको नाम, सम्पादक, प्रकाशक वा मुद्रक भनी कुनै किताब वा पत्रपत्रिकामा प्रकाशित भएको रहेछ र सो कुरा निजले नगरेको भए त्यस्तो कुरा प्रकाशित भएको थाहा पाएपछि स्थानीय अधिकारीसमक्ष जुन व्यहोराबाट आफ्नो नाम छापिन गएको छ सो व्यहोरालाई खण्डन गरी सूचना गर्न सक्नेछ ।

**३७. नेपाल सरकार बादी हुनेः** यस ऐनअन्तर्गतको मुद्दा नेपाल सरकार बादी हुनेछ ।

**३८. अधिकार सुम्पन सक्ने :** नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी यस ऐनअन्तर्गत आफूले पाएको अधिकार मध्ये कुनै वा

सबै अधिकार कुनै अधिकारीले प्रयोग गर्न पाउने गरी सुम्पन सक्नेछ ।

३९. **नियम बनाउने अधिकार**: यस ऐनको उद्देश्य कार्यान्वयन गर्न नेपाल सरकारले नियमहरू बनाउन सक्नेछ ।

४०. **यस ऐनबमोजिम हुने** : यस ऐनमा लेखिए जति कुरामा यसै ऐनबमोजिम र अन्य प्रचलित कानुनबमोजिम हुनेछ ।

४१. **बचाउ** : यो ऐन लागू हुनुभन्दा अघि पाएको प्रमाणपत्र यसै ऐनबमोजिम पाए सरह मानिनेछ ।

४२. **खारेजी**: छापाखाना र प्रकाशन सम्बन्धी ऐन, २०३९ खारेज गरिएको छ ।

---

**द्रष्टव्य** : १. केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहाय शब्दको सट्टा देहायको शब्द राखी रूपान्तरण गरेकोछ :
'श्री ५ सरकार' को सट्टा 'नेपाल सरकार'

# छापाखाना र प्रकाशनसम्बन्धी नियमावली, २०४९

नेपाल राजपत्रमा प्रकाशित मिति
२०४९।५।८

छापाखाना र प्रकाशनसम्बन्धी ऐन, २०४८ को दफा ३९ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरू बनाएको छ ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भ** : (१) यो नियमहरूको नाम "छापाखाना र प्रकाशन सम्बन्धी नियमावली, २०४९" रहेको छ ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस नियमावलीमा-

(क) "ऐन" भन्नाले छापाखाना र प्रकाशनसम्बन्धी ऐन, २०४८ सम्झनुपर्छ ।

(ख) "महानिर्देशक" भन्नाले नेपाल सरकार, □प्रेस सूचना विभागका महानिर्देशक सम्झनुपर्छ ।

३. **छापाखाना दर्ता गराउनुपर्ने** : (१) ऐनको दफा ३ बमोजिम छापाखाना सञ्चालन गर्न चाहने व्यक्तिले अनुसूची-१ बमोजिमको ढाँचामा स्थानीय अधिकारीसमक्ष दरखास्त दिनुपर्नेछ ।

(२) उपनियम (१) बमोजिमको दरखास्त प्राप्त भएपछि स्थानीय अधिकारीले एक हजार रुपैयाँ दस्तुर लिई दरखास्तवालालाई छापाखाना सञ्चालन गर्न अनुसूची-२ बमोजिमको ढाँचामा प्रमाणपत्र दिनुपर्नेछ ।

(३) उपनियम (२) बमोजिम प्रमाणपत्र दिएपछि स्थानीय अधिकारीले छापाखाना सम्बन्धी विवरण अनुसूची-३ बमोजिमको दर्ता किताबमा जनाइ राख्नुपर्नेछ ।

४. **पत्रपत्रिका दर्ता गराउनुपर्ने** : (१) ऐनको दफा ७ बमोजिम देहायका पत्रपत्रिका प्रकाशित गर्न चाहने व्यक्तिले देहायबमोजिमको दस्तुरसहित

□ हाल सूचना विभाग कायम रहेको ।

अनुसूची-४ बमोजिमको ढाँचामा स्थानिय अधिकारीसमक्ष दरखास्त दिनुपर्नेछ ।

(क) दैनिक समाचारपत्रको लागि - रु. १०००।-

(ख) अर्ध साप्ताहिक समाचारपत्रको लागि - रु. ७००।-

(ग) साप्ताहिक समाचारपत्रको लागि - रु. ५००।-

(घ) पाक्षिक समाचारपत्रको लागि - रु. ३००।-

(ङ) मासिक र अन्य समाचारपत्रको लागि - रु. २००।-

(च) अन्य पत्रपत्रिकाको लागि - रु. २००।-

(२) उपनियम (१) बमोजिमको दरखास्त प्राप्त भएपछि स्थानीय अधिकारीले दरखास्तवालालाई पत्रपत्रिका प्रकाशन गर्न अनुसूची-५ बमोजिमको ढाँचामा अस्थायी प्रमाणपत्र दिनेछ ।

(३) ऐनको दफा ७ को उपदफा (४) बमोजिम प्रेस रजिष्ट्रारले पत्रपत्रिका प्रकाशन गर्न स्थायी प्रमाणपत्र दिने गरी स्वीकृति दिएपछि स्थानीय अधिकारीले दरखास्तवालालाई अनुसूची-६बमोजिमको ढाँचामा पत्रपत्रिका प्रकाशन गर्न स्थायी प्रमाणपत्र दिनेछ ।

(४) उपनियम (३) बमोजिम प्रमाणपत्र दिएपछि स्थानीय अधिकारीले पत्रपत्रिकासम्बन्धी विवरण अनुसूची -७ बमोजिमको दर्ता किताबमा जनाइ राख्नुपर्नेछ ।

(५) ऐनको दफा ७ को प्रतिबन्धात्मक वाक्यांशबमोजिम दर्ता गर्न आवश्यक नपर्ने पत्रपत्रिका पनि दर्ता गरी पाउँ भनी कसैले उपनियम (१) बमोजिम दरखास्त दिएमा स्थानीय अधिकारीले त्यस्तो पत्रपत्रिका समेत दर्ता गरी दिनुपर्नेछ ।

तर,

(क) यसरी दर्ता भएका पत्रपत्रिकालाई उपनियम (१) बमोजिमको दस्तुर लाग्ने छैन ।

(ख) यसरी दर्ता हुने पत्रपत्रिकाका सम्पादकलाई नियम १५ बमोजिमको योग्यतासम्बन्धी व्यवस्था लागू हुने छैन ।

५. **पत्रपत्रिकाको स्वामित्व हस्तान्तरण भएमा :** (१) ऐनको दफा ८ बमोजिम पत्रपत्रिकाको प्रकाशनको स्वामित्व हस्तान्तरणद्वारा प्राप्त गर्ने व्यक्तिले सोको जानकारी अनुसूची-८ बमोजिमको ढाँचामा स्थानीय अधिकारीलाई दिनुपर्नेछ ।

(२) उपनियम (१) बमोजिमको जानकारी प्राप्त भएपछि स्थानीय अधिकारीले त्यस्तो विवरण अनुसूची-७ बमोजिमको दर्ता किताबमा जनाइ राख्नुपर्नेछ ।

६. **पत्रपत्रिकामा उल्लेख गर्नुपर्ने :** (१) पत्रपत्रिकाको पहिलो पृष्ठको शिरमा स्थानीय अधिकारीबाट दिइएको दर्ता नम्बर, सो पत्रपत्रिकाको नाम, प्रकार, वर्ष, अङ्क, मिति र मूल्य तथा अरू पृष्ठको शिरमा पत्रपत्रिकाको नाम र मिति स्पष्ट रूपमा उल्लेख गर्नुपर्नेछ ।

(२) पत्रपत्रिकाको अन्तिम पृष्ठको पुछारमा वा सम्पादकीय कोलमको शिरमा प्रकाशक, सम्पादक, मुद्रक र छापाखानाको नाम स्पष्ट रूपमा उल्लेख गर्नुपर्नेछ ।

७. **पत्रपत्रिकाको आकार र पृष्ठ सङ्ख्या :** (१) देहायको पत्रपत्रिका देहायको न्यूनतम आकार र पृष्ठ सङ्ख्यामा प्रकाशित गर्नुपर्नेछ :

(क) दैनिक समाचारपत्रको लागि १२" x २१" को आधारमा ४ पृष्ठमा नघटाई,

(ख) अर्ध साप्ताहिक र साप्ताहिक समाचारपत्रको लागि १०" x १५" को आकारमा ६ पृष्ठमा नघटाई, र

(ग) पाक्षिक, मासिक, द्वैमासिक र त्रैमासिक समाचारपत्रको लागि ९" x १५" को आकारमा १२ पृष्ठमा नघटाई,

(२) प्रकाशकले ६ महिनामा देहायका पत्रपत्रिका देहायको अङ्कमा नघटाई प्रकाशित गर्नुपर्नेछ :

(क) दैनिक समाचारपत्र १५० अङ्क

(ख) अर्घ-साप्ताहिक समाचारपत्र ४० अङ्क

(ग) साप्ताहिक समाचारपत्र २० अङ्क

(घ) पाक्षिक समाचारपत्र १० अङ्क

(ङ) मासिक समाचारपत्र ५ अङ्क

(च) द्वैमासिक र त्रैमासिक समाचारपत्र २ अङ्क

८. **दस्तुर लिई विवरण दिन सकिने :** कसैले पत्रपत्रिकामा विज्ञापन दिनको लागि कुनै पत्रपत्रिकाको सम्बन्धमा विवरण माग गरेमा प्रेस रजिष्ट्रारले एक सय रुपैयाँ शुल्क लिई विवरण दिन सक्नेछ ।

**९. प्रेस प्रतिनिधिको प्रमाणपत्र :** (१) कुनै नेपाली वा विदेशी प्रेस वा सञ्चालन सम्बन्धी संस्थाले नेपालभित्र काम गर्ने आफ्नो प्रतिनिधिहरूको विवरण अनुसूची- ९ बमोजिमको ढाँचामा महानिर्देशकसमक्ष पठाउनुपर्नेछ ।

(२) प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधिको प्रमाणपत्र लिन चाहने व्यक्तिले आफू काममा संलग्न रहेको संस्थाको सिफारिससाथ नियम १५ मा उल्लेखित योग्यताको प्रमाणपत्रसमेत संलग्न राखी अनुसूची-१० बमोजिमको ढाँचामा महानिर्देशकसमक्ष दरखास्त दिनुपर्नेछ ।

तर प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधिको प्रमाणपत्र लिन चाहने विदेशी नागरिकले योग्यताको प्रमाणपत्र पेस गर्न आवश्यकपर्ने छैन ।

(३) उपनियम (२) बमोजिमको दरखास्त प्राप्त भएपछि महानिर्देशकले उक्त दरखास्तउपर आवश्यक जाँचबुझ गरी आफ्नो राय सहित सो दरखास्त नेपाल सरकार, सञ्चार मन्त्रालयमा पठाउनुपर्नेछ ।

(४) उपनियम (३) बमोजिम प्राप्त हुन आएको दरखास्तउपर नेपाल सरकार, सञ्चार मन्त्रालयले दरखास्तवालालाई मागबमोजिमको प्रमाणपत्र दिने स्वीकृति दिन सक्नेछ ।

(५) उपनियम (४) बमोजिम दरखास्तवालालाई प्रमाणपत्र दिने गरी नेपाल सरकार, सञ्चार मन्त्रालयबाट स्वीकृति भएमा महानिर्देशकले नियम १२ बमोजिमको दस्तुर लिई दरखास्तवालालाई अनुसूची-११ बमोजिमको ढाँचामा प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधिको प्रमाणपत्र दिनेछ ।

**१०. स्वतन्त्र पत्रकारसम्बन्धी व्यवस्था :** (१) स्वतन्त्र पत्रकारको प्रमाणपत्र लिन चाहने व्यक्तिले नियम १५ बमोजिमको योग्यताको प्रमाणपत्र समेत संलग्न राखी अनुसूची-१२ बमोजिमको ढाँचामा महानिर्देशक समक्ष दरखास्त दिनुपर्नेछ ।

(२) उपनियम (१) बमोजिमको दरखास्त प्राप्त भएपछि महानिर्देशकले आफ्नो राय सहित उक्त दरखास्त नेपाल सरकार, सञ्चार मन्त्रालयमा पठाउनुपर्नेछ ।

(३) उपनियम (२) बमोजिम प्राप्त हुन आएको दरखास्तउपर नेपाल सरकार, सञ्चार मन्त्रालयले दरखास्तवालालाई स्वतन्त्र पत्रकारको प्रमाणपत्र दिने गरी स्वीकृति दिन सक्नेछ ।

(४) उपनियम (३) बमोजिम दरखास्तवालालाई प्रमाणपत्र दिने गरी नेपाल सरकार, सञ्चार मन्त्रालयबाट स्वीकृति भएमा महानिर्देशकले

नियम १२ बमोजिमको दस्तुर लिई दरखास्तवालालाई अनुसूची-१३ बमोजिमको ढाँचामा स्वतन्त्र पत्रकारको प्रमाणपत्र दिनेछ ।

११. **प्रमाणपत्रको अवधि र नवीकरण** : (१) नियम ९ वा १० बमोजिम दिइएको प्रमाणपत्रको अवधि तीन आर्थिक वर्षसम्म बहाल रहनेछ ।

तर अस्थायी प्रेस प्रतिनिधिको प्रमाणपत्र जति समयको लागि दिइएको छ सोही अवधिसम्म मात्र बहाल रहनेछ ।

(२) उपनियम (१) बमोजिम प्रमाणपत्र बहाल रहने अवधि समाप्त भएको मितिले ३५ दिनभित्र प्रमाणपत्र नवीकरण गराउन पचास रुपैयाँ दस्तुरसहित अनुसूची-१४ बमोजिमको ढाँचामा महानिर्देशक समक्ष दरखास्त दिनुपर्नेछ ।

(३) उपनियम (२) बमोजिमको म्याद नाघेपछि कुनै व्यक्तिले प्रमाणपत्र नवीकरणको लागि दरखास्त दिन आएमा महानिर्देशकले उपनियम (२) बमोजिम लाग्ने दस्तुरमा देहायबमोजिमको थप दस्तुर लिई नवीकरण गरी दिन सक्नेछ :

(क) उपनियम (२) बमोजिमको म्याद नाघेको तीन महिनासम्मको लागि - रु. ५०।-

(ख) खण्ड (क) को म्याद नाघेपछिको असार मसान्तसम्मको लागि - रु. १५०।-

(४) उपनियम (३) बमोजिम म्यादभित्र पनि प्रमाणपत्र नवीकरण नगराएमा त्यस्तो प्रमाणपत्र स्वतः खारेज हुनेछ ।

(५) यस नियमबमोजिम विदेशी नागरिकले लिएको प्रमाणपत्र दुई पटकभन्दा बढी नवीकरण गरिने छैन ।

१२. **प्रमाणपत्रको दस्तुर** : नियम ९ वा १० बमोजिम प्रमाणपत्र लिनको लागि देहायबमोजिम दस्तुर लाग्नेछ :-

(क) प्रेस प्रतिनिधि -

(१) नेपाली नागरिकको लागि - रु. ३००।-

(२) विदेशी नागरिकको लागि - रु. १५००।-

(ख) अस्थायी प्रेस प्रतिनिधिको लागि - रु. ९००।-

(ग) स्वतन्त्र पत्रकारको लागि - रु. ६००।-

१३. **समाचार सङ्कलन गर्ने कार्यक्षेत्र** : (१) प्रेस प्रतिनिधि वा स्वतन्त्र पत्रकारको प्रमाणपत्र प्राप्त नेपाली नागरिकले नेपालभर समाचार सङ्कलन गर्न सक्नेछ ।

(२) प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधिको प्रमाणपत्र प्राप्त विदेशी नागरिकले प्रमाणपत्रमा तोकिएको क्षेत्रमा मात्र समाचार सङ्कलन गर्न सक्नेछ ।

१४. **अदालत तोकिएको :** ऐनको दफा ३२ को प्रयोजनको लागि सम्बन्धित पुनरावेदन अदालत तोकिएको छ ।

१५. **सम्पादक, प्रेस प्रतिनिधि तथा स्वतन्त्र पत्रकारको योग्यता :** सम्पादक, प्रेस प्रतिनिधि वा स्वतन्त्र पत्रकार हुनको लागि देहायबमोजिमको योग्यता हुनुपर्नेछ :

(१) सम्पादक हुनको लागि -

(क) नेपाल सरकारबाट मान्यता प्राप्त कुनै शिक्षण संस्थाबाट स्नातक वा सो सरहको परीक्षा उत्तीर्ण गरेको, वा

(ख) नेपाल सरकारबाट मान्यता प्राप्त कुनै शिक्षण संस्थाबाट प्रवेशिका परीक्षा उत्तीर्ण भई नियमित रूपमा प्रकाशित हुने कुनै समाचार प्रधान दैनिक, अर्ध साप्ताहिक, साप्ताहिक वा पाक्षिक पत्रपत्रिका वा समाचार समितिमा समाचार सङ्कलन तथा सम्पादनसम्बन्धमा कम्तीमा दश वर्षसम्म काम गरेको ।

(२) प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधि हुनको लागि -

(क) नेपाल सरकारबाट मान्यता प्राप्त कुनै शिक्षण संस्थाबाट प्रवेशिका वा सो सरहको परीक्षा उत्तीर्ण गरेको, वा

(ख) समाचार सङ्कलन वा रिपोर्टिङसम्बन्धमा कम्तीमा पाँचवर्ष काम गरेको ।

(३) स्वतन्त्र पत्रकारको लागि -

(क) नेपाल सरकारबाट मान्यता प्राप्त कुनै शिक्षण संस्थाबाट पत्रकारितासम्बन्धी विषयमा स्नातक परीक्षा उत्तीर्ण भई दश वर्ष वा सोभन्दा बढी अवधिसम्म पत्रपत्रिकाको सम्पादन वा स्तम्भ लेखनको काम गरेको, वा

(ख) नेपाल सरकारबाट मान्यता प्राप्त कुनै शिक्षण संस्थाबाट स्नातक वा सो सरहको परीक्षा उत्तीर्ण भई पन्ध्र वर्ष वा सो भन्दा बढी अवधिसम्म पत्रपत्रिकाको सम्पादन वा स्तम्भ लेखनको काम गरेको ।

१६. **प्रमाणपत्र व्यक्तिगत हुने** : (१) नियम ९ वा १० बमोजिम दिइएको प्रमाणपत्र सोही व्यक्ति बाहेक अन्य व्यक्तिले प्रयोग गर्न पाउने छैन ।

(२) कुनै व्यक्तिले सम्बन्धित संस्था वा पत्रपत्रिकाको प्रतिनिधित्व गर्ने काम छाडेमा निजले वा सम्बन्धित संस्थाको व्यवस्थापक वा सम्पादकले सात दिनभित्र त्यसरी काम छाडेको सूचना महानिर्देशकसमक्ष दिई प्राप्त प्रमाणपत्र फिर्ता गर्नुपर्नेछ ।

१७. **पत्रपत्रिकाको श्रेणी विभाजन** : नेपाल सरकार, सञ्चार मन्त्रालयले यस ऐनबमोजिम दर्ता भएका पत्रपत्रिकालाई सहयोग तथा सुविधा दिने प्रयोजनको लागि श्रेणी विभाजन गर्दा प्रेस रजिष्ट्रारको कार्यालय र प्रेस काउन्सिलले दिएको प्रतिवेदनको आधारमा गर्नेछ ।

१८. **अनुसूचीमा हेरफेर गर्न सकिने** : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी यस नियमावलीको अनुसूचीमा आवश्यकताअनुसार हेरफेर गर्न सक्नेछ ।

१९. **खारेजी** : छापाखाना र प्रकाशनसम्बन्धी नियमावली, २०४० खारेज गरिएको छ ।

फोटो

**अनुसूची – १**
**(नियम ३ को उपनियम (१) सँग सम्बन्धित)**
**छापाखाना सञ्चालन गर्ने प्रमाणपत्रको लागि**
**दरखास्त**

श्री स्थानीय अधिकारीज्यू ।
................................

छापाखाना सञ्चालन गर्ने प्रमाणपत्र पाउनको लागि छापाखाना सम्बन्धी निम्न विवरणहरू खुलाई दुई प्रति फोटो र रु. १।- को टिकट टाँसी यो दरखास्त पेस गरेको छु/छौं ।

१. छापाखानाको विवरण :-
   (क) नाम :-
   (ख) किसिम :-
   (ग) क्षमता :-
   (घ) औजारको नाम, विवरण र सङ्ख्या :-
२. छापाखाना राख्ने स्थान :-
३. छापाखाना प्राप्त गरेको श्रोत :-
   (क) स्वदेशमा किनेको
   (ख) विदेशबाट झिकाएको
४. छापाखाना स्थापना गर्दा लागेको पुँजी
५. छापाखानामा गरिने काम :-
६. छापाखानासम्बन्धी अन्य विवरण :-

**दरखास्तवालाको**
सही :-
नाम :-
ठेगाना :-
मिति :-

## अनुसूची – २
**(नियम ३ को उपनियम (२) सँग सम्बन्धित)**
**छापाखाना सञ्चालन गर्ने प्रमाणपत्र**

सि. नं.

द. नं.

श्री..............................

...................................

तपाईंलाई/तपाईंहरूलाई देहायको स्थानमा निम्न विवरणको छापाखाना सञ्चालन गर्न पाउने गरी यो प्रमाणपत्र दिइएको छ :

१. छापाखाना राख्ने स्थान :-

(क) वडा नं. :-

(ख) गाउँ/नगर :-

(ग) जिल्ला :-

२. छापाखानाको किसिम :-

(क)

(ख)

(ग)

(घ)

कार्यालयको छाप

**स्थानीय अधिकारीको**

सही :-

नाम :-

दर्जा :-

कार्यालय :-

मिति :-

**अनुसूची – ३**
**(नियम ३ को उपनियम (३) सँग सम्बन्धित)**
**छापाखानासम्बन्धी विवरणको**
**दर्ता किताब**

आ.व. :-

| दर्ता नं. | छापाखानाको नाम | छापाखाना धनीको नाम र ठेगाना | मुख्य मेसिनहरूको विवरण | कैफियत |
|---|---|---|---|---|
| | | | | |

**अनुसूची – ४**
**(नियम ४ को उपनियम (१) सँग सम्बन्धित)**
**पत्रपत्रिका प्रकाशित गर्ने प्रमाणपत्रको लागि**
**दरखास्त**

फोटो

श्री स्थानीय अधिकारीज्यू ।

..................................

निम्न विवरणको पत्रपत्रिका प्रकाशित गर्ने प्रमाणपत्र पाउनको लागि पत्रपत्रिकासम्बन्धी निम्न विवरणहरू खुलाई दुई प्रति फोटो र रु. १।- को टिकट टाँसी यो दरखास्त पेस गरेको छु/छौं ।

१. पत्रपत्रिकाको विवरण :-

(क) नाम :-

(ख) किसिम :-

(ग) भाषा :-

(घ) आकार :-

(ङ) पृष्ठ सङ्ख्या :-

(च) छापिने सङ्ख्या :-

(छ) प्रकाशित हुने स्थान :-

(ज) प्रकाशित हुने दिन :-

२. पत्रपत्रिकाको कार्यालय रहने स्थान :-

(क) स्थायी

(ख) अस्थायी

३. सम्पादकको नाम र ठेगाना :-

४. सम्पादकको योग्यता :-

५. मुद्रकको नाम र ठेगाना :-

६. अन्य विवरण :-

दरखास्तवालाको
सही :-
नाम :-
ठेगाना :-

## अनुसुसूचूची – ५
**(नियम ४ को उपनियम (२) सँग सम्बन्धित)**
**पत्रपत्रिका प्रकाशित गर्ने अस्थायी प्रमाणपत्र**

फोटो

सि. नं.
द.नं.
श्री......................
..........................

तपाईंलाई/तपाईंहरूलाई निम्न विवरणको पत्रपत्रिका प्रकाशित गर्नको लागि यो अस्थायी प्रमाणपत्र दिइएको छ ।

१. पत्रपत्रिकाको विवरण :-
  (क) नाम :-
  (ख) किसिम :-
  (ग) भाषा :-
  (घ) आकार :-
  (ङ) पृष्ठ संख्या :-
  (च) छापिने संख्या :-
  (छ) प्रकाशित हुने स्थान :-
  (ज) प्रकाशित हुने दिन :-
२. पत्रपत्रिकाको कार्यालय रहने स्थान :-
  (क) वडा नं. :-
  (ख) गाउँ/नगर :-
  (ग) जिल्ला :-

| | |
|---|---|
| ३. सम्पादकको :- स्थानीय अधिकारीको | स्थानीय अधिकारीको |
| (क) नाम :- सही :- | सही :- |
| (ख) ठेगाना :- नाम :- | नाम :- |
| (ग) योग्यता :- दर्जा :- | दर्जा :- |
| ४. मुद्रकको नाम र ठेगाना :- कार्यालय :- | कार्यालय :- |
| ५ अन्य विवरण :- मिति :- | मिति :- |

कार्यालयको छाप

फोटो

**अनुसूची – ६**

**(नियम ४ को उपनियम (३) सँग सम्बन्धित)**

**पत्रपत्रिका प्रकाशित गर्ने स्थायी प्रमाणपत्र**

सि. नं.

द.नं.

श्री........................

...........................

तपाईँलाई/तपाईँहरूलाई निम्न विवरणको पत्रपत्रिका प्रकाशित गर्नको लागि यो स्थायी प्रमाणपत्र दिइएको छ।

१. पत्रपत्रिकाको विवरण :-
   क. नाम :-
   ख. किसिम :-
   ग. भाषा :-
   घ. आकार :-
   ङ. पृष्ठ सङ्ख्या :-
   च. छापिने सङ्ख्या :-
   छ. प्रकाशित हुने स्थान :-
   ज. प्रकाशित हुने दिन :-

२. पत्रपत्रिकाको कार्यालय रहने स्थान :-
   क. वडा नं. :-
   ख. गाउँ/नगर :-
   ग. जिल्ला :-

३. सम्पादकको :- स्थानीय अधिकारीको
   क. नाम :- सही :-
   ख. ठेगाना :- नाम :-
   ग. योग्यता :- दर्जा :-

४. मुद्रकको नाम र ठेगाना :- कार्यालय :-

५ अन्य विवरण :- मिति :-

स्थानीय अधिकारीको
सही :-
नाम :-
दर्जा :-
कार्यालय :-
मिति :-

कार्यालयको छाप

# अनुसूची - ७
## (नियम ४ को उपनियम (४) सँग सम्बन्धित)
## पत्रपत्रिकाको दर्ता किताब

आ.व.:-

| द. नं. | पत्रिकाको नाम | किसिम | भाषा | आकार | पृष्ठ सङ्ख्या | छापिने | प्रकाशित हुने स्थान | प्रकाशित हुने दिन | प्रकाशकको नाम | सम्पादकको नाम ठेगाना | मुद्रकको नाम ठेगाना | कैफियत |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | | | | |

**अनुसूची – ८**
**(नियम ५ को उपनियम (१) सँग सम्बन्धित)**
**पत्रपत्रिकाको स्वामित्वको हस्तान्तरण भएको**
**जानकारी**

श्री स्थानीय अधिकारीज्यू,
...................................।

त्यस.............................................................कार्यालयमा मिति........................मा............................को नाउँमा दर्ता भएको द.नं..........................को ............... पत्रपत्रिका मिति........................मा.................बाट मैले/हामीले प्राप्त गरेकोले सो पत्रपत्रिकाको स्वामित्व हस्तान्तरण भएको कागजातको प्रमाणित प्रतिलिपि संलग्न गरी यो जानकारी पेस गरेको छु/छौं । उक्त पत्रपत्रिका मेरो/हाम्रो नाउँमा कायम गरी पाउन अनुरोध गर्दछु/गर्दछौं ।

निवेदकको
सही :-
नाम :-
ठेगाना :-
मिति :-

## अनुसूची – ९
**(नियम ९ को उपनियम (१) सँग सम्बन्धित)**
**प्रेस प्रतिनिधिको लागि**
**विवरण**

श्री महानिर्देशकज्यू,
प्रेस सूचना विभाग,
काठमाडौं ।

हाम्रो संस्थाबाट...................................ले प्रेस प्रतिनिधि भई काम गर्ने भएकोले छापाखाना र प्रकाशनसम्बन्धी ऐन, २०४८ को दफा २० को उपदफा (१) बमोजिम निम्न विवरणहरू पठाइएको छ :

विवरणहरू
१. प्रेस प्रतिनिधि हुनेको शैक्षिक योग्यताको प्रमाणपत्रको प्रतिलिपि
२. प्रेस प्रतिनिधि भई काम गर्नेको कार्यक्षेत्र
३. व्यक्तिगत विवरण फाराम
४. नागरिकताको प्रमाणपत्रको प्रतिलिपि

निवेदकको
सही :-
संस्थाको नाम :-
ठेगाना :-
मिति :-

**अनुसूची – १०**
**(नियम ९ को उपनियम (२) सँग सम्बन्धित)**
**प्रेस प्रतिनिधि । अस्थायी प्रेस प्रतिनिधिको लागि**
**दरखास्त**

फोटो

श्री महानिर्देशकज्यू,
प्रेस सूचना विभाग,
काठमाडौं ।

.................................को तर्फबाट प्रेस प्रतिनिधि/अस्थायी प्रेस प्रतिनिधि भई नेपालभर/................... जिल्लामा मिति................ देखि.....................सम्म काम गर्न इच्छुक भएकोले निम्न कागजातहरू समेत संलग्न गरी दुई प्रति फोटो र रु. १।- को टिकट टाँसी यो दरखास्त पेस गरेको छु । मेरो नाउँमा प्रेस प्रतिनिधि/अस्थायी प्रेस प्रतिनिधिको प्रमाणपत्र पाउन अनुरोध गर्दछु ।

संलग्न कागजातहरू :-
१. सम्बन्धित संस्थाको सिफारिस पत्र
२. नियम १४ बमोजिमको शैक्षिक योग्यताको प्रमाणपत्रको प्रतिलिपि
३. नागरिकताको प्रमाणपत्रको प्रतिलिपि
४. व्यक्तिगत विवरण फाराम
५. दरखास्तवालाको अनुभव ।

दरखास्तावालाको
सही :-
नाम :-
ठेगाना :-
(क) स्थायी :-
(ख) अस्थायी :-
मिति :-

**अनुसूची – ११**
**(नियम ९ को उपनियम (५) सँग सम्बन्धित)**
**प्रेस प्रतिनिधि/अस्थायी प्रेस प्रतिनिधिको**
**प्रमाणपत्र**

फोटो

सि. नं.

द.नं.

श्री...................

.....................।

तपाईँलाई/तपाईहरूलाई देहायको सर्त बन्देजमा रहने गरी प्रेस प्रतिनिधि/अस्थायी प्रेस प्रतिनिधिको रूपमा काम गर्न पाउने गरी यो प्रमाणपत्र दिइएको छ ।

१. प्रमाणपत्र पाउने व्यक्तिको नागरिकता :-
२. प्रमाणपत्र पाउने व्यक्तिको ठेगाना :-
   (क) स्थायी :-
   (ख) अस्थायी :-
३. प्रमाणपत्रको किसिम :-
४. प्रमाणपत्रको अवधि :-
   (क) स्थायी :-
   (ख) अस्थायी :-
५. पत्रपत्रिका वा संस्थाको नाम :-
६. प्रमाणपत्र पाउने व्यक्तिले समाचार सङ्कलन गर्ने क्षेत्र :-
७. प्रमाणपत्र पाउने व्यक्तिले गर्ने काम :-
८. प्रमाणपत्र पाउने व्यक्तिले पालना गर्नुपर्ने सर्तहरू :-
   (क)
   (ख)
   (ग)

महानिर्देशकको
सही :-
कार्यालयको छाप नाम :-
कार्यालय :-
मिति :-

फोटो

**अनुसूची – १२**
**(नियम १० को उपनियम (१) सँग सम्बन्धित)**
**स्वतन्त्र पत्रकारको लागि**
**दरखास्त**

श्री महानिर्देशकज्यू,
प्रेस सूचना विभाग,
काठमाडौं ।

स्वतन्त्र पत्रकार भई काम गर्न इच्छुक भएकोले निम्न कागजात समेत संलग्न गरी दुई प्रति फोटो र रु. १।- को टिकट टाँसी यो दरखास्त पेस गरेको छु । मेरो नाउँमा स्वतन्त्र पत्रकारको प्रमाणपत्र पाउनको निमित्त अनुरोध गर्दछु ।

संलग्न कागजातहरू :-

१. नियम १४ बमोजिमको शैक्षिक योग्यताको प्रमाणपत्रको प्रतिलिपि
२. नागरिकताको प्रमाणपत्रको प्रतिलिपि
३. व्यक्तिगत विवरणको फाराम
४. दरखास्तवालाको अनुभव ।

दरखास्तावालाको
सही :-
नाम :-
ठेगाना :-
(क) स्थायी :-
(ख) अस्थायी :-
मिति :-

**अनुसूची – १३**
**(नियम १० को उपनियम (४) सँग सम्बन्धित)**
**स्वतन्त्र पत्रकारको**
**प्रमाणपत्र**

फोटो

सि. नं.
द.नं.
श्री......................
..........................।

तपाईलाई देहायको सर्त बन्देजमा रहने गरी स्वतन्त्र पत्रकारको रूपमा काम गर्न पाउने गरी यो प्रमाणपत्र दिइएको छ ।

१. प्रमाणपत्र पाउने व्यक्तिको ठेगाना :-
   (क) स्थायी :-
   (ख) अस्थायी :-
२. प्रमाणपत्रको अवधि :-
   (क) स्थायी :-
   (ख) अस्थायी :-
३. प्रमाणपत्र पाउने व्यक्तिले गर्ने काम :-
४. प्रमाणपत्र पाउने व्यक्तिले पालना गर्नुपर्ने सर्तहरू :-
   (क)
   (ख)
   (ग)

महानिर्देशकको
सही :-
कार्यालयको छाप नाम :-
कार्यालय :-
मिति :-

**नवीकरणको विवरण**

| आ. व. | नवीकरण दस्तुर तथा अन्य विवरण | नवीकरण मिति | नवीकरण गर्ने अधिकारीको दस्तखत | कैफियत |
|---|---|---|---|---|
| | | | | |

**अनुसूची – १४**
(**नियम ११ को उपनियम** (२) **सँग सम्बन्धित**)
**प्रमाणपत्र नवीकरणको लागि**
**दरखास्त**

श्री महानिर्देशकज्यू,
प्रेस सूचना विभाग,
काठमाडौं ।

मैले यस विभागबाट मिति..........................मा लिएको प्रेस प्रतिनिधि स्वतन्त्र पत्रकारको प्रमाणपत्रको अवधि मिति......................मा समाप्त भएकोले छापाखाना र प्रकाशनसम्बन्धी नियमावली, २०४९ को नियम ११ बमोजिम लाग्ने दस्तुरसमेत संलग्न राखी प्रमाणपत्र नवीकरणको लागि यो दरखास्त पेस गरेको छु ।

दरखास्तवालाको
सही :-
नाम :-
ठेगाना :-
मिति :-

# श्रमजीवी पत्रकारसम्बन्धी ऐन, २०५१

लालमोहर र प्रकाशन मिति

२०५१।११।२९

संशोधन गर्ने ऐन प्रमाणीकरण र प्रकाशन मिति

| | |
|---|---|
| १. लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ | २०६३।७।१७ |
| २. श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ | २०६४।४।२७ |
| ३. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन,२०६६☺ | २०६६।१०।७ |

२०५१ सालको ऐन नं. ७

**श्रमजीवी पत्रकारको सम्बन्धमा व्यवस्था गर्न बनेको ऐन**

**प्रस्तावना :** श्रमजीवी पत्रकारहरूको हक, हित, सुविधा र सुरक्षाको समयोचित व्यवस्था गर्न तथा निजहरूको व्यावसायिक दक्षता प्रवर्द्धन गर्न प्रोत्साहित गरी स्वच्छ पत्रकारिताको विकास गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको तेइसौं वर्षमा संसदले यो ऐन बनाएकोछ ।

## परिच्छेद – १

## प्रारम्भिक

**१. सङ्क्षिप्त नाम र प्रारम्भः** (१) यस ऐनको नाम “श्रमजीवी पत्रकारसम्बन्धी ऐन, २०५१” रहेको छ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

**२. परिभाषा :** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा,-

☺ यो ऐन २०६५ साल जेठ १५ गतेबाट लागू भएको ।

(क) x..............

❖(ख) "सञ्चार प्रतिष्ठान" भन्नाले सञ्चारसम्बन्धी कुनै व्यवसाय वा सेवा सञ्चालन गर्ने उद्देश्यले तीनजना वा सोभन्दा बढी श्रमजीवी पत्रकार, कर्मचारी वा कामदार कार्यरत रहेको प्रचलित कानुनबमोजिम स्थापना वा दर्ता भएको सार्वजनिक वा निजी सञ्चार माध्यम वा सङ्गठित संस्था सम्झनुपर्छ ।

(ग) "व्यवस्थापक" भन्नाले कुनै सञ्चार प्रतिष्ठानको कार्य सञ्चालनमा अन्तिम निर्णय गर्ने अधिकार प्राप्त व्यक्ति सम्झनुपर्छ ।

❖(घ) "श्रमजीवी पत्रकार" भन्नाले सञ्चार प्रतिष्ठानमा व्यवस्थापकीय तथा प्रशासकीय अधिकार प्राप्त गरेको व्यक्तिबाहेक सञ्चारसम्बन्धी व्यवसाय वा सेवालाई प्रमुख व्यवसाय अपनाई पारिश्रमिक लिई सञ्चार प्रतिष्ठानमा पूर्ण वा आंशिक समय काम गर्ने व्यक्ति सम्झनुपर्छ र सो शब्दले सञ्चार प्रतिष्ठानमा समाचार सामग्री सङ्कलन, उत्पादन, सम्पादन वा सम्प्रेषण गर्ने प्रधान सम्पादक, सम्पादक, संवाददाता, स्ट्रिञ्जर, समाचारवाचक, कार्यक्रम निर्देशक, अनुवादक, वेभ डिजाइनर, स्तम्भ लेखक, फोटो पत्रकार, प्रेस क्यामेरामेन, व्यङ्ग्य चित्रकार, कार्यक्रम निर्माता वा सञ्चालक, दृश्य वा भाषा सम्पादक जस्ता पत्रकारिता पेसासँग सम्बन्धित व्यक्ति समेतलाई जनाउँछ ।

❖(ङ) "कर्मचारी" भन्नाले सञ्चार प्रतिष्ठानमा व्यवस्थापकीय तथा प्रशासकीय कार्यको अन्तिम निर्णय गर्न अधिकार प्राप्त व्यक्ति बाहेक त्यस्तो प्रतिष्ठानको प्रशासनिक, व्यवस्थापकीय, प्राविधिक वा अन्य कार्यमा संलग्न व्यक्ति सम्झनुपर्छ ।

+(ङ१) "कामदार" भन्नाले श्रमजीवी पत्रकार वा कर्मचारीबाहेक सञ्चार प्रतिष्ठानमा सञ्चार सामग्री बिक्री वितरण वा उत्पादन गर्ने वा अन्य श्रममूलक कार्यमा संलग्न व्यक्ति सम्झनुपर्छ ।

(च) "पारिश्रमिक" भन्नाले श्रमजीवी पत्रकारले सञ्चार प्रतिष्ठानमा काम गरेबापत सञ्चार प्रतिष्ठानको तर्फबाट पाउने तलब सम्झनुपर्छ ।

❖(छ) "समिति" भन्नाले दफा ११ बमोजिम गठन भएको न्यूनतम पारिश्रमिक निर्धारण समिति सम्झनुपर्छ ।

(ज) "परिवार" भन्नाले श्रमजीवी पत्रकारसंग बस्ने तथा निज आफैंले पालन पोषण गर्नुपर्ने पति, पत्नी, छोरा, ◊....... छोरी, धर्मपुत्र, ◊...........

---

x श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा झिकिएको ।

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

◊ लैङ्गिक समानता कायम गर्न केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

धर्मपुत्री, बाबु, आमा वा सौतीनी आमा सम्झनुपर्छ र सो शब्दले पुरुष श्रमजीवी पत्रकारको हकमा निजको बाजे, बज्यै तथा महिला श्रमजीवी पत्रकारको हकमा निजको सासु, ससुरालाईसमेत जनाउँछ ।

(झ) "प्रेस रजिष्ट्रार" भन्नाले छापाखाना र प्रकाशन सम्बन्धी ऐन, २०४८ को दफा १९ बमोजिम नियुक्त भएको प्रेस रजिष्ट्रार सम्झनुपर्छ ।

(ञ) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यो ऐनअन्तर्गत बनेको नियममा तोकिएको वा तोकिएबमोजिम सम्झनुपर्छ ।

## परिच्छेद – २

## नियुक्ति, सेवाको सुरक्षा तथा काम गर्ने समय

❖३. **पदको वर्गीर्ककरण गर्नुपर्ने :** (१) व्यवस्थापकले सञ्चार प्रतिष्ठानको कामको प्रकृतिअनुसार श्रमजीवी पत्रकारको पद र त्यस्तो पदको तहगत वर्गीकरण गर्नुपर्नेछ ।

(२) व्यवस्थापकले उपदफा (१) बमोजिम पदको तहगत वर्गीकरण गर्दा समितिले निर्धारण गरेबमोजिम गर्नुपर्नेछ ।

(३) उपदफा (१) बमोजिम पद र त्यस्तो पदको तहगत वर्गीकरण गरिसकेपछि व्यवस्थापकले सो पदको लागि चाहिने योग्यता, अनुभव, काम, कर्तव्य र अधिकार तथा उत्तरदायित्व समेत उल्लेख भएको विवरण प्रेस रजिष्ट्रारलाई दिनुपर्नेछ ।

+३क. **नियुक्ति नदिई काममा लगाउन नहुने :** व्यवस्थापकले यस ऐनबमोजिम नियुक्ति नदिई कुनै पनि व्यक्तिलाई श्रमजीवी पत्रकारको पदमा काममा लगाउन हुँदैन ।

❖४. **खुल्ला प्रतियोगिताद्वारा पदपूर्ति गर्नुपर्ने :** (१) दफा ३ को उपदफा (३) बमोजिमको विवरण प्रेस रजिष्ट्रारलाई दिइसकेपछि व्यवस्थापकले सञ्चार प्रतिष्ठानको लागि आवश्यकपर्ने श्रमजीवी पत्रकारको पद तोकिएको प्रक्रिया अपनाई खुल्ला प्रतियोगिताद्वारा छनौट गरी पूर्ति गर्नुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम खुल्ला प्रतियोगिताद्वारा छनौट भएका व्यक्तिलाई व्यवस्थापकले तोकिएको अवधिभित्र नियुक्तिपत्र दिनुपर्नेछ ।

---

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

❖**५. करारमा नियुक्ति गर्न सक्ने :** (१) दफा ४ मा जुनसुकै कुरा लेखिएको भए तापनि सञ्चार प्रतिष्ठानको कामका लागि कुनै व्यक्तिको विशेषज्ञ सेवा लिनुपर्ने भएमा व्यवस्थापकले प्रेस रजिष्ट्रारको स्वीकृति लिई निश्चित समयावधि तोकी त्यस्तो व्यक्तिलाई श्रमजीवी पत्रकारको पदमा करारमा नियुक्ति गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम करारमा नियुक्ति गर्दा सम्बन्धित सञ्चार प्रतिष्ठानमा कार्यरत श्रमजीवी पत्रकारको कुल सङ्ख्याको पन्ध्र प्रतिशत सङ्ख्या सम्म मात्र नियुक्ति गर्न सकिनेछ ।

(३) उपदफा (१) बमोजिम करारमा नियुक्त भएको व्यक्तिले गर्नुपर्ने काम, पाउने पारिश्रमिक, सेवाको अवधि तथा सेवाका अन्य सर्त एवं सुविधा करारमा उल्लेख भएबमोजिम हुनेछ ।

(४) उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भए तापनि करारमा नियुक्त भएको श्रमजीवी पत्रकारको पारिश्रमिक, सञ्चय कोष तथा अन्य सुविधा सञ्चार प्रतिष्ठानको समान पद वा तहमा कार्यरत श्रमजीवी पत्रकारले पाउने पारिश्रमिक, सञ्चय कोष तथा अन्य सुविधाभन्दा कम हुने छैन ।

+**५क. नियुक्तिको जानकारी दिनुपर्ने :** (१) दफा ४ वा ५ बमोजिम कुनै व्यक्तिलाई श्रमजीवी पत्रकारको पदमा नियुक्त गरिसकेपछि व्यवस्थापकले सोको जानकारी प्रेस रजिष्ट्रारलाई दिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम प्राप्त भएको जानकारी प्रेस रजिष्ट्रारले अद्यावधिक गरी राख्नुपर्नेछ ।

**६. परीक्षणकालमा रहने :** श्रमजीवी पत्रकारमा शुरुमा स्थायी नियुक्ति गर्दा छ महिनाको परीक्षणकालमा रहने गरी नियुक्ति गरिनेछ । सो अवधिमा निजको काम सन्तोषजनक नभएमा निजको नियुक्ति बदर गर्न सकिनेछ ।

**७. पदाधिकार कायम रहने :** देहायको अवस्थामा श्रमजीवी पत्रकारको आफ्नो पद माथिको पदाधिकार कायम रहनेछ :-

(क) त्यस पदमा कामकाज गरिरहँदासम्म,

(ख) बिदामा रहेको बखत,

---

\+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

(ग) व्यवस्थापकले अन्यत्र काजमा खटाएको बखत, वा

(घ) निलम्बन रहेको बखत ।

**८. सेवाको सुरक्षा :** यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियमको रीत नपुऱ्याई कुनै पनि श्रमजीवी पत्रकारको सेवाको अन्त्य गर्न सकिने छैन ।

**९. काम गर्ने समय :** (१) श्रमजीवी पत्रकारले काम गर्नुपर्ने समय उपदफा (२) को अधीनमा रही व्यवस्थापकले तोकिदिएबमोजिम हुनेछ ।

(२) श्रमजीवी पत्रकारले प्रत्येक हप्तामा काम गर्नुपर्ने समय अठचालीस घण्टाभन्दा बढी हुने छैन र प्रत्येक हप्तामा निजले आलोपालो गरी एक दिन साप्ताहिक बिदा पाउनेछ ।

(३) कुनै श्रमजीवी पत्रकारलाई उपदफा (२) बमोजिम तोकिएको समयभन्दा बढी समय काममा लगाएमा तोकिएबमोजिम थप सुविधा दिनुपर्नेछ ।

**१०. हाजिरी र बिदासम्बन्धी व्यवस्था :** (१) प्रत्येक व्यवस्थापकले सञ्चार प्रतिष्ठानमा काम गर्ने श्रमजीवी पत्रकारहरूको हाजिरी किताब राख्नुपर्नेछ।

(२) प्रत्येक श्रमजीवी पत्रकारले व्यवस्थापकले तोकेको समयमा नियमित रूपले आफ्नो कार्यालय वा कार्यक्षेत्रमा उपस्थित भई काम गर्नुपर्नेछ। सामान्यतया बिदा स्वीकृत नगराई कार्यालय वा कार्यक्षेत्रमा अनुपस्थित हुनु हुँदैन ।

(३) श्रमजीवी पत्रकारहरूले पाउने सार्वजनिक बिदा, भैपरी आउने तथा पर्व बिदा, बिरामी बिदा, घर बिदा, सुत्केरी बिदा, किरिया बिदा र बेतलवी बिदा तोकिएबमोजिम हुने छन् ।

## परिच्छेद – ३

## पारिश्रमिक तथा क्षतिपूर्ति

❖**११. न्यूनतम पारिश्रमिक निर्धारण समिति :** (१) श्रमजीवी पत्रकारले पाउने न्यूनतम पारिश्रमिक रकम निर्धारण गर्न तथा त्यस्तो पारिश्रमिक रकम आवश्यकताअनुसार पुनरावलोकन गर्ने सम्बन्धमा नेपाल सरकार समक्ष सिफारिस गर्नको लागि देहायका सदस्यहरू भएको एक न्यूनतम पारिश्रमिक निर्धारण समिति गठन हुनेछ :-

(क) सञ्चारको क्षेत्रमा विशिष्ट योगदान पुऱ्याएका व्यक्तिहरूमध्येबाट

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

नेपाल सरकारले नियुक्त गरेको व्यक्ति - अध्यक्ष

(ख) प्रतिनिधि (राजपत्राङ्कित प्रथम श्रेणी), सूचना तथा सञ्चार मन्त्रालय - सदस्य

(ग) प्रतिनिधि (राजपत्राङ्कित प्रथम श्रेणी), श्रम तथा यातायात व्यवस्था मन्त्रालय - सदस्य

(घ) नेपाल पत्रकार महासङ्घको सभापति - सदस्य

(ङ) श्रमजीवी पत्रकारहरूमध्येबाट कम्तीमा एकजना महिला रहने गरी नेपाल पत्रकार महासङ्घले तोकेका तीनजना - सदस्य

(च) व्यवस्थापकहरूमध्येबाट नेपाल सरकारले मनोनीत गरेका तीनजना - सदस्य

(छ) कर्मचारी वा कामदारमध्येबाट नेपाल सरकारले मनोनीत गरेको एकजना - सदस्य

(ज) श्रम तथा अर्थसम्बन्धी विशेषज्ञहरूमध्येबाट नेपाल सरकारले मनोनीत गरेको एकजना - सदस्य

(झ) प्रेस रजिष्ट्रार - सदस्य-सचिव

(२) समितिको अध्यक्ष तथा मनोनीत सदस्यको पदावीध दुई वर्षको हुनेछ ।

(३) यस ऐनमा लेखिएदेखिबाहेक समितिको अन्य काम, कर्तव्य र अधिकार तोकिएबमोजिम हुनेछ ।

(४) समितिको बैठकसम्बन्धी कार्यविधि समिति आफैंले निर्धारण गरेबमोजिम हुनेछ ।

+**११क. नेपाल सरकारले न्यूनतम पारिश्रमिक निर्धारण गर्न सक्ने :** दफा ११ मा जुनसुकै कुरा लेखिएको भए तापनि समितिले कुनै कारणवश श्रमजीवी पत्रकारको न्यूनतम पारिश्रमिक निर्धारण गरी नेपाल सरकार समक्ष सिफारिस गर्न नसकेमा नेपाल सरकारले नै श्रमजीवी पत्रकारको न्यूनतम पारिश्रमिक निर्धारण गर्न सक्नेछ ।

**१२. पारिश्रमिक तथा भत्ता पाउने :** (१) श्रमजीवी पत्रकारले सञ्चार प्रतिष्ठानमा काम गरेबापत मासिक पारिश्रमिक पाउनेछ ।

(२) कुनै श्रमजीवी पत्रकारले पकाएको पारिश्रमिक तथा भत्ता निज जुनसुकै व्यहोराले सञ्चार प्रतिष्ठानको सेवामा नरहेमा पनि पाउनेछ ।

+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

(३) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमबमोजिम बाहेक कुनै श्रमजीवी पत्रकारको मासिक पारिश्रमिक कट्टा गरिने छैन ।

(४) कुनै श्रमजीवी पत्रकारले पाउने पारिश्रमिक निज बिदामा बसेको बखत रोकिने छैन ।

१३. **वार्षिक तलब वृद्धि :** प्रत्येक श्रमजीवी पत्रकारले एक वर्षको सेवा पूरा गरेपछि तोकिएबमोजिम एउटा तलब वृद्धि पाउनेछ ।

❖१४. **उपचार तथा क्षतिपूर्ति सम्बन्धी व्यवस्था :** सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा कुनै श्रमजीवी पत्रकारलाई चोटपटक लागेमा वा निजको अङ्गभङ्ग भएमा वा मृत्यु भएमा वा निजको व्यक्तिगत सम्पत्ति नष्ट भएमा निजले वा दफा १६ मा उल्लेख भएबमोजिमको व्यक्तिले तोकिएबमोजिमको उपचार खर्च वा क्षतिपूर्तिको रकम सम्बन्धित सञ्चार प्रतिष्ठानबाट पाउनेछ ।

१५. **पारिश्रमिक कट्टी गर्नमा प्रतिबन्ध :** (१) श्रमजीवी पत्रकारको पारिश्रमिक देहायको अवस्थामा बाहेक अरू अवस्थामा कट्टी गरिनेछैन :-

(क) लागेको जरिबाना कट्टी गर्नुपरेमा,

(ख) गैर हाजिरबापत कट्टी गर्नुपरेमा,

(ग) जानीजानी वा लापरवाही साथ काम गर्दा सञ्चार प्रतिष्ठानलाई पुग्न गएको नोक्सानीबापत कट्टी गर्नुपरेमा,

(घ) पारिश्रमिकबाट कट्टी हुने गरी अघि दिएको पेसकी रकम कट्टी गर्नुपरेमा,

(ङ) सरकारी अड्डा वा अदालतको आदेशबमोजिम तिर्नु बुझाउनुपर्ने कुनै रकम कट्टी गर्नुपरेमा,

(च) प्रचलित कानुनबमोजिम लाग्ने आय कर वा अन्य कुनै कर कट्टी गर्नुपरेमा, वा

(छ) तोकिएबमोजिम कुनै रकम कट्टी गर्नुपरेमा ।

(२) उपदफा (१) बमोजिम कट्टी हुने रकमको हद, कट्टी गरिने तरिका र अवधि तथा तत्सम्बन्धी अन्य कुरा तोकिएबमोजिम हुनेछ ।

१६. **बाँकी रकम भुक्तानी पाउने :** (१) कुनै श्रमजीवी पत्रकारको सञ्चार

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

प्रतिष्ठानको सेवाबाट अवकाश प्राप्त गरे पश्चात वा सो सेवामा छँदै मृत्यु भई यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियमबमोजिम पाउने रकम सञ्चार प्रतिष्ठानबाट लिन बाँकी भएमा त्यस्तो रकम श्रमजीवी पत्रकार स्वयंले वा निजले इच्छाएको व्यक्तिले पाउनेछ ।

(२) उपदफा (१) बमोजिमको रकम लिन श्रमजीवी पत्रकारले कसैलाई पनि नइच्छाएकोमा त्यस्तो रकम निजको परिवारको सबैभन्दा नजीकको हकवालाले पाउनेछ ।

## परिच्छेद – ४

## कल्याणकारी व्यवस्था

१७. **कल्याणकारी कोष्ष :** व्यवस्थापकले श्रमजीवी पत्रकारको हक, हित र सुरक्षाको लागि तोकिएबमोजिमको एक कल्याणकारी कोष खडा गर्नुपर्नेछ ।

१८. **उपदान, सञ्चय कोष र औषधि उपचार तथा अन्य सुविधा :** श्रमजीवी पत्रकारहरूले पाउने उपदान, सञ्चय कोष, औषधि उपचार तथा अन्य सुविधा तोकिएबमोजिम हुनेछ ।

१९. **स्वामित्व परिवर्तनले प्रतिकूल असर नपर्ने :** सञ्चार प्रतिष्ठानमा भएको स्वामित्वको परिवर्तनले त्यस्ता सञ्चार प्रतिष्ठानमा कार्यरत श्रमजीवी पत्रकारहरूको सेवा, सर्त तथा सुविधामा कुनै प्रतिकूल असरपर्ने छैन ।

२०. **मर्कापर्ने गरी सेवा, सर्त तथा सुविधामा परिवर्तन नगरिने :** श्रमजीवी पत्रकारहरूलाई मर्कापर्ने गरी निजको सेवाको सर्त तथा सुविधामा परितर्वन गरिने छैन ।

## परिच्छेद – ५

## अवकाश र दरबन्दी कटौती

२१. **अवकाश :** (१) यो ऐन प्रारम्भ हुनुअघि वा प्रारम्भ भएपछि गरी श्रमजीवी पत्रकारको रूपमा अविच्छिन्न २५ वर्ष सेवा अवधि पूरा गरेको श्रमजीवी पत्रकारलाई व्यवस्थापकले सेवाबाट अवकाश दिन सक्नेछ ।

(२) कुनै श्रमजीवी पत्रकारले व्यवस्थापकलाई तीन महिनाको अग्रीम सूचना दिई सञ्चार प्रतिष्ठानको सेवाबाट स्वेच्छिक अवकाश लिन सक्नेछ ।

२२. **दरबन्दी कटौतैती :** (१) सञ्चार प्रतिष्ठानको आम्दानी घट्न गएकोले वा व्यवस्थापकले लगानी घटाई सञ्चार प्रतिष्ठान सञ्चालन गर्न चाहेमा सोही अनुपातमा दरबन्दी कटौती गरी श्रमजीवी पत्रकारलाई सेवाबाट अवकाश दिन सक्नेछ ।

तर यसरी दरबन्दी कटौती गरी श्रमजीवी पत्रकारलाई सञ्चार प्रतिष्ठानको सेवाबाट अवकाश दिँदा एकै किसिमको काममा कार्यरत एक वर्षको अविच्छिन्न सेवा अवधि पूरा गरेका श्रमजीवी पत्रकारहरूमध्ये त्यस्तो काममा सबै भन्दा पछि नियुक्त भएकालाई पहिले कटौती गर्ने क्रमले कटौती गरी सेवाबाट अवकाश दिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम दरबन्दी कटौती गर्नुपरेमा सो गर्नु परेको कारण सहितको सूचना व्यवस्थापकले प्रेस रजिष्ट्रार र सम्बन्धित श्रमजीवी पत्रकारलाई तीन महिना अगावै दिनुपर्नेछ ।

(३) उपदफा (१) बमोजिम एक पटक दरबन्दी कटौती गरिसकेपछि एक वर्षभित्र पुनः दरबन्दी सिर्जना गर्न वा करारमा कुनै श्रमजीवी पत्रकार नियुक्त गर्न पाइने छैन ।

(४) उपदफा (३) विपरीत कुनै व्यवस्थापकले सो अवधिभित्र कुनै व्यक्तिलाई श्रमजीवी पत्रकारमा नियुक्त गरेमा पहिले दरबन्दी कटौतीमा परेको श्रमजीवी पत्रकारले सो सञ्चार प्रतिष्ठानमा नियुक्ति पाउँ भनी सम्बन्धित व्यवस्थापक समक्ष निवेदन गर्न सक्नेछ । यसरी परेको निवेदन अनुसार सम्बन्धित व्यवस्थापकले त्यस्तो श्रमजीवी पत्रकारलाई नियुक्ति दिनुपर्नेछ ।

(५) उपदफा (४) बमोजिम व्यवस्थापकले नियुक्ति नदिएमा त्यस्तो व्यक्तिले प्रेस रजिष्ट्रार समक्ष उजुरी गर्न सक्नेछ ।

(६) उपदफा (५) बमोजिम परेको उजुरी मनासिव देखिएमा प्रेस रजिष्ट्रारले निवेदकलाई नियुक्ति दिनु भनी सम्बन्धित व्यवस्थापकलाई आदेश दिन सक्नेछ । यसरी प्रेस रजिष्ट्रारबाट आदेश भएमा सम्बन्धित व्यवस्थापकले त्यस्तो व्यक्तिलाई पुनः श्रमजीवी पत्रकारमा नियुक्ति गर्नुपर्नेछ ।

(७) उपदफा (६) बमोजिम प्रेस रजिष्ट्रारले दिएको आदेशउपर चित्त नबुझ्ने पक्षले पैंतीस दिनभित्र सम्बन्धित पुनरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

२३. **सञ्चार प्रतिष्ठान बन्द गर्न सक्ने :** (१) व्यवस्थापकले आफूले सञ्चालन गरेको सञ्चार प्रतिष्ठान कुनै कारणले बन्द गर्न चाहेमा सो कुराको

सूचना प्रेस रजिष्ट्रार र सम्बन्धित श्रमजीवी पत्रकारहरूलाई तीन महिना अगावै दिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम सञ्चार प्रतिष्ठान बन्द हुने भई श्रमजीवी पत्रकारले स्वतः अवकाश पाउने भएमा वा दफा २२ बमोजिम दरबन्दी कटौती भई श्रमजीवी पत्रकारले अवकाश पाउने भएमा व्यवस्थापकले सम्बन्धित श्रमजीवी पत्रकारहरूलाई तोकिएबमोजिम सुविधा दिनुपर्नेछ ।

२४. **उजुरी गर्न सक्ने** : (१) यस ऐनबमोजिम श्रमजीवी पत्रकारले पाउनुपर्ने कुनै सुविधा वा रकम सञ्चार प्रतिष्ठानबाट नपाएमा वा व्यवस्थापकले यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियमबमोजिमको कुनै काम नगर्दा कुनै श्रमजीवी पत्रकारलाई मर्का पर्न गएमा त्यस्तो श्रमजीवी पत्रकारले पैंतीस दिनभित्र ❖प्रेस रजिष्ट्रारसमक्ष उजुरी गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम परेको उजुरी मनासिव ठहरेमा ❖प्रेस रजिष्ट्रारले उजुरवालाको मागबमोजिमको कुनै सुविधा वा रकम वा अन्य कार्य सम्बन्धित सञ्चार प्रतिष्ठानबाट दिन वा गर्न लगाई जानीजानी दिनुपर्ने सुविधा वा रकम नदिएको वा गर्नुपर्ने काम नगरेको देखिएमा त्यस्तो व्यवस्थापकलाई एकहजारदेखि दुईहजार रुपैयाँसम्म जरिबाना गर्न सक्नेछ ।

(३) उपदफा (२) बमोजिम ❖प्रेस रजिष्ट्रारले गरेको निर्णयबाट मर्कापर्ने व्यक्तिले पैंतीस दिन भित्र सम्बन्धित पुरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

## परिच्छेद – ६

## आचरण, सजाय र पुनरावेदन

२५. **आचरण** : श्रमजीवी पत्रकारहरूले तोकिएबमोजिम आचरणको पालना गर्नुपर्नेछ ।

२६. **सजाय** : (१) पद अनुसारको आचरण नगर्ने श्रमजीवी पत्रकारलाई व्यवस्थापकले देहायबमोजिमको कुनै सजाय गर्न सक्नेछ :-

(क) साधारण सजाय :

(१) नसिहत दिने,

(२) बढीमा दुई वार्षिक पारिश्रमिक वृद्धि रोक्का गर्ने, वा

(ख) विशेष सजाय : सेवाबाट हटाउने ।

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

(२) कुनै श्रमजीवी पत्रकारको काम सन्तोषजनक नभएमा वा अनुशासनहीन काम गरेमा व्यवस्थापकले साधारण सजाय गर्न सक्नेछ ।

(३) देहायको कुनै अवस्थामा श्रमजीवी पत्रकारलाई व्यवस्थापकले विशेष सजाय गर्न सक्नेछ :-

(क) बराबर आचरणसम्बन्धी कुरा उल्लंघन गरेमा,

(ख) बराबर अनुशासनहीन काम गरेमा,

(ग) बराबर आफ्नो पदको जिम्मेवारी पूरा नगरेमा,

(घ) बिदा स्वीकृत नगराई वा व्यवस्थापकलाई जानकारी नदिई आफ्नो काममा ६० दिन भन्दा बढी अनुपस्थित भएमा ।

२७. **निलम्बन गर्न सक्ने :** (१) कुनै श्रमजीवी पत्रकारको सम्बन्धमा दफा २६ मा लेखिएको कुनै अभियोगको जाँचबुझ गर्नुपर्ने भएमा जाँचबुझ समाप्त नहुन्जेलसम्म त्यस्तो श्रमजीवी पत्रकारलाई व्यवस्थापकले निलम्बन गर्न सक्नेछ । तर देहायको अवस्था नभई साधारणतया निलम्बन गरिने छैन :-

(क) निलम्बन नगरी श्रमजीवी पत्रकारलाई काम गर्न दिँदा झुट्टा सबुद प्रमाण सङ्कलन गर्न सक्ने वा आफ्नोविरुद्धको सबुद प्रमाण गायब गर्न सक्ने सम्भावना भएमा, वा

(ख) निलम्बन नगरी श्रमजीवी पत्रकारलाई काम गर्न दिँदा सञ्चार प्रतिष्ठानलाई हानी नोक्सानी हुने भएमा ।

(२) उपदफा (१) बमोजिम कुनै श्रमजीवी पत्रकारलाई तीन महिनाभन्दा बढी अवधि निलम्बन गर्नु हुँदैन ।

(३) उपदफा (१) बमोजिम निलम्बनमा परेको श्रमजीवी पत्रकार सेवामा बहाल भएमा वा सेवाबाट हटाइएमा निजको निलम्बन समाप्त हुनेछ।

(४) उपदफा (१) बमोजिम निलम्बन भएको श्रमजीवी पत्रकारले त्यस्तो निलम्बनको अवधिभर आधा पारिश्रमिक पाउनेछ र निजउपर लागेको अभियोगबाट सफाइ पाएमा त्यसरी निलम्बन भएको अवधिभरको पूरा पारिश्रमिक पाउनेछ ।

२८. **सफाइ पेस गर्ने मौका दिनुपर्ने :** व्यवस्थापकले कुनै श्रमजीवी पत्रकारलाई सजाय दिन आदेश दिनुभन्दा अघि कारबाही गर्न लागिएको कारण उल्लेख गरी सो श्रमजीवी पत्रकारलाई उचित म्याद दिई आफ्नो सफाइ पेस गर्न मौका दिनुपर्नेछ । यसरी मौका दिँदा निजमाथि लगाइएको आरोप स्पष्ट रूपले किटिएको र प्रत्येक आरोप कुन कुन कुरामा आधारित छ सो समेत

खुलाउनुपर्नेछ ।

२९. **विशेष सजायको आदेश दिनुभन्दा पहिले सजाय प्रस्ताव गर्नुपर्ने** : विशेष सजायको आदेश दिनुभन्दा पहिले व्यवस्थापकले दफा २८ बमोजिम सफाइ पेस गर्न दिइएको म्यादभित्र सफाइ पेस नगरेमा वा पेस हुन आएको सफाइ सन्तोषजनक नभएमा त्यस्तो श्रमजीवी पत्रकारलाई दिन लागिएको प्रस्तावित सजाय किन नदिनु भनी यससम्बन्धमा उचित म्याद दिई स्पष्टीकरण माग्नुपर्नेछ ।

३०. **सजाय गर्न सक्ने** : दफा २८ वा दफा २९ बमोजिम सफाइ वा स्पष्टीकरण नै नदिएमा वा सो अनुसार दिएको सफाइ वा स्पष्टीकरण सन्तोषजनक नभई त्यस्तो श्रमजीवी पत्रकारलाई सजाय गर्नुपर्ने भएमा व्यवस्थापकले दफा २६बमोजिमको कुनै सजाय गर्न सक्नेछ ।

❖ ३१. **पुनरावेदन** : दफा ३० बमोजिम व्यवस्थापकले गरेको सजायउपर चित्त नबुझ्ने व्यक्तिले पैंतीस दिनभित्र प्रचलित कानुनबमोजिम स्थापना भएको श्रम अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

## परिच्छेद – ७
## विविध

३२. **अधिकार प्रत्यायोजन** : नेपाल सरकारले यस ऐनबमोजिम आफूलाई प्राप्त भएको अधिकार नेपाल राजपत्रमा सूचना प्रकाशन गरी कुनै निकाय वा नेपाल सरकारको कुनै अधिकृत कर्मचारीलाई प्रत्यायोजन गर्न सक्नेछ ।

३३. **दण्ड सजाय** : (१) कुनै श्रमजीवी पत्रकारले गरेको काम कारबाहीबाट सञ्चार प्रतिष्ठानलाई हानि नोक्सानी हुन गएमा सो भए गरेको मितिले तीन महिनाभित्र व्यवस्थापकले नालेस गर्न सक्नेछ ।

(२) कुनै श्रमजीवी पत्रकारले जानीजानी वा लापरवाहीसाथ कुनै काम गरेकोले सञ्चार प्रतिष्ठानलाई कुनै हानी वा नोक्सानी हुन गएको ठहरिएमा त्यस्तो श्रमजीवी पत्रकारबाट भएको हानि नोक्सानीको हर्जाना भराउन लगाई निजलाई एकहजार देखि दुईहजार रुपैयाँसम्म जरिबाना हुन सक्नेछ ।

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

+(३) कुनै व्यवस्थापकले पटक-पटक यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियम विपरीत कुनै काम गरेमा प्रेस रजिष्ट्रारले त्यस्तो व्यवस्थापकलाई पच्चीस हजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

+(४) उपदफा (३) बमोजिम भएको सजायउपर चित्त नबुझ्ने व्यवस्थापकले त्यस्तो सजाय भएको मितिले पैँतीस दिनभित्र सम्बन्धित पुनरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

+**३३क. सुविधा रोक लगाउन सिफारिस गर्न सक्ने :** कुनै सञ्चार प्रतिष्ठानले यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियम विपरीत कुनै काम गरेमा प्रेस रजिष्ट्रारले त्यस्तो सञ्चार प्रतिष्ठानलाई देहायबमोजिमका सुविधा प्रदान गर्नबाट रोक लगाउन सम्बन्धित निकायमा सिफारिस गर्न सक्नेछ :-

(क) सञ्चार प्रतिष्ठानले पत्रपत्रिका प्रकाशन गर्ने भएमा त्यस्तो पत्रपत्रिकालाई प्रचलित कानुनबमोजिम पत्रपत्रिका वर्गीकरणमा समावेश नगर्ने,

(ख) नेपाल सरकारबाट दिने अनुदान वा विज्ञापनमा रोक लगाउन वा कटौती गर्ने,

(ग) सञ्चार सामग्री एवं सोसँग सम्बन्धित कच्चा पदार्थको आयातमा रोक लगाउन,

(घ) सरकारी भ्रमण दलमा सहभागी नगराउन ।

❖**३४. कर्मचारी तथा कामदारको नियुक्ति, सेवाको सर्त र सुविधासम्बन्धी व्यवस्था :** (१) श्रमजीवी पत्रकारको नियुक्ति, सेवाको सर्त र सुविधाका सम्बन्धमा यस ऐनमा भएका व्यवस्थाहरू कर्मचारी तथा कामदारका हकमा समेत समान रूपमा लागू हुनेछन् ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि सार्वजनिक सञ्चार प्रतिष्ठानमा कार्यरत श्रमजीवी पत्रकार, कर्मचारी वा कामदारको पारिश्रमिक तथा सुविधाबाहेकका अन्य व्यवस्थाहरू सम्बन्धित सञ्चार प्रतिष्ठानको सेवा, सर्त र सुविधासम्बन्धी कानुनबमोजिम हुनेछ ।

(३) उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि सार्वजनिक सञ्चार प्रतिष्ठानमा कार्यरत श्रमजीवी पत्रकार, कर्मचारी वा

---

+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

कामदारले यस ऐनमा लेखिएभन्दा बढी पारिश्रमिक तथा सुविधा पाउने भएमा त्यस्तो बढी पारिश्रमिक तथा सुविधा पाउन यस ऐनले कुनै बाधा पुऱ्याएको मानिने छैन ।

+३४क. **ट्रेडेड युनियन गठन गर्न सक्ने** : श्रमजीवी पत्रकारहरूले आफ्नो व्यावसायिक तथा पेसागत हक हितको संरक्षण र संवर्द्धन गर्ने सम्बन्धमा आफू कार्यरत सञ्चार प्रतिष्ठानमा ट्रेड यूनियनसम्बन्धी प्रचलित कानुनको अधीनमा रही ट्रेड युनियन गठन गर्न सक्नेछन् ।

+३४ख. **विवाद समाधान सम्बन्धी व्यवस्था** : (१) श्रमजीवी पत्रकार, कर्मचारी वा कामदार र सञ्चार प्रतिष्ठानका व्यवस्थापनबीच सेवा सर्त र सुविधासम्बन्धी कुनै विषयमा विवाद उठेमा प्रेस रजिष्ट्रारले वार्ता, मेलमिलाप वा मध्यस्थ जस्ता विभिन्न माध्यमबाट त्यस्तो विवाद समाधान गर्न गराउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको माध्यमबाट कुनै विवाद समाधान हुन नसकेमा त्यस्तो विवादको समाधान प्रचलित श्रम कानुनबमोजिम हुनेछ ।

+३४ग. **क्षमता विकाससम्बन्धी व्यवस्था** : (१) नेपाल सरकार तथा सञ्चार प्रतिष्ठानले श्रमजीवी पत्रकारको व्यावसायिक दक्षता, क्षमता र सीप विकासको लागि अध्ययन तथा तालिमको व्यवस्था गर्नुपर्नेछ ।

(२) उपदफा (१) बमोजिमको कार्यको लागि नेपाल सरकारले सञ्चार प्रतिष्ठानलाई आर्थिक तथा प्राविधिक सहयोग उपलब्ध गराउन सक्नेछ र सञ्चार प्रतिष्ठानले आफ्नो वार्षिक कुल आयको एक प्रतिशत रकम छुट्याउनुपर्नेछ ।

+३४घ. **निरीक्षण तथा अनुगमन गर्न सक्ने** : (१) सञ्चार प्रतिष्ठानले यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियम विपरीत कुनै काम गरे वा नगरेको सम्बन्धमा प्रेस रजिष्ट्रारले कुनै सञ्चार प्रतिष्ठानको निरीक्षण तथा अनुगमन गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम निरीक्षण तथा अनुगमन गर्दा कुनै सञ्चार प्रतिष्ठानले यो ऐन वा यस ऐनअन्तर्गत बनेको नियम विपरीत कुनै काम गरेको देखिएमा प्रेस रजिष्ट्रारले त्यस्तो सञ्चार

+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

प्रतिष्ठानलाई आवश्यक निर्देशन दिन सक्नेछ ।

(३) उपदफा (२) बमोजिम प्रेस रजिष्ट्रारले दिएको निर्देशनको पालना गर्नु सम्बन्धित सञ्चार प्रतिष्ठानको कर्तव्य हुनेछ ।

[+]३४ङ. **यस ऐनेनको व्यवस्था लागू नहुने** : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले समितिसँगको परामर्शमा नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएको कुनै सञ्चार प्रतिष्ठानको हकमा यस ऐनको कुनै व्यवस्था लागू हुने छैन ।

(२) उपदफा (१) बमोजिम नेपाल सरकारले यस ऐनको कुनै व्यवस्था कुनै सञ्चार प्रतिष्ठानको हकमा लागू नहुने गरी तोक्दा देहायका आधार लिन सक्नेछ :-

(क) पत्रपत्रिकाको बिक्री सङ्ख्या,

(ख) रेडियोयन्त्रको क्षमता,

(ग) केबुल टेलिभिजनको ग्राहक सङ्ख्या,

(घ) हिट्स हुने अनलाईन पत्रिका सङ्ख्या,

(ङ) कार्यक्रम उत्पादन सङ्ख्या,

(च) समाचार वितरण सङ्ख्या ।

३५. **प्रचलित कानुनबमोजिम हुने** : यो ऐनमा लेखिए जति कुरामा यसै ऐनबमोजिम र अरूमा प्रचलित कानुनबमोजिम हुनेछ ।

❖३६. **नियम तथा विनियम बनाउने अधिकार** : (१) यस ऐनको उद्देश्य कार्यान्वयन गर्न नेपाल सरकारले आवश्यक नियमहरू बनाउन सक्नेछ ।

(२) यो ऐन र यस ऐनअन्तर्गत बनेको नियमको अधीनमा रही प्रत्येक सञ्चार प्रतिष्ठानले श्रमजीवी पत्रकार, कर्मचारी वा कामदारको सेवा, सर्त एवं सुविधासम्बन्धी विनियम बनाउन सक्नेछ ।

(३) उपदफा (२) बमोजिम सञ्चार प्रतिष्ठानले विनियम बनाउँदा यो ऐन र यस ऐनअन्तर्गत बनेको नियममा तोकिएको सेवा, सर्त र सुविधाभन्दा कम हुने गरी विनियम बनाउन सक्ने छैन ।

---

+ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा थप ।

❖ श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा संशोधित ।

**द्रष्टव्य**

१. केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ द्वारा रूपान्तर गरिएको शब्दहरू:-
"श्री ५ को सरकार" को सट्टा "नेपाल सरकार"

२. श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) ऐन, २०६४ द्वारा रूपान्तर भएका शब्दहरू:-
"पत्रिका व्यवस्थापन" भन्ने शब्दहरूको सट्टा "सञ्चार प्रतिष्ठान"

३. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा "श्री ५ को प्रशस्ति" भन्ने शब्दहरू झिकिएका छन् ।

# श्रमजीवी पत्रकारसम्बन्धी नियमावली, २०५३

नेपाल राजपत्रमा प्रकाशित मिति

संशोधन २०५३।९।८

श्रमजीवी पत्रकारसम्बन्धी (पहिलो संशोधन) नियमावली, २०६५
२०६५।११।१२

श्रमजीवी पत्रकारसम्बन्धी ऐन, २०५१ को दफा ३६ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरू बनाएको छ।

## परिच्छेद–१

## प्रारम्भिक

१. **सङ्क्षिप्त नाम र प्रारम्भः** (१) यी नियमहरूको नाम "श्रमजीवी पत्रकारसम्बन्धी नियमावली, २०५३" रहेको छ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ।

२. **परिभाषाः** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस नियमावलीमा,-

(क) 'ऐन' भन्नाले श्रमजीवी पत्रकारसम्बन्धी ऐन, २०५१ सम्झनुपर्छ।

(ख) 'पद' भन्नाले सञ्चार प्रतिष्ठानमा दरबन्दी रहेको पद सम्झनुपर्छ।

(ग) 'कार्यालय' भन्नाले सञ्चार प्रतिष्ठानको कार्यालय सम्झनुपर्छ।

(घ) 'कल्याणकारी कोष' भन्नाले नियम २७ बमोजिम खडा गरिएको कल्याणकारी कोष सम्झनुपर्छ।

## परिच्छेद–२

## पदको वर्गीकरण, नियुक्ति तथा बढुवा

❶३. **पदको वर्गीकरण गर्दा खुलाउनुपर्नेः** ऐनको दफा ३ बमोजिम श्रमजीवी पत्रकारको पद र त्यस्तो पदको तहगत वर्गीकरण गर्दा कुन पद खुला

❶ पहिलो संशोधनद्वारा संशोधित।

प्रतियोगिताद्वारा र कुन पद आन्तरिक बढुवाद्वारा पूर्ति गरिने हो सो कुरा समेत खुलाउनुपर्नेछ ।

४. **श्रमजीवी पत्रकारको पदपूर्ति** : नियम ३ मा जुनसुकै कुरा लेखिएको भएतापनि व्यवस्थापकले [❶]सञ्चार प्रतिष्ठानमा रिक्त रहेका सबै पदहरू पहिलो पटक खुल्ला प्रतियोगितात्मक परीक्षाद्वारा पूर्ति गर्नुपर्नेछ ।

५. **विज्ञापन गर्नुपर्ने** : (१) व्यवस्थापकले रिक्त पद पूर्तिको लागि विज्ञापन गर्दा सर्वसाधारणले थाहा पाउने गरी राष्ट्रिय स्तरको कुनै एक पत्रपत्रिका, रेडियो वा टेलिभिजनबाट कम्तीमा एक महिनाको अवधि तोकी विज्ञापन प्रकाशन गर्नुपर्नेछ ।

(२) उपनियम (१) बमोजिम विज्ञापन गर्दा पदपूर्ति गर्नुपर्ने पद र सो पदको सङ्ख्या, स्थायी वा अस्थायी, आवश्यक न्यूनतम शैक्षिक योग्यता, अनुभव, कामको किसिम, परीक्षाको किसिम, दरखास्त दस्तुर, उमेरको हद, नागरिकता, दरखास्त दिने अन्तिम मिति, परीक्षा हुने मिति, समय र स्थान आदि कुराहरू त्यस्तो विज्ञापनमा स्पष्ट रूपमा खुलाएको हुनुपर्नेछ ।

६. **प्रतियोगिताको किसिम र छनौट** : (१)[❶]सञ्चार प्रतिष्ठानमा रिक्त रहेको कुनै पदको लागि लिखित तथा प्रयोगात्मक परीक्षा र अन्तर्वार्ता लिई श्रमजीवी पत्रकार छनौट गर्न सकिनेछ ।

(२) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि श्रमजीवी पत्रकारको कुनै पदको कामको प्रकृति हेरी कुन पदको लागि कति किसिमका प्रतियोगिता गराउने भन्ने कुरा [❶]सञ्चार प्रतिष्ठानले निर्धारण गर्न सक्नेछ ।

७. **नतिजा प्रकाशन गर्नुपर्ने** : (१) [❶]सञ्चार प्रतिष्ठानले लिखित परीक्षा लिएको मितिले साधारणतयाः एक महिनाभित्र परीक्षाको नतिजा प्रकाशन गर्नुपर्नेछ ।

८. अन्तर्वार्ता : [❶]सञ्चार प्रतिष्ठानले सामान्यतया लिखित परीक्षाको नतिजा प्रकाशन भएको मितिले एक महिनाभित्र परीक्षामा उत्तीर्ण भएका उम्मेदवारहरूको अन्तर्वार्ता लिनुपर्नेछ ।

९. **योग्यताक्रम, सिफारिस र नियुक्ति** : (१)[❶]सञ्चार प्रतिष्ठानले उम्मेदवारको

❶ पहिलो संशोधनद्वारा संशोधित ।

अन्तर्वार्ता लिएको मितिले १५ दिनभित्र योग्यताक्रम प्रकाशन गर्नुपर्ने छ।

(२) उपनियम (१) बमोजिम योग्यताक्रममा सिफारिस भएका उम्मेदवार हरूलाई व्यवस्थापकले +बढीमा पन्ध्र दिनभित्र श्रमजीवी पत्रकारमा नियुक्ति गर्नेछ।

+(३) व्यवस्थापकले यस नियमबमोजिम श्रमजीवी पत्रकारलाई नियुक्ति गर्दा सम्भव भएसम्म समावेशी सिद्धान्तलाई अनुशरण गर्नुपर्नेछ।

१०. **प्रतीक्षा सूची प्रकाशन गर्नुपर्नेः** (१) ❶सञ्चार प्रतिष्ठानले भर्नाको लागि योग्यताक्रम सिफारिस गर्दा पदको अनुपातमा पच्चीस प्रतिशतसम्म र कम्तीमा एकजनासम्म प्रतीक्षा सूचीमा योग्यताक्रम अनुसार उम्मेदवारको नाम प्रकाशन गर्नुपर्नेछ।

(२) योग्यताक्रममा परेका उम्मेदवारको क्रममा सिफारिस भएका उम्मेदवारले एक महिनाभित्र नियुक्तिपत्र लिन नआएमा वा नियुक्तिपत्र लिई बिना सूचना कार्यालयमा अनुपस्थित भएमा वा नियुक्तिपत्र लिई परीक्षणकालभित्र सेवा छाडी गएमा व्यवस्थापकले प्रतीक्षा सूचीमा रहेका योग्यताक्रमअनुसारका व्यक्तिलाई नियुक्ति दिनुपर्नेछ।

११. **बढुवाद्वारा पूर्ति गरिने :** (१) व्यवस्थापकले नियम ३ बमोजिम बढुवाद्वारा पूर्ति गर्न छुट्टयाएका पदहरू ❶सञ्चार प्रतिष्ठानमा सो पदभन्दा एक तह मुनिको पदमा चारवर्ष सेवा अवधि पूरा गरेको श्रमजीवी पत्रकारहरू मध्येबाट निजहरूको कार्यक्षमता र ज्येष्ठताको आधारमा बढुवा गरी पूर्ति गर्नुपर्नेछ।

## परिच्छेद–३

## बिदासम्बन्धी व्यवस्था

१२. **सार्वजनिक बिदाः** (१) श्रमजीवी पत्रकारले व्यवस्थापकले तोकेबमोजिमको सार्वजनिक बिदा पाउनेछ।

(२) सार्वजनिक बिदाको दिनमा श्रमजीवी पत्रकारलाई ❶सञ्चार प्रतिष्ठानको काममा लगाउनुपरेमा सो दिनको सट्टा बिदा दिइनेछ। त्यसरी सट्टा बिदा दिन नसकिने भएमा निजलाई काम गरेको दिनको तलब दिइनेछ।

(३) सार्वजनिक बिदामा बस्ने श्रमजीवी पत्रकारले पूरा तलब पाउनेछ।

❶ पहिलो संशोधनद्वारा संशोधित।

\+ पहिलो संशोधनद्वारा थप।

(४) सार्वजनिक बिदा सञ्चित गर्न पाइने छैन ।

**१३. भैपरी आउने र पर्व बिदाः** (१) श्रमजीवी पत्रकारले प्रत्येक वर्ष भैपरी आउने बिदा ६ दिन र पर्व बिदा ६ दिन गरी जम्मा १२ दिन बिदा लिन पाउनेछ ।

(२) भैपरी आउने बिदा र पर्व बिदा आधा दिन पनि लिन पाइनेछ ।

(३) भैपरी आउने र पर्व बिदामा बस्ने श्रमजीवी पत्रकारले पूरा तलब पाउनेछ ।

(४) भैपरी आउने र पर्व बिदा सञ्चित गरी अर्को वर्ष लिन पाइने छैन ।

**१४. घर बिदाः** (१) श्रमजीवी पत्रकारले काम गरेको अवधिको बाह्र दिनको एक दिनको दरले घर बिदा पाउनेछ ।

(२) श्रमजीवी पत्रकारले घर बिदामा बस्दा पूरा तलब पाउनेछ ।

(३) घर बिदा र बेतलबी बिदामा बसेको श्रमजीवी पत्रकारले सो अवधिको घर बिदा पाउने छैन ।

(४) वर्षको एक पटक कम्तीमा सात दिन घर बिदा लिई घर जाँदा र बिदा भुक्तान गरी घरबाट आफ्नो कार्यालयमा आउँदा पैदलको बाटोलाई आठ कोषको निमित्त एक दिनको दरले हुने दिन तथा मोटर, रेल, हवाईजहाजको बाटोलाई जति दिन लाग्ने हो त्यति दिन बाटोको म्याद पाउनेछ ।

**१५. बिरामी बिदाः** (१) श्रमजीवी पत्रकारले प्रत्येक वर्ष बाह्र दिन बिरामी बिदा पाउने छ ।

(२) बिरामी बिदामा बस्दा श्रमजीवी पत्रकारले पूरा तलब पाउनेछ ।

(३) बेतलबी बिदामा बसेको अवधिमा श्रमजीवी पत्रकारले बिरामी बिदा पाउने छैन ।

+(४) सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा चोटपटक लाग्न गई त्यस्तो चोट पटकको उपचार गराउन निजको सञ्चित बिरामी बिदाले नपुग भएमा श्रमजीवी पत्रकारले निजको सञ्चित अन्य कुनै पनि बिदाबाट कट्टा नहुने गरी उपचार गराउन आवश्यकपर्ने थप अवधिको लागि पूरा तलबसहितको बिरामी बिदा पाउनेछ ।

❶**१६ सुत्केरी बिदाः** (१) महिला श्रमजीवी पत्रकार गर्भवती भएमा निजले

+ पहिलो संशोधनद्वारा थप ।

सुत्केरीको अघि वा पछि गरी साठी दिन सुत्केरी बिदा लिन पाउनेछ ।

(२) उपनियम (१) बमोजिम सुत्केरी बिदा लिएको महिला श्रमजीवी पत्रकारले चाहेमा लगातार थप छ महिनासम्म सुत्केरी बिदा लिन सक्नेछ ।

(३) उपनियम (२) बमोजिम कुनै महिला श्रमजीवी पत्रकार बिदामा बसेमा त्यस्तो अवधि निजको नोकरी अवधिमा जोडिनेछ ।

(४) कुनै पुरुष श्रमजीवी पत्रकारको पत्नी सुत्केरी हुने भएमा त्यस्तो कर्मचारीले सुत्केरीको अघि वा पछि गरी पन्ध्र दिन सुत्केरी स्याहार गर्न बिदा लिन पाउनेछ ।

(५) यस नियमबमोजिमको बिदा सेवा अवधिभरमा दुई पटक मात्र पाइनेछ ।

(६) यस नियमबमोजिम बिदामा बस्ने श्रमजीवी पत्रकारले पूरा तलब पाउनेछ ।

तर उपनियम (२) बमोजिम बिदामा बस्ने श्रमजीवी पत्रकारले सो अवधिको तलब पाउने छैन ।

(७) श्रमजीवी पत्रकारले बच्चाको स्याहारको निमित्त सम्बन्धित सञ्चार प्रतिष्ठानबाट बढीमा दुईवटा बच्चाको लागि जनही एकमुष्ट पाँच हजार रुपैयाँ शिशु स्याहार भत्ता पाउनेछ ।

तर कुनै श्रमजीवी पत्रकारको पति र पत्नी दुवैजना एउटै सञ्चार प्रतिष्ठानमा कार्यरत भएमा पुरुष श्रमजीवी पत्रकारले त्यस्तो भत्ता पाउने छैन ।

(८) उपनियम (४) बमोजिमको बिदा लिने श्रमजीवी पत्रकारले तीन महिनाभित्रमा आफू कार्यरत सञ्चार प्रतिष्ठानमा बच्चाको जन्मदर्ता प्रमाणपत्र पेस गर्नुपर्नेछ र जन्म दर्ता प्रमाणपत्र पेस नगरेमा निजले सुत्केरी स्याहार गर्न लिएको बिदाको अवधि अन्य बिदाबाट कट्टा गरिनेछ ।

(९) यस नियमबमोजिमको बिदाको अभिलेख सम्बन्धित सञ्चार प्रतिष्ठानले अद्यावधिक गरी राख्नुपर्नेछ ।

१७. **किरिया बिदाः** (१) कुनै श्रमजीवी पत्रकारले कुल धर्म अनुसार आफैं किरिया बस्नु परेमा पन्ध्रदिन किरिया बिदा पाउनेछ । महिला श्रमजीवी पत्रकारको पतिले किरिया बस्नुपरेमा निजले पनि त्यतिनै दिन किरिया बिदा पाउनेछ ।

❶ पहिलो संशोधनद्वारा संशोधित ।

(२) श्रमजीवी पत्रकारले किरिया बिदामा बस्दा पूरा तलब पाउनेछ ।

➊१८ **बेतलबी बिदाः** (१) श्रमजीवी पत्रकारलाई उपयोगी र आवश्यकपर्ने विषयमा स्वदेश वा विदेशमा अध्ययन गर्न वा अन्य कुनै विशेष प्रयोजनको लागि सञ्चित बिदा नहुने श्रमजीवी पत्रकारले बेतलबी बिदा पाउन सक्नेछ ।

(२) श्रमजीवी पत्रकारले सेवा अवधि भरमा एकैपटक वा पटक पटक गरी तीन वर्षसम्म बेतलबी बिदा पाउन सक्नेछ ।

तर सञ्चार प्रतिष्ठानले आवश्यक ठानेमा बेतलबी बिदाको अवधि दुई वर्षसम्म थप गर्न सक्नेछ ।

(३) तीन वर्ष स्थायी सेवा अवधि नपुगी कुनै पनि श्रमजीवी पत्रकारले बेतलबी बिदा पाउन सक्ने छैन ।

(४) श्रमजीवी पत्रकारले बेतलबी बिदामा बसेको अवधि निजको नोकरी अवधिमा गणना हुने छैन ।

१९. **घर बिदा र बिरामी बिदा सञ्चित गर्न पाउनेः** (१) श्रमजीवी पत्रकारले घर बिदा ➊एकसय असी दिनसम्म र बिरामी बिदा जतिसुकै पनि सञ्चित गर्न सक्नेछ ।

(२) कुनै कारणले श्रमजीवी पत्रकार सेवाबाट अलग भएमा उपनियम (१) बमोजिम सञ्चित भएको घरबिदा र बिरामी बिदाबापत निजको पदाधिकार रहेको पदबाट खाईपाई आएको दरले हुन आउने रकम निजले एकमुष्ट लिन पाउनेछ ।

(३) उपनियम (२) बमोजिमको रकम लिन नपाउँदै त्यस्तो श्रमजीवी पत्रकारको मृत्यु भएमा त्यसरी सञ्चित भएको घर बिदा र बिरामी बिदाबापतको रकम निजले इच्छाएको व्यक्तिले र त्यस्तो व्यक्ति नभएमा निजको नजिकको हकदारले पाउनेछ ।

२०. **बिदा माग गर्ने विधिः** श्रमजीवी पत्रकारले व्यवस्थापकसँग लिखितरूपमा बिदा माग गर्नुपर्नेछ ।

तर भैपरी आउने र पर्व बिदा मौखिक रूपमा पनि लिन सकिनेछ ।

२१. **बिदा स्वीकृत्त गर्ने अधिकारीः** श्रमजीवी पत्रकारको बिदा सम्बन्धित व्यवस्थापकले स्वीकृत गर्नेछ ।

---

➊ पहिलो संशोधनद्वारा संशोधित ।

२२. **बिदा नलिई अनुपस्थित हुनेउपर कारबाही:** बिदा नलिई कार्यालयमा अनुपस्थित हुने श्रमजीवी पत्रकारलाई गयल र तलब कट्टी गरी विभागीय कारबाहीसमेत गर्न सकिनेछ ।

त्यसरी गयल भएको अवधि सेवा अवधिमा गणना गरिने छैन ।

२३. **बिदा अधिकारको कुरा होइन:** श्रमजीवी पत्रकारको लागि बिदा अधिकारको कुरा होइन, सहुलियत मात्र हो ।

## परिच्छेद–४
## पारिश्रमिक तथा सुविधा

[❶]२४. **समितिको काम, कर्तव्य र अधिकार:** ऐनमा लेखिएको काम, कर्तव्य र अधिकारको अतिरिक्त समितिको अन्य काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछ :-

(क) श्रमजीवी पत्रकारले ऐन तथा यस नियमावलीबमोजिम पाउने न्यूनतम पारिश्रमिक निर्धारण गर्नेसम्बन्धमा नेपाल सरकारलाई आवश्यक सिफारिस गर्ने,

(ख) खण्ड (क) बमोजिमको सिफारिस गर्नु अघि सो विषयमा आवश्यकता अनुसार सम्बन्धित पक्षसँग परामर्श गर्ने वा सम्बन्धित विशेषज्ञको राय लिने,

(ग) सञ्चार प्रतिष्ठानको कामको प्रकृति अनुसार श्रमजीवी पत्रकारको पदको तहगत वर्गीकरण गर्ने,

(घ) ऐनको दफा ३४ङबमोजिम ऐनको कुनै व्यवस्था कुनै सञ्चार प्रतिष्ठानको हकमा लागू नहुने गरी तोक्ने सम्बन्धमा नेपाल सरकारलाई परामर्श दिने ।

२५. **वार्षिक तलब वृद्धि :** श्रमजीवी पत्रकारले सञ्चार प्रतिष्ठानमा एक वर्षको सेवा अवधि पूरा गरेपछि एक दिनको तलबमा नघटाई मासिक तलबमा थप गरी तलब वृद्धि पाउने छ ।

२६. **पारिश्रमिक कट्टी हुने रकमको हद, तरिका र म्याद :** (१) ऐनको दफा १५ को उपदफा (२) बमोजिम कुनै श्रमजीवी पत्रकारको पारिश्रमिक कट्टी

❶ पहिलो संशोधनद्वारा संशोधित ।

गर्नुपर्दा देहायका कुराहरूको अधीनमा रही कट्टी गर्नुपर्नेछ :-

(क) लागेको जरिवाना वा गैरहाजिरबापत कट्टी गर्नु पर्दा प्रत्येक पटक पाउने पारिश्रमिकको तेत्तीस प्रतिशतको दरले नबढाई त्यस्तो जरिवाना वा गैरहाजिरबापत कट्टी गर्नुपर्ने रकम असुल नभएसम्म,

(ख) जानीजानी वा लापरबाहीसाथ काम गर्दा सञ्चार प्रतिष्ठानलाई पुग्न गएको नोक्सानीबापत कट्टी गर्नुपर्दा प्रत्येक पटक पच्चीस प्रतिशतको दरमा नबढाई त्यस्तो कट्टी गर्नुपर्ने रकम असुल नभएसम्म,

(ग) पारिश्रमिकबाट कट्टी हुने गरी अघि दिएको पेसकी रकम कट्टी गर्नुपर्दा ❶सञ्चार प्रतिष्ठान र श्रमजीवी पत्रकारबीच कुनै सर्त भएकोमा सोही आधारमा र त्यसरी कुनै सर्त नगरेको भए प्रत्येक पटक पाउने पारिश्रमिकको पच्चीस प्रतिशतका दरमा नबढाई त्यस्तो पेसकी रकम असुल उपर नभएसम्म,

(घ) सरकारी अड्डा वा अदालतको आदेशबमोजिम तिर्नु बुझाउनुपर्ने वा प्रचलित कानुनबमोजिम लाग्ने आयकर वा अन्य कुनै प्रकारको रकम कट्टी गर्नुपर्दा त्यस्तो आदेशमा म्याद किटान भएको भए सोही म्यादभित्र चुक्ता गर्न आवश्यकपर्ने जति प्रतिशतको दरले र म्याद किटान नभएकोमा प्रत्येक पटक पाउने पारिश्रमिकको पचास प्रतिशतको दरमा नबढाई त्यस्तो आदेशबमोजिम असुल उपर नभएसम्म ।

(२) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि कुनै श्रमजीवी पत्रकारबाट असुल उपर गर्नुपर्ने कुनै रकम कट्टी नुहँदै निजको मृत्यु भएमा वा कुनै कारणबाट ❶सञ्चार प्रतिष्ठानको सेवाबाट अवकाश पाएमा निजबाट असुल गर्न बाँकी भएजति रकम ❶सञ्चार प्रतिष्ठानबाट निजले पाउने रकम भएमा सोही रकमबाट कट्टा गरी असुल उपर गरिनेछ ।

२७. **कल्याणकारी कोष खडा गर्नुपर्ने :** (१) सञ्चार प्रतिष्ठानमा काम गर्ने श्रमजीवी पत्रकारहरूको हक, हित र सुरक्षाको लागि व्यवस्थापकले एउटा कल्याणकारी कोष खडा गर्नुपर्नेछ ।

❶(२) उपनियम (१) बमोजिम खडा भएको कोषमा व्यवस्थापकले देहायको रकम जम्मा गर्नुपर्नेछ :-

---

❶ पहिलो संशोधनद्वारा संशोधित ।

(क) श्रमजीवी पत्रकारले खाईपाई आएको मासिक तलबबाट पाँच प्रतिशतले कट्टा गरी हुन आउने रकम,

(ख) नेपाल सरकारले सञ्चार प्रतिष्ठानलाई लोककल्याणकारी विज्ञापनबापत उपलब्ध गराएको रकमको दश प्रतिशतले हुन आउने रकम,

(ग) सञ्चार प्रतिष्ठानले प्रत्येक वर्ष विज्ञापनबापत प्राप्त गर्ने आम्दानीको दश प्रतिशतले हुन आउने रकम,

(घ) सञ्चार प्रतिष्ठानमा प्रत्येक वर्ष नाफा भएको रकममा खण्ड (ख) र (ग) बमोजिमको रकम घटाई बाँकी हुन आउने कुल नाफाको पांच प्रतिशतले हुन आउने रकम ।

(३) व्यवस्थापकले कल्याणकारी कोषमा रहने रकम कुनै वाणिज्य बैंकमा खाता खोली जम्मा गर्नुपर्नेछ ।

(४) कल्याणकारी कोषको सञ्चालन व्यवस्थापक र व्यवस्थापकले तोकेको कुनै श्रमजीवी पत्रकारको संयुक्त दस्तखतबाट हुनेछ ।

+(५) प्रत्येक सञ्चार प्रतिष्ठानले यस नियमबमोजिम खडा भएको कोषको प्रत्येक वर्ष मान्यता प्राप्त लेखा परीक्षकबाट लेखा परीक्षण गराउनुपर्नेछ ।

+(६) प्रत्येक सञ्चार प्रतिष्ठानले उपनियम (५) बमोजिमको लेखा परीक्षण प्रतिवेदन सार्वजनिक गर्नुपर्नेछ ।

२८. **कल्याणकारी कोषको प्रयोग :** ❶सञ्चार प्रतिष्ठानले कल्याणकारी कोषको रकम देहायका काममा खर्च गर्न सक्नेछ :

(क) श्रमजीवी पत्रकार वा तिनका परिवारका सदस्यहरू बिरामी भई वा तत्काल दुर्घटना घटी आर्थिक सहयोग उपलब्ध गराउनुपर्ने भएमा,

(ख) श्रमजीवी पत्रकारलाई असाधारण परिस्थिति परी आएमा सहुलियत दरमा सापटी दिन,

(ग) श्रमजीवी पत्रकारहरूको बालबालिकालाई शिक्षाको लागि आवश्यक व्यवस्था गर्न,

+(ग१) नियम २८कबमोजिम असक्त वृत्तिबापतको रकम दिन,

+(ग२) नियम ३०खबमोजिम क्षतिपूर्तिको रकम दिन,

---

❶ पहिलो संशोधनद्वारा संशोधित ।

+ पहिलो संशोधनद्वारा थप ।

(घ) श्रमजीवी पत्रकारको हकहित र सुरक्षाको सम्बन्धमा सञ्चार प्रतिष्ठानले उपयुक्त ठहऱ्याएको अन्य कुनै विषयमा।

+**२८क. अशक्त वृत्तिः** सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा कुनै श्रमजीवी पत्रकारको दुर्घटनामा परी अङ्गभङ्ग भएको वा चोटपटक लागेको कारण निज शारीरिक वा मानसिक रूपमा सेवाको लागि अशक्त भएको भनी नेपाल सरकारले तोकेको मेडिकल बोर्डले सिफारिस गरेमा सम्बन्धित सञ्चार प्रतिष्ठानले त्यस्तो श्रमजीवी पत्रकारलाई निजको जीविकाको निमित्त बाँचुन्जेलसम्मका लागि अशक्त वृत्तिबापत निजले खाईपाई आएको मासिक तलबको आधा रकम नियम २७ बमोजिमको कोषबाट प्रत्येक महिना उपलब्ध गराउनुपर्नेछ।

**२९. सञ्चय कोषः** स्थायी श्रमजीवी पत्रकारलाई निजले खाईपाई आएको तलबबाट प्रत्येक महिनामा दश प्रतिशत रकम कट्टा गरी ❶सञ्चार प्रतिष्ठानले सो रकममा शत प्रतिशत थपी निजको नाममा सञ्चय कोष जम्मा गर्नुपर्नेछ।

**३०. उपचार खर्च :** श्रमजीवी पत्रकारले ❶सञ्चार प्रतिष्ठानमा काम गरेबापत प्रत्येक वर्षको अन्त्यमा आफूले खाईपाई आएको एक महिनाको पारिश्रमिक बराबरको रकम उपचार खर्चबापत पाउनेछ।

+**३०क. औषधि उपचार तथा दुर्घटना बिमाः** (१) व्यवस्थापकले सञ्चार प्रतिष्ठानमा कार्यरत प्रत्येक श्रमजीवी पत्रकारको लागि न्यूनतम पाँच लाख रूपियाँको औषधी उपचार तथा दुर्घटना बिमा गराउनुपर्नेछ।

(२) कुनै श्रमजीवी पत्रकार ❶सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा दुर्घटनामा परी चोटपटक लागेमा वा निजको अङ्ग भङ्ग भएमा वा अन्य कुनै कडा रोग लागेमा उपनियम (१) बमोजिम बिमा गराएको रकमबाट उपचार गराउनुपर्नेछ।

(३) उपनियम (१) बमोजिम बिमा गराउँदा लाग्ने कूल वीमा शुल्क रकममध्ये पचास प्रतिशत रकम सम्बन्धित सञ्चार प्रतिष्ठानले र पचास प्रतिशत रकम सम्बन्धित श्रमजीवी पत्रकारले बेहोर्नुपर्नेछ।

(४) सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा दुर्घटनामा परी कुनै

❶ पहिलो संशोधनद्वारा संशोधित।

+ पहिलो संशोधनद्वारा थप।

श्रमजीवी पत्रकारको मृत्यु भएमा उपनियम (१) बमोजिम गरिएको बिमाबापतको रकम ऐनको दफा १६ मा उल्लेख भएबमोजिमको व्यक्तिले पाउनेछ ।

(५) यस नियमबमोजिम श्रमजीवी पत्रकारले उपचारबापत रकम पाएको कारणले मात्र नियम ३० बमोजिम उपचार खर्च पाउनमा कुनै बाधा पुऱ्याएको मानिने छैन ।

(६) सञ्चार प्रतिष्ठानले यो नियम प्रारम्भ हुँदाका बखत आफ्नो प्रतिष्ठानमा कार्यरत प्रत्येक श्रमजीवी पत्रकारको यो नियम प्रारम्भ भएको मितिले छ महिनाभित्र उपनियम (१) बमोजिम बिमा गरी सोको जानकारी प्रेस रजिष्ट्रारलाई दिनुपर्नेछ ।

+**३०ख.क्षतिपूर्तिसम्बन्धी व्यवस्था:** (१) कुनै श्रमजीवी पत्रकारलाई सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा चोटपटक लाग्न गई सो चोटपटकको कारणबाट निजको कार्यसम्पादन क्षमतामा असरपर्ने भएमा सञ्चार प्रतिष्ठानले त्यस्तो श्रमजीवी पत्रकारलाई निजले खाईपाई आएको एक महिनाको तलब बराबरको रकम वा दशहजार रुपैयाँमध्ये जुन बढी हुन्छ सो रकम क्षतिपूर्तिको रूपमा एकमुष्ट उपलब्ध गराउनुपर्नेछ ।

(२) सञ्चार प्रतिष्ठानको कामको सिलसिलामा कुनै श्रमजीवी पत्रकारको व्यक्तिगत सम्पत्ति नष्ट भएमा सम्बन्धित सञ्चार प्रतिष्ठानले त्यस्तो श्रमजीवी पत्रकारलाई त्यसरी नष्ट भएको सम्पत्ति बराबरको रकम क्षतिपूर्तिबापत उपलब्ध गराउनुपर्नेछ ।

(३) यस नियमबमोजिम सम्बन्धित सञ्चार प्रतिष्ठान समक्ष श्रमजीवी पत्रकारले पाउने क्षतिपूर्तिको रकम सिफारिस गर्न प्रत्येक जिल्लामा देहायका सदस्यहरूको भएको समिति रहनेछ :

(क) प्रमुख जिल्ला अधिकारी - अध्यक्ष

(ख) सभापति,नेपाल पत्रकार महासङ्घ, जिल्ला शाखा - सदस्य

(ग) प्रमुख, जिल्ला प्रहरी कार्यालय - सदस्य

(घ) प्रमुख, सम्बन्धित सञ्चार प्रतिष्ठान - सदस्य

(ङ) प्रमुख, जिल्ला हुलाक कार्यालय - सदस्य सचिव

(४) उपनियम (३) बमोजिम गठन हुने समितिको सचिवालय सम्बन्धित जिल्ला हुलाक कार्यालयमा रहनेछ ।

**३१. उपदान :** पाँच वर्ष वा सो भन्दा बढी समय ❶सञ्चार प्रतिष्ठानमा

+ पहिलो संशोधनद्वारा थप ।

स्थायी सेवा गर्ने श्रमजीवी पत्रकारले आफूले काम गरेको अवधिअनुसार देहायबमोजिम उपदान पाउनेछ :-

(क) पाँच वर्षदेखि दश वर्षसम्म सेवा गरेको श्रमजीवी पत्रकारले आफूले काम गरेको प्रत्येक वर्षको निमित्त आधा महिनाको तलब,

(ख) दश वर्षदेखि पन्ध्रवर्षसम्म सेवा गरेको श्रमजीवी पत्रकारले आफूले काम गरेको प्रत्येक वर्षको निमित्त एक महिनाको तलब,

(ग) पन्ध्रवर्षदेखि बढी सेवा गरेको श्रमजीवी पत्रकारले आफूले काम गरेको प्रत्येक वर्षको निमित्त डेढ महिनाको तलब ।

➊३२. **चाडपर्व खर्च**: श्रमजीवी पत्रकारले आफ्नो धर्म, संस्कृति, परम्परा अनुसार मनाइने चाडपर्वको लागि खाइपाई आएको एक महिनाको तलब बराबरको रकम प्रत्येक वर्ष चाडपर्व खर्चको रूपमा पाउनेछ । यस्तो रकम एक आर्थिक वर्षमा एक पटक आफ्नो धर्म, संस्कृति, परम्परा अनुसार मनाइने मुख्य चाडपर्वको अवसरमा भुक्तानी लिन सक्नेछ ।

३३. **दैनिक तथा भ्रमण भत्ताबापतको सुविधा** : श्रमजीवी पत्रकारले कार्यालयको कामको शिलशिलामा कुनै ठाउँमा भ्रमण गर्नु परेमा सो ठाउँमा जाँदा र आउँदाको सवारी खर्च र सो ठाउँमा बस्दा लाग्ने खाना खर्चबापत व्यवस्थापकले तोकेबमोजिमको रकम ➊सञ्चार प्रतिष्ठानबाट दैनिक तथा भ्रमण भत्ताको रूपमा पाउनेछ ।

३४. **बिमाको सुविधा** : व्यवस्थापकले प्रत्येक श्रमजीवी पत्रकारको बिमाको व्यवस्था गर्नुपर्नेछ ।

३५. **अवकास पाउने श्रमजीवी पत्रकारले पाउने सुविधा** : ऐनको दफा २२ र २३ बमोजिम अवकाश पाउने श्रमजीवी पत्रकारलाई निजले सेवा गरेको प्रत्येक वर्षको निमित्त नियम ३१ मा तोकिएबमोजिमको उपदान सरहको सुविधा दिनुपर्नेछ । कुनै श्रमजीवी पत्रकारले पाँचवर्ष भन्दा कम अवधि ➊ सञ्चार प्रतिष्ठानमा सेवा गरेको भए निजले पाँचवर्ष सेवा गरेको मानी सोही अनुपातमा निजलाई सुविधा दिनुपर्नेछ ।

३६. **बढी समय काम गरेबापत पाउने सुविधा** : व्यवस्थापकले श्रमजीवी पत्रकारलाई कार्यालय समय बाहेक बढी समय ➊सञ्चार प्रतिष्ठानको

➊ पहिलो संशोधनद्वारा संशोधित ।

काममा लगाएमा त्यसरी बढी समय काममा लगाएबापत निजले पाउने एक दिनको पारिश्रमिकको रकमलाई दामासाहीले हिसाब गरी जति समय बढी काम लगाइएको छ सोही आधारमा थप सुविधा दिनुपर्नेछ ।

## परिच्छेद–५
## आचरण

३७. **समय पालन र नियमितता:** श्रमजीवी पत्रकारले निर्धारित समयमा कार्यालय वा आफ्नो कार्यक्षेत्रमा हाजिर हुनुपर्दछ र सकेसम्म पहिले बिदाको स्वीकृति नलिई कामबाट अनुपस्थित हुनु हुँदैन ।

३८. **अनुशासन र आज्ञापालन:** (१) श्रमजीवी पत्रकारले अनुशासनमा रही आफ्नो कर्तव्य इमान्दारी र तत्परताकोसाथ पालन गर्नुपर्दछ ।

(२) ✂ ......................

(३) श्रमजीवी पत्रकारले आफूभन्दा माथिको श्रमजीवी पत्रकारसँग आदर र आफू मुनिका व्यक्तिलाई उचित व्यवहार गर्नुपर्दछ ।

३९. **❶सञ्चार प्रतिष्ठानको नीति विपरीत कार्य गर्न नहुने :** (१) )सञ्चार प्रतिष्ठानको नीतिको विपरीत हुने गरी वा ❶सञ्चार प्रतिष्ठान वा पत्रिका र जनताको पारस्परिक सम्बन्धमा वा कुनै विदेशी राष्ट्र वा क्षेत्रको सम्बन्धमा खलल पर्न सक्ने गरी कुनै पनि श्रमजीवी पत्रकारले आफ्नो वास्तविक वा काल्पनिक नामबाट वा वेवारिश कुनै लेख प्रकाशित गर्न, प्रेसलाई कुनै खबर दिन, रेडियो वा टेलिभिजन आदिद्वारा भाषण प्रसारित गर्न, कुनै सार्वजनिक भाषण दिन वा कुनै वक्तव्य प्रकाशित गर्न हुँदैन ।

(२) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि प्रचलित कानुन र ❶सञ्चार प्रतिष्ठानको नीति विपरीत नहुने गरी लेख प्रकाशन वा ❶ प्रसारण गरी स्वस्थ्य आलोचना गर्न बाधापर्ने छैन ।

४०. **❶सञ्चार प्रतिष्ठानसम्बन्धी समाचार प्रकाशन गर्नमा प्रतिबन्ध :** श्रमजीवी पत्रकारले ❶सञ्चार प्रतिष्ठानद्वारा अख्तियार नपाई आफूले पत्रिकाको व्यवस्थापकीय वा समाचार सङ्कलनसम्बन्धी कायम गर्दा जानकारीमा आएको कुनै गोप्य वा कानुनद्वारा निषेधित विषय, आफूले लेखेको वा सङ्कलन गरेको कुनै कागज पत्र वा समाचार प्रत्यक्ष वा अप्रत्यक्ष

❶ पहिलो संशोधनद्वारा संशोधित ।
✂ पहिलो संशोधनद्वारा झिकिएको ।

रूपबाट अरू अनधिकृत व्यक्ति वा प्रेसलाई दिनु वा बताउनु हुँदैन ।

४१. **दान, उपहार, चन्दा आदि प्राप्त गर्न र सापटी लिनमा प्रतिबन्ध** : (१) ❶ सञ्चार प्रतिष्ठान वा पत्रिकामा कुनै पनि प्रकारले असर पर्न सक्ने गरी कुनै पनि श्रमजीवी पत्रकारले ❶सञ्चार प्रतिष्ठानको पूर्वस्वीकृतिबिना आफूले वा आफ्नो परिवारको कुनै सदस्यद्वारा कसैबाट कुनै प्रकारको दान, दातव्य, कोशेली वा उपहार स्वीकार गर्न वा चन्दा माग्न वा समाचार सङ्कलनको कार्यसँग सम्बन्धित व्यक्तिसँग सापटी लिन हुँदैन ।

(२) श्रमजीवी पत्रकारले कुनै विदेशी सरकार वा विदेशी सरकारको कुनै प्रतिनिधिबाट कुनै उपहार प्राप्त हुन आएमा निजले पत्रिका व्यवस्थापकलाई खबर दिई निकासा भएबमोजिम गर्नुपर्छ ।

४२. **प्रदर्शन र हड्ताल गर्नमा प्रतिबन्ध** : श्रमजीवी पत्रकारले ❶नेपालको सार्वभौमसत्ता र अखण्डतामा आँच आउने गरी, देशको शान्ति सुरक्षा, वैदेशिक सम्बन्ध र सार्वजनिक मर्यादा तथा अदालतको निर्णयको अवहेलना हुने गरी विभिन्न जात जाति, धर्म, वर्ग, क्षेत्र र सम्प्रदायका मानिसहरूबीच वैमनस्य उत्पन्न गराउने वा साम्प्रदायिक दुर्भावना फैलाउने गरी वा कुनै अपराधलाई प्रश्रय हुने गरी प्रदर्शन गर्न, हड्तालमा भाग लिन वा सो कार्य गर्ने उद्देश्यले अरूलाई उकास्नसमेत हुँदैन ।

४३. **हड्ताल थुनछेक तथा घेराउ गर्नमा प्रतिबन्ध** : श्रमजीवी पत्रकारले कुनै पनि व्यवस्थापक वा कर्मचारी वा श्रमजीवी पत्रकारको कानुन नियमद्वारा निर्धारित कर्तव्य पूरा गर्नमा बाधा विरोध हुने गरी हड्ताल वा कलम बन्द गर्न तथा शारीरिक वा मानसिक चोट पुग्ने गरी दबाब दिन वा सो गर्ने उद्देश्यले अरूलाई उकास्नसमेत हुँदैन ।

+तर ट्रेड यूनियनसम्बन्धी प्रचलित कानुनको अधीनमा रही श्रमजीवी पत्रकारले आफ्नो अधिकार प्रयोग गर्न कुनै बाधा पुगेको मानिने छैन ।

४४. **आफ्नो सेवा र पदअनुसारको आचारण पालन गर्नुपर्ने** : प्रत्येक श्रमजीवी पत्रकारले आफ्नो सेवा र पदअनुकूलको आचरणसमेत पालन गर्नुपर्दछ ।

❶ पहिलो संशोधनद्वारा संशोधित ।

**४५. मादक पदार्थ सेवन गर्न नहुने** : श्रमजीवी पत्रकारले मादक पर्दाथ सेवन गरी कार्यालयमा उपस्थित हुन र पेसासम्बन्धी कामको सिलसिलामा मादक पदार्थ सेवन गरी हुलहुज्जत गरी पत्रिका र व्यवस्थापनको बदनाम गर्नु हुँदैन ।

## परिच्छेद–६

## विविध

४६. ✂ …………

४७. ❶**कर्मचारी तथा कामदारको नियुक्ति, सेवाको सर्त र सुविधासम्बन्धी व्यवस्था** : ❶सञ्चार प्रतिष्ठानमा काम गर्ने ❶कर्मचारी तथा कामदारको नियुक्ति, सेवाको सर्त र सुविधासम्बन्धी व्यवस्था श्रमजीवी पत्रकारसरह हुनेछ ।

+४८. **श्रम कानुनबमोजिम हुने** : श्रमजीवी पत्रकारको नियुक्ति, सेवाको सर्त तथा सुविधाको सम्बन्धमा यस नियमावलीमा लेखिएका कुराहरूको हकमा यसै नियमावलीबमोजिम र अन्य कुराको हकमा प्रचलित श्रम कानुनबमोजिम हुनेछ ।

---

❶ पहिलो संशोधनद्वारा संशोधित ।

✂ पहिलो संशोधनद्वारा झिकिएको ।

+ पहिलो संशोधनद्वारा थप ।

# सूचनाको हकसम्बन्धी ऐन, २०६४

प्रमाणीकरण र प्रकाशन मिति

२०६४।४।५

व्यवस्थापिका-संसदले बनाएको २०६४ सालको ऐन न. ४

**सूचनाको हकसम्बन्धमा व्यवस्था गर्न बनेको विधेयक**

**प्रस्तावना :** राज्यका काम कारबाही लोकतान्त्रिक पद्धतिअनुरूप खुला र पारदर्शी बनाई नागरिकप्रति जवाफदेही र जिम्मेवार बनाउन, सार्वजनिक निकायमा रहेको सार्वजनिक महत्त्वको सूचनामा आम नागरिकको पहुँचलाई सरल र सहज बनाउन, राज्य र नागरिकको हितमा प्रतिकूल असर पार्ने संवेदनशील सूचनाको संरक्षण गर्न र नागरिकको सुसूचित हुने हकलाई संरक्षण र प्रचलन गराउने सम्बन्धमा कानुनी व्यवस्था गर्न वाञ्छनीय भएकोलेले, व्यवस्थापिका-संसदले यो ऐन बनाएको छ ।

## परिच्छेद-१

## प्रारम्भिक

१. **सङ्क्षिप्त नाम र प्रारम्भ :** (१) यस ऐनको नाम "सूचनाको हकसम्बन्धी ऐन, २०६४" रहेको छ ।

(२) यो ऐन प्रमाणीकरण भएको मितिबाट तीसौं दिनमा प्रारम्भ हुनेछ ।

२. **परिभाषा :** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "सार्वजनिक निकाय" भन्नाले देहायबमोजिमका निकाय वा संस्था सम्झनुपर्छ :-

(१) संविधानअन्तर्गतका निकाय,

(२) ऐनद्वारा स्थापित निकाय,

(३) नेपाल सरकारद्वारा गठित निकाय,

(४) कानुनद्वारा स्थापित सार्वजनिक सेवाप्रदायक सङ्गठित संस्था वा प्रतिष्ठान,

(५) प्रचलित कानुनबमोजिम दर्ता भएका राजनैतिक दल तथा सङ्गठन,

(६) नेपाल सरकारको पूर्ण वा आंशिक स्वामित्व वा नियन्त्रणमा रहेको वा अनुदानमा सञ्चालित वा नेपाल सरकारको अनुदान प्राप्त सङ्गठित संस्था,

(७) नेपाल सरकार वा कानुनद्वारा स्थापित निकायले कुनै सम्झौता गरी गठन गरेको सङ्गठित संस्था,

(८) प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा नेपाल सरकार वा विदेशी राष्ट्र वा अन्तर्राष्ट्रिय सङ्घ/संस्थाबाट रकम प्राप्त गरेर सञ्चालन भएका गैरसरकारी सङ्घ/संस्थाहरू,

(९) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी सार्वजनिक निकाय भनी तोकेका अन्य निकाय वा संस्था ।

(ख) "सूचना" भन्नाले सार्वजनिक निकायबाट सम्पादन हुने वा भएको सार्वजनिक महत्त्वको काम, तत्सम्बन्धी कारबाही वा निर्णयसँग सम्बन्धित कुनै लिखत, सामग्री वा जानकारी सम्झनुपर्छ ।

(ग) "सार्वजनिक महत्त्व" भन्नाले सार्वजनिक सरोकारको विषय सम्झनुपर्छ ।

(घ) "लिखत" भन्नाले लिपिबद्ध भएको जुनसुकै किसिमको लिखत सम्झनुपर्छ र सो शब्दले कुनै यन्त्रको माध्यमबाट सङ्कलन वा अद्याबीधक गरिएको वा मुद्रित वा पुनःप्रस्तुत गर्न सकिने श्रव्य-दृश्य सामग्रीसमेतलाई जनाउँछ ।

(ङ) "सूचनाको हक" भन्नाले सार्वजनिक निकायमा रहेको सार्वजनिक महत्त्वको सूचना माग्ने र पाउने अधिकार सम्झनुपर्छ र सो शब्दले सार्वजनिक निकायमा रहेको कुनै लिखत, सामग्री वा सो निकायको काम कारबाहीको अध्ययन वा अवलोकन गर्ने, त्यस्तो लिखतको प्रमाणित प्रतिलिपि प्राप्त गर्ने, सार्वजनिक महत्त्वको निर्माण कार्य

# द्वन्द्वपीडित पत्रकार कल्याण कोष निर्देशिका, २०७०

**प्रस्तावना**ः द्वन्द्वपीडित पत्रकार वा निजको परिवारको सदस्यलाई सहयोग प्रदान गरी पत्रकारिता पेसालाई थप मर्यादित, सुरक्षित र स्वतन्त्र बनाउन द्वन्द्वपीडित पत्रकार कल्याण कोष स्थापना गरी सञ्चालन गर्न आवश्यक भएकाले,

नेपाल सरकारले सुशासन (व्यवस्थापन र सञ्चालन) ऐन, २०६४ को दफा ४५ ले दिएको अधिकार प्रयोग गरी यो निर्देशिका बनाएको छ ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भ** : (१) यस निर्देशिकाको नाम "द्वन्द्वपीडित पत्रकार कल्याण कोष निर्देशिका, २०७०" रहेको छ ।

(२) यो निर्देशिका संवत् २०७० साल भाद्र १ गतेदेखि प्रारम्भ हुनेछ ।

२. **परिभाषा**ः विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस निर्देशिकामा-

(क) "कोष" भन्नाले दफा ३ बमोजिमको द्वन्द्वपीडित पत्रकार कल्याण कोष सम्झनुपर्छ ।

(ख) "द्वन्द्व" भन्नाले संवत् २०५२ साल फागुन १ गतेदेखि २०६३ साल मङ्सिर ५ गतेसम्मको अवधिमा मुलुकभित्र भएको सशस्त्र द्वन्द्व सम्झनुपर्दछ र सो शब्दले सो अवधिपछि कुनै सङ्गठित समूहले पत्रकार वा निजको परिवारविरुद्ध लक्षित गरेको कारबाहीलाईसमेत जनाउँछ ।

(ग) "द्वन्द्वपीडित" भन्नाले पत्रकारको रूपमा आफ्नो कर्तव्य पालना गर्दा वा गरेको कारणले द्वन्द्वमा परी मृत्यु वा अङ्गभङ्ग भएको वा कुटपिट गरिएको वा चल वा अचल सम्पत्ति कब्जा, तोडफोड वा नष्ट गरिएको वा काम गरिरहेको क्षेत्रबाट अन्यत्र विस्थापन भएको पत्रकार सम्झनुपर्दछ ।

(घ) "परिवार" भन्नाले पत्रकारसँग बस्ने तथा निजले पालन पोषण गर्नुपर्ने पति, पत्नी, छोरा, छोरी, धर्मपुत्र, धर्मपुत्री, बाबु, आमा वा सौतेनी आमा सम्झनुपर्छ र सो शब्दले महिला पत्रकारको

हकमा निजको सासु र ससुरालाईसमेत जनाउँछ ।

(ङ) "पत्रकार" भन्नाले सञ्चार प्रतिष्ठानमा व्यवस्थापकीय तथा प्रशासकीय अधिकार प्राप्त गरेका व्यक्तिबाहेक सञ्चारसम्बन्धी व्यवसाय वा सेवालाई प्रमुख व्यवसाय अपनाई पारिश्रमिक लिई सञ्चार प्रतिष्ठानमा पूर्ण वा आंशिक समय काम गर्ने नेपाली नागरिक सम्झनुपर्छ र सो शब्दले सञ्चार प्रतिष्ठानमा समाचार सामग्री सङ्कलन, उत्पादन, सम्पादन वा सम्प्रेषण गर्ने प्रधान सम्पादक, सम्पादक, संवाददाता, स्ट्रिञ्जर, समाचारवाचक, कार्यक्रम निर्देशक, अनुवादक, वेभ डिजाइनर, स्तम्भ लेखक, फोटो पत्रकार, प्रेस क्यामेरामेन, व्यङ्ग्य चित्रकार, कार्यक्रम निर्माता वा सञ्चालक, दृष्य वा भाषा सम्पादकजस्ता पत्रकारिता पेसासँग सम्बन्धित व्यक्तिलाई समेत जनाउँछ ।

(च) "मन्त्रालय" भन्नाले नेपाल सरकार, सूचना तथा सञ्चार मन्त्रालय सम्झनुपर्छ ।

(छ) "महासङ्घ" भन्नाले नेपाल पत्रकार महासङ्घ सम्झनुपर्छ ।

(ज) "समिति" भन्नाले दफा ५ बमोजिम गठन भएको कोष सञ्चालक समिति सम्झनुपर्छ ।

३. **कोषको स्थापनाः** (१) द्वन्द्वपीडित पत्रकार तथा निजका परिवारलाई सहयोग उपलब्ध गराउन "द्वन्द्व पीडित पत्रकार कल्याण कोष" नामको एक कोष स्थापना गरिनेछ ।

(२) उपदफा (१) बमोजिमको कोषमा देहायबमोजिमका रकमहरू रहने छन्-

(क) नेपाल सरकारबाट प्राप्त रकम,

(ख) स्वदेशी सङ्घ संस्था वा व्यक्तिबाट प्राप्त रकम,

(ग) विदेशी सरकार, अन्तराष्ट्रिय सङ्घसंस्था वा व्यक्तिबाट प्राप्त रकम,

(घ) अन्य स्रोतबाट प्राप्त रकम ।

(३) उपदफा (२) बमोजिम प्राप्त रकम समितिले तोकेको "क" वर्गको वाणिज्य बैंकमा मुद्धती खाता खोली राखिनेछ ।

(४) उपदफा (२) को खण्ड (ग) बमोजिमको रकम लिनु अघि समितिले अर्थ मन्त्रालयको स्वीकृति लिनुपर्नेछ ।

(५) कोषबाट हुने सबै खर्च उपदफा (२) बमोजिम कोषमा जम्मा भएको रकमबाट व्यहोरिनेछ ।

(६) समितिको सदस्य-सचिव र सूचना विभागको लेखा प्रमुखको संयुक्त हस्ताक्षरबाट खाताको सञ्चालन हुनेछ ।

(७) कुनै कारणले कोष विघटन भएमा कोषमा रहेको बाँकी रकम सञ्चित कोषमा दाखिल हुनेछ ।

४. **कोषको काम, कर्तव्य र अधिकारः** कोषको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) द्वन्द्वपीडित पत्रकार तथा निजको परिवार पहिचान गर्ने, अभिलेख राख्ने र अद्यावधिक गर्ने,

(ख) द्वन्द्वपीडित पत्रकार वा निजका परिवारलाई उपलब्ध गराइने सहयोगको अधिकतम सीमा निर्धारण गर्ने,

(ग) द्वन्द्वपीडित पत्रकार तथा निजका परिवारलाई आवश्यकताअनुसार नगद वा वस्तुगत सहयोग प्रदान गर्ने,

(घ) द्वन्द्वपीडित पत्रकार वा निजका परिवारको पुनर्स्थापना गर्न सहयोग पुऱ्याउने,

(ङ) द्वन्द्वका क्रममा द्वन्द्वपीडित पत्रकारको कब्जा गरिएको सम्पत्ति फिर्ता गर्ने कार्यमा आवश्यक सहयोग उपलब्ध गराउने,

(च) द्वन्द्वका क्रममा घाइते भएका पत्रकारको स्वास्थ्योपचारका लागि सहयोग गर्ने,

(छ) द्वन्द्वपीडित पत्रकारका आश्रित बालबालिकालाई शैक्षिक सुविधा एवं छात्रवृत्ति प्रदान गर्ने,

(ज) द्वन्द्वपीडित पत्रकारलाई आवश्यकताअनुसार मनोपरामर्श तथा कानुनी सेवा उपलब्ध गराउने, र

(झ) द्वन्द्वपीडित पत्रकारलाई सहयोग उपलब्ध गराउन आवश्यकताअनुसार विभिन्न क्षेत्रसँग समन्वय गर्ने ।

५. **समितिको गठनः** (१) कोषको तर्फबाट सम्पूर्ण कार्य गर्नको लागि एक कोष सञ्चालक समति रहनेछ ।

(२) उपदफा (१) बमोजिमको समितिको गठन देहायबमोजिम हुनेछः-

(क) सचिव, सूचना तथा सञ्चार मन्त्रालय -अध्यक्ष

(ख) सह-सचिव, शान्ति तथा पुनःनिर्माण मन्त्रालय -सदस्य

| | | |
|---|---|---|
| (ग) | सह-सचिव, महिला, बालबालिका तथा समाज कल्याण मन्त्रालय | -सदस्य |
| (घ) | सह-सचिव, गृह मन्त्रालय | -सदस्य |
| (ङ) | सह-सचवि अर्थ मन्त्रालय | -सदस्य |
| (च) | सह-सचिव, स्वास्थ्य तथा जनसङ्ख्या मन्त्रालय | -सदस्य |
| (छ) | प्रेस काउन्सिलका अध्यक्ष वा निजले तोकेको काउन्सिलको प्रतिनिधि | -सदस्य |
| (ज) | अध्यक्ष, नेपाल पत्रकार महासङ्घ, केन्द्रीय समिति | -सदस्य |
| (झ) | महानिर्देशक, सूचना विभाग | -सदस्य सचिव |

६. **समितिको बैठकसम्बन्धी कार्यविधिः** (१) समितिको बैठक आवश्यकताअनुसार बस्नेछ ।

(२) समितिको बैठक समितिको अध्यक्षले तोकेको मिति, स्थान र समयमा बस्नेछ ।

(३) समितिको बैठकमा छलफल हुने विषयसहितको सूचना समितिको सदस्य-सचिवले बैठक बस्नुभन्दा कम्तीमा चौबीस घण्टा अगावै सबै सदस्यलाई दिनुपर्नेछ ।

(४) समितिको बैठकमा पचास प्रतिशतभन्दा बढी सदस्यहरू उपस्थित भएमा समितिको बैठकको लागि गणपूरक सङ्ख्या पुगेको मानिनेछ ।

(५) समितिको बैठकको अध्यक्षता समितिको अध्यक्षले र निजको अनुपस्थितिमा बैठकमा उपस्थित सदस्यहरूले आफूमध्येबाट छानेको सदस्यले गर्नेछ ।

(६) समितिको बैठकमा बहुमतको राय मान्य हुनेछ र मत बराबर भएमा बैठकको अध्यक्षता गर्ने व्यक्तिले निर्णयक मत दिनेछ ।

(७) समितिको बैठकको निर्णय समितिको सदस्य-सचिवले प्रमाणित गरी राख्नुपर्नेछ ।

(८) समितिले आवश्यक ठानेमा समितिको कार्यसँग सम्बन्धित व्यक्तिलाई बैठकमा आमन्त्रण गर्न सक्नेछ ।

(९) समितिको बैठकसम्बन्धी अन्य कार्यविधि समिति आफैँले निर्धारण गरेबमोजिम हुनेछ ।

७. **कोषको रकम खर्च गर्नेसम्बन्धी कार्यविधिः** (१) कोषको रकम समितिको

निर्णयबिना खर्च गर्न सकिने छैन ।

(२) बैंकमा जम्मा भएको रकमको प्राप्त ब्याजबाट मात्र यस निर्देशिकामा उल्लिखित कुनै कार्यको लागि खर्च गर्न सकिनेछ ।

(३) ब्याजबापत प्राप्त रकम दुई आर्थिक वर्षको अन्त्यसम्ममा खर्च नभई बाँकी रहेमा त्यस्तो ब्याजको रकम अक्षय कोषमा जम्मा गरिनेछ ।

(४) एक आर्थिक वर्षमा कोषलाई प्राप्त भएको ब्याजको दश प्रतिशत रकममा नबढाई कोषको प्रशासकीय काममा खर्च गर्न सकिनेछ ।

८. **कोषबाट आर्थिक सहयोग प्रदान गर्न नसकिने:** यस निर्देशिकामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि द्वन्द्वपीडित पत्रकारले नेपाल सरकार वा अन्य सार्वजनिक संस्थाबाट कुनै किसिमको आर्थिक सहयोग वा राहत प्राप्त गरेको भएमा निजलाई यस निर्देशिकाबमोजिम आर्थिक सहयोग गरिने छैन ।

९. **विवरण अद्याबीधक राख्नुपर्ने:** (१) समितिले आफूले गरेको काम कारबाहीको अभिलेख अद्याबीधक गरी राख्नुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम अभिलेख अद्याबीधक राख्ने प्रयोजनका लागि महासङ्घले द्वन्द्वपीडित पत्रकारको विवरण समय-समयमा समितिलाई उपलब्ध गराउनुपर्नेछ ।

१०. **सहयोग प्राप्त गर्न प्रेस पास लिनुपर्ने:** प्रचलित कानुनबमोजिम प्रेस पास लिएको पीडित पत्रकारले मात्र यस निर्देशिकाबमोजिम सहयोग प्राप्त गर्न सक्नेछ ।

११. **कोषको लेखा तथा लेखा परीक्षण:** (१) कोषको लेखा नेपाल सरकारको लेखा प्रणालीबमोजिम राखिनेछ ।

(२) कोषको आन्तरिक लेखा परीक्षण सम्बन्धित कोष तथा लेखा नियन्त्रक कार्यालयबाट र अन्तिम लेखा परीक्षण महालेखा परीक्षकबाट हुनेछ ।

(३) कोषको आयव्ययको लेखा मन्त्रालयले जुनसुकै बखत जाँच्न वा जचाउन सक्नेछ ।

१२. **वार्षिक प्रतिवेदन पेस गर्नुपर्ने:** (१) कोषले वर्षभरिमा आफूले गरेको काम कारबाहीको वार्षिक प्रतिवेदन आर्थिक वर्ष समाप्त भएको तीन महिनाभित्र मन्त्रालयमा बुझाउनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम प्राप्त भएको वार्षिक प्रतिवेदन मन्त्रालयले

सार्वजनिक गर्न सक्नेछ ।

१३. **कोषको सचिवालयः** समितिको सचिवालय सूचना विभागमा रहनेछ ।

१४. **निर्देशिका कायम रहनेः** (१) यो निर्देशिका संबत् २०७५ साल चैत्र मसान्तसम्म कायम रहनेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि सो अवधिपश्चात् निर्देशिका आवश्यक देखिएमा नेपाल सरकारले सो विषयमा पुनरावलोकन गर्नेछ ।

१५. **खारेजी र बचाउः** (१) द्वन्द्वपीडित पत्रकार कल्याण कोष स्थापना र सञ्चालन मापदण्ड, २०६६ खारेज गरिएको छ ।

(२) द्वन्द्वपीडित पत्रकार कल्याण कोष स्थापना र सञ्चालन मापदण्ड, २०६६बमोजिम भए गरेका कार्यहरू यसै निर्देशिकाबमोजिम भए गरेको मानिनेछ ।

# पत्रकार दुर्घटना बिमा (व्यवस्थापन) निर्देशिका, २०७०

**प्रस्तावनाः** पत्रकारिताको क्षेत्रमा क्रियाशील रहँदाका बखत कुनै दुर्घटनामा परी चोटपटक लागेको वा अङ्गभङ्ग भएको अवस्थामा पत्रकारलाई औषधोपचारको व्यवस्था गर्न तथा त्यस्तो दुर्घटनाका कारणबाट निजको मृत्यु भएको अवस्थामा निजको आश्रित परिवारलाई क्षतिपूर्ति प्रदान गर्ने व्यवस्था मिलाई पत्रकारहरूको आर्थिक सुरक्षा तथा पेसागत व्यावसायिकता अभिवृद्धिमा सहयोग पुऱ्याउन पत्रकारहरूको दुर्घटना बिमा गर्नेसम्बन्धी निर्देशिका तर्जुमा गरी कार्यान्वयन गर्न वाञ्छनीय भएकोले,

नेपाल सरकारले सुशासन (व्यवस्थापन र सञ्चालन) ऐन, २०६४ को दफा ४५ बमोजिम यो निर्देशिका बनाएको छ ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भः** (१) यस निर्देशिकाको नाम "पत्रकार दुर्घटना बिमा (व्यवस्थापन) निर्देशिका, २०७०" रहेको छ ।

(२) यो निर्देशिका सम्वत् २०७० साल कार्तिक १ गतेदेखि प्रारम्भ भएको मानिनेछ ।

२. **परिभाषाः** विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा, यस निर्देशिकामा-

(क) "कोष" भन्नाले दफा ८ बमोजिम स्थापना भएको पत्रकार बिमा अक्षय कोष सम्झनुपर्छ ।

(ख) "समिति" भन्नाले दफा ९ बमोजिम गठन भएको सञ्चालक समिति सम्झनुपर्छ ।

(ग) "पत्रकार" भन्नाले सञ्चार प्रतिष्ठानमा व्यवस्थापकीय वा प्रशासकीय अधिकार प्राप्त गरेको व्यक्तिबाहेक सञ्चारसम्बन्धी व्यवसाय वा सेवालाई मुख्य व्यवसाय अपनाई पारिश्रमिक लिई सञ्चार प्रतिष्ठानमा पूर्ण वा आंशिक समय काम गर्ने नेपाली नागरिकलाई सम्झनुपर्दछ र सो शब्दले सञ्चार प्रतिष्ठानमा समाचार सामग्री सङ्कलन, उत्पादन, सम्पादन वा सम्प्रेषण गर्ने प्रधान सम्पादक, सम्पादक, संवाददाता, स्ट्रिन्जर,

समाचारवाचक, कार्यक्रम निर्देशक, अनुवादक, वेबपेज डिजाइनर, स्तम्भ लेखक, फोटो पत्रकार, प्रेस क्यामेरामेन, व्यङ्ग्य चित्रकार, कार्यक्रम निर्माता वा सञ्चालक, दृश्य वा भाषा सम्पादकजस्ता पत्रकारिता पेसासँग सम्बन्धित कार्यमा संलग्न रहेको वा नेपाली सञ्चार माध्यमको आधिकारिक प्रतिनिधिको हैसियतमा विदेशमा रही काम गरेको नेपाली नागरिकसमेतलाई जनाउँछ ।

(घ) "बिमा" भन्नाले यस निर्देशिकाअन्तर्गत गरिएको दुर्घटना बिमालाई सम्झनुपर्दछ ।

(ङ) "मन्त्रालय" भन्नाले नेपाल सरकार, सूचना तथा सञ्चार मन्त्रालय सम्झनुपर्दछ ।

३. **बिमा गरिने**: (१) पत्रकारले आफ्नो कार्य सम्पादन गर्दाका बखत हुनसक्ने दुर्घटनाबाट हुने क्षतिबापत बिमित पक्षले देहाय अनुसारको सुविधा प्राप्त गर्नेगरी बिमालेख तयार गर्ने व्यवस्था मिलाइनेछः-

(क) दुर्घटनाको कारण मृत्यु भएमा पाँच लाख रूपैयाँसम्म,

(ख) दुर्घटनाको कारणबाट श्रम नियमावली, २०५० मा उल्लेख भएबमोजिमका चोटपटकको कारणबाट ४५ प्रतिशतभन्दा बढी अशक्तता भएकोमा पाँच लाख रूपैयाँसम्म, र

(ग) खण्ड (क) र (ख) मा लेखिएको अवस्थामा बाहेक दुर्घटनाबाट उत्पन्न उपचारबापत लाग्ने खर्चको हकमा बीलबमोजिम बढीमा दुई लाख रुपैयाँसम्मको वास्तविक उपचार खर्च ।

तर-

(क) त्यस्तो उपचार खर्चमध्ये बीस प्रतिशत बराबर रकम सम्बन्धित पत्रकारले नै बेहोर्नुपर्नेछ र बाँकी ८० प्रतिशत रकम बीमकले बेहोर्नेछ ।

(ख) उपचार खर्चको कूल रकम बिमाङ्कको २ प्रतिशतभन्दा कम भएको अवस्थामा बिमितले क्षतिपूर्ति दाबी गर्न पाउनेछैन ।

(२) उपदफा (१) मा जनुसुकै कुरा लेखिएको भए तापनि कुनै अन्य निकायबाट दुर्घटना बिमा गरिएका पत्रकारको हकमा यस निर्देशिकाअन्तर्गत बिमा गरिने छैन ।

४. **बिमितले लाभ प्राप्त गर्ने अवस्था**: (१) दफा ३ बमोजिम बिमा लेख जारी भएकोमा बिमाबाट बिमितले आफ्नो कर्तव्यपालनको सिलसिलामा

भएको दुर्घटनाका कारण उत्पन्न देहायको कुनै अवस्थामा लाभ प्राप्त गर्न सक्नेछः-

(क) बिमित व्यक्तिको मृत्यु भएमा,

(ख) बिमित व्यक्ति स्थायी रूपले पूर्ण वा आंशिक रूपमा अशक्त भएमा, वा

(ग) बिमित व्यक्ति अस्थायी रूपले पूर्ण अशक्त भएमा ।

(२) बिमित व्यक्ति दुर्घटनामा परी घरमै बसेर उपचार गर्नुपर्ने अवस्थामा निजको औषधोपचारमा बिलबमोजिमको लाग्ने खर्च बिमितले भराई लिन पाउनेछ ।

(३) बिमित व्यक्तिको मृत्यु भएमा निजले इच्छाएको व्यक्तिले र ईच्छाएको व्यक्ति नभएमा नजिकको हकवालाले बिमा रकम बुझिलिन पाउनेछ ।

५. **बिमितले बिमा सुविधा प्राप्त गर्न नसक्ने अवस्थाः** दफा ४ मा जुनसुकै कुरा लेखिएको भए तापनि दुर्घटना बिमाअन्तर्गत देहायका अवस्था वा कारणबाट बिमितको मृत्यु भएमा वा निजलाई चोटपटक लागेमा दफा ३ बमोजिम दुर्घटना बिमाबापतको सुविधा दाबी गर्न पाइने छैनः-

(क) पत्रकारितासम्बन्धी कामको सिलसिलामा बाहेक जोखिम छ भन्ने जानीजानी काम गरेको कारणले आफैँले चोकपटक लगाएको भएमा, आत्महत्या वा सोको प्रयास गरेमा, मादक पदार्थ वा लागू औषधीको प्रभावको कारणबाट कुनै घटना घटेको भएमा,

(ख) प्रचलित कानुनबमोजिम अनुमति प्राप्त हवाई जहाजमा यात्रीको रूपमा यात्रा गरेकोमा बाहेक अन्य उडानमा हवाई यात्रा गरी घटना घटेमा, काबा खाने खेल (Wheel Race), घोडा दौड, बन्जी जम्पिङ्ग, प्याराग्लाइडिङ्ग वा मोटरसाइकल दौड, पोलो, शिकार, स्की ड्राइभिङ, पर्वतारोहण, निशानवाजी वा यस्तै साहसिक खेलहरूमा संलग्न भएको कारण घटना घटेको भएमा,

(ग) होस ठेगाना नभएको कारणबाट सिर्जना भएको घटनामा, बिमित व्यक्तिले प्रचलित कानुन प्रतिकूल कार्य गरेका कारणबाट सिर्जित परिणाम, दुर्घटनाबाट नभई उद्वेग वा स्नायुसम्बन्धी चोटपटकका कारणबाट घटना घटेको भएमा,

(घ) मानव जीवन रक्षा गर्न प्रयास गर्दाबाहेक नचाहिँदो खतरा मोल्ने कार्य गरेबापत दुर्घटना भएमा ।

(ङ) आणविक विकिरण वा आणविक इन्धनको विस्फोटन वा ज्वलनपछि बाँकी रहन गएको पदार्थबाट निस्कने रेडियोधर्मिताको कारण हुने दुर्घटनामा ।

६. **बिमा शुल्क वा बिमित योगदानः** (१) यस निर्देशिकाबमोजिम बिमा कार्यक्रममा सहभागी हरेक बिमितका लागि वार्षिक रूपमा बुझाउनुपर्ने बिमाशुल्कको ७५ प्रतिशत रकम दफा ८ बमोजिमको कोषबाट बेहोरिने छ र बाँकी २५ प्रतिशत रकम स्वतन्त्र पत्रकार भए निज स्वयंले र सञ्चार प्रतिष्ठानमा कार्यरत पत्रकार भए निज सम्बद्ध सञ्चार संस्थाले बेहोर्नुपर्नेछ ।

तर, सरकारी लोककल्याणकारी विज्ञापन नलिने मिडियामा कार्यरत पत्रकार, स्वतन्त्र रूपमा कार्यरत पत्रकार र समाचार उत्पादन कार्यमा संलग्न पत्रकारहरूले आफैंले बिमा शुल्कको पचास प्रतिशत रकम बुझाई बिमा योजनामा सहभागी हुन सक्नेछन् ।

७. **सहभागीको योग्यताः** यस निर्देशिकाबमोजिमको बिमामा सहभागी हुनका लागि सम्बन्धित पत्रकारले देहायको योग्यता पूरा गरेको हुनुपर्नेछ :

(क) सूचना विभागबाट जारी गरिने प्रेस परिचयपत्र प्राप्त गरेको,

(ख) नेपाल पत्रकार महासङ्घको सदस्यता प्राप्त गरेको ।

८. **अक्षयकोषको स्थापना र सञ्चालनः** (१) यस निर्देशिकाबमोजिम नेपाल सरकारकातर्फबाट वार्षिक रूपमा बिमाशुल्क भुक्तानी गर्ने प्रयोजनका लागि "पत्रकार दुर्घटना बिमा कोष" नामको एक अक्षय कोष स्थापना गरिनेछ ।

(२) उपनियम (१) बमोजिमको कोषमा देहायका नगद तथा वस्तुगत सहायता रहने छन्:-

(क) नेपाल सरकारबाट प्राप्त अनुदान,

(ख) नेपाल सरकार, अर्थ मन्त्रालयको स्वीकृति लिई विदेशी सरकार वा व्यक्ति, अन्तर्राष्ट्रिय सङ्घसंस्थाबाट प्राप्त अनुदान,

(ग) नेपाल पत्रकार महासङ्घ वा सञ्चार प्रतिष्ठानद्वारा प्राप्त रकम,

(घ) गैरआवासीय नेपालीबाट प्राप्त अनुदान,

(ङ) अन्तर्राष्ट्रिय च्यारिटीबाट प्राप्त अनुदान

(च) नेपाली सङ्घसंस्था वा व्यक्तिबाट प्राप्त अनुदान

(छ) अन्य स्रोतबाट प्राप्त अनुदान ।

(३) उपनियम (२) बमोजिम कोषमा प्राप्त रकम सञ्चालक समितिले "पत्रकार बिमा कोष" का नाममा "क" वर्गको वाणिज्य बैंकको मुद्दती निक्षेपमा जम्मा गर्नेछ ।

(४) कोषमा वार्षिक रूपमा प्राप्त हुन आउने ब्याज रकमबाट पत्रकार हरूको दुर्घटना बिमाबापत वार्षिक रूपमा तिर्नुपर्ने बिमाशुल्कमध्ये नेपाल सरकारतर्फको दायित्व भुक्तानीका लागि खर्च गरिनेछ ।

तर बिमा गरिने पहिलो वर्षको बिमा शुल्कका लागि आवश्यकपर्ने रकम अक्षयकोषमा राखिएको रकमबाटै बेहोरिने छ ।

(५) कोषको सञ्चालन संचालक समितिका सदस्य-सचिव र सूचना विभागका लेखा प्रमुखको संयुक्त हस्ताक्षरबाट हुनेछ ।

(६) कोष कुनै कारणले विघटन भएमा कोषमा रहेको बाँकी रकम सञ्चित कोषमा जम्मा हुनेछ ।

(७) सञ्चालक समितिको कोषको परिचालन तथा काम कारबाहीको वार्षिक प्रगति प्रतिवेदन हरेक वर्षको श्रावण मसान्तभित्र सूचना तथा सञ्चार मन्त्रालयमा बुझाउनुपर्नेछ ।

९. **सञ्चालक समितिको गठनः** कोषको नीतिगत निर्णय तथा कोष सञ्चालन तथा व्यवस्थापन गर्नको लागि देहायबमोजिमको एक कोष सञ्चालक समिति रहनेछः-

(क) सचिव, सूचना तथा सञ्चार मन्त्रालय - संयोजक

(ख) अध्यक्ष, नेपाल पत्रकार महासङ्घ, केन्द्रीय समिति - सदस्य

(ग) सदस्य प्रतिनिधि, प्रेस काउन्सिल नेपाल - सदस्य

(घ) बिमा समितिको सिफारिसमा समितिबाट मोनित बिमा विज्ञ- सदस्य

(ङ) महानिर्देशक, सूचना विभाग - सदस्य-सचिव

१०. **सञ्चालक समितिको बैठकः**

(१) समितिको बैठक आवश्यकता अनुसार बस्नेछ ।

(२) समितिको बैठक समितिको संयोजकले तोकेको मिति, स्थान र

समयमा बस्नेछ ।

(३) समितिको बैठकमा छलफल हुने विषयसहितको सूचना समितिको सदस्य-सचिवले बैठक बस्नुअगावै लिखित रूपमा सबै सदस्यलाई दिनुपर्नेछ ।

(४) समितिको बैठकमा पचास प्रतिशतभन्दा बढी सदस्यहरू उपस्थित भएमा समितिको बैठकको लागि गणपूरक सङ्ख्या पुगेको मानिनेछ ।

(५) समितिले सम्बन्धित निकायका पदाधिकारी, विशेषज्ञ वा अन्य उपयुक्त ठानेको व्यक्तिलाई बैठकमा आमन्त्रण गर्न सक्नेछ ।

(६) समितिको बैठकको निर्णय समितिको सदस्य सचिवले प्रमाणित गरी राख्नुपर्नेछ ।

११. **सञ्चालक समितिको काम, कर्तव्य र अधिकार**: सञ्चालक समितिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछः-

(क) कोषको सञ्चालन तथा व्यवस्थापन गर्ने,

(ख) अक्षय कोषबाट वार्षिक रूपमा कोषमा प्राप्त हुन आउने ब्याज रकमबाट पत्रकारहरूको दुर्घटना बिमाबापत तिर्नुपर्ने बिमा शुल्कमध्ये नेपाल सरकारका तर्फबाट बेहोरिनुपर्ने दायित्व भुक्तानीका लागि खर्च गरिने रकमको अंश तोक्ने,

(ग) बिमा गरिने पहिलो वर्षमा बिमा शुल्कका लागि आवश्यकपर्ने रकम अक्षयकोषबाट निकासा दिने,

(घ) कोषका प्रशासनिक निर्णयहरू अनुमोदन गर्ने,

(ङ) अन्य आवश्यक कार्य गर्ने ।

१२. **बिमा प्रशासन तथा सञ्चालन**: (१) बिमा प्रशासनसम्बन्धी कार्य गर्नका लागि सूचना विभागमा कोषको एक सचिवालय रहनेछ ।

(२) एक आर्थिक वर्षमा कोषलाई प्राप्त भएको ब्याजको २ प्रतिशत रकममा नबढाई समितिले स्वीकृत गरेको बजेटको अधीनमा रही कोषको प्रशासकीय काममा खर्च गर्न सकिनेछ ।

(३) पत्रकारहरूको अभिलेख सूचना विभाग र नेपाल पत्रकार महासङ्घको समन्वयमा तयार गरिनेछ ।

(४) बिमाका लागि बीमक संस्थाहरूको छनौटसम्बन्धी प्रकृया सार्वजनिक खरिद ऐन, २०६३ तथा सार्वजनिक खरिद नियमावली, २०६४ बमोजिम हुनेछ ।

१३. **कोषको खर्च विधि र अभिलेखः** (१) कोषको लेखा प्रचलित नेपाल कानुनबमोजिम राख्नुपर्नेछ ।

(२) कोषको सम्पूर्ण लेखा वार्षिक रूपमा महालेखा परीक्षकको कार्यालयबाट लेखा परीक्षण गराई सार्वजनिक जानकारीको लागि प्रकाशन गर्नुपर्नेछ ।

(३) कोषको सचिवालयले आफूले गरेको काम कारबाहीको अभिलेख अद्यावधिक गरी राख्नुपर्नेछ र बिमामा सहभागी हुने पत्रकारहरूको नाम नामेसीसहितको प्रगति विवरण प्रत्येक चौमासिक रूपमा सार्वजनिक गर्नुपर्नेछ ।

१४. **प्रक्रिया निर्धारण गर्न सक्नेः** सञ्चालक समितिले पत्रकारहरूको बिमाका सम्बन्धमा यस निर्देशिकामा व्यवस्था नभएका विषयमा आवश्यकताअनुसार थप प्रक्रिया निर्धारण गर्न सक्नेछ ।

# पत्रकार दुर्घटना बिमालेख

**“संस्थागत रूपमा पारिश्रमिक पाउने गरी नियुक्ती भएका पत्रकारहरूको लागि मात्र)**

अनुसूचीमा उल्लेख भएको प्रस्ताव तथा उद्घोषणलाई यस करारको आधार मान्ने गरी (बीमकको नाम उल्लेख गर्ने) (यस पछि बीमक भनिएको) ले प्राप्त गरेको र यस अनुसचीमा उल्लेख गरेबमोजिम बिमाशुल्क भुक्तानीसमेत प्राप्त भएकोले;

अनुसूचीबमोजिम बिमाशुल्क भुक्तानी गरेबापत जुन दुर्घटना घटेमा भुक्तानी दिने भनिएको हो सो घटना र भुक्तानी पाउने व्यक्तिको कानुनी अधिकार प्रमाणित भएको अवस्थामा यस करारको अधीनमा रही यस बिमालेखबमोजिमका रकमहरू बीमकले आफनो कार्यालयमार्फत भुक्तानी दिनेछ ।

यस बिमालेखको अनुसूची, लाभको तालिका, परिभाषा, अपवादहरू, सर्तहरू र बिमितको विवरण सूची यस करारनामाको अभिन्न अङ्ग मानिनेछ ।

| **अनुसूची** | |
|---|---|
| यस बिमालेखले रक्षावरण गरेका बिमितहरू<br>संलग्न बिमितको विवरण सूचीबमो जिम । | **बिमा प्रस्ताव मितिः**<br>बिमालेखकोः<br>१. नम्बर<br>२. जारी स्थानः<br>३. जारी मितिः<br>४ जारी समयः<br>५. नवीकरण संम्पुष्टि नम्बर |
| बिमितको तर्फबाट बिमा प्रस्ताव गर्ने प्रस्तावककोः<br>१. नाम थरः<br>२. ठेगानाः<br>३. पदः बिमाङ्क रकम | बिमितको विवरण सूची बमोजिम ।<br>बिमा अवधिः देखि सम्म<br>रसिद नं.ः<br>रसिद जारी भएको समयः |

| | |
|---|---|
| | लाभः<br>लाभको तालिकाको खण्ड "क" देखि खण्ड "ङ" सम्म |
| अभिकर्ताको:<br>नाम थर:<br>इजाजतपत्र नं.:<br>संघ/संस्था<br>भएमा छाप : | **बिमाशुल्क गणना**<br>जोखिम समूहबाहेकको बिमाशुल्क (........ का दरले कुल बिमाङ्क ..... को) रू.<br>जोखिम समूहको बिमाशुल्क रू<br>अतिरिक्त बिमाशुल्क-यदि भएमा (....का दरले बिमाङ्क ...को) रू.<br>टिकट दस्तुर रू<br>मूल्य अभिबृद्धि कर रू<br>जम्मा रू. |
| **भुक्तानी पाउने व्यक्तिः**<br>जीवित भए स्वयं बीमित, सो नभए बिमितले इच्छाएको व्यक्ति, सो नभए बिमा ऐन, २०४९ को दफा ३८ अनुसार बिमितको आश्रित व्यक्तिले यस बिमालेख अन्तर्गत भुक्तानी पाउनेछ । | |
| **भुक्तानी पाउने अवस्थाः**<br>यो बिमालेख कायम रहेको अवधिमा यस बिमालेखमा परिभाषित दुर्घटनाको एक मात्र प्रत्यक्ष कारणबाट बिमितलाई भएको शारीरिक क्षतिमा यसै बिमालेखको लाभको तालिकामा उल्लेख भएबमोजिमको रकम बिमकले भुक्तानी दिनेछ । | |

अधिकृत हस्ताक्षर

जाँच्ने :

नाम थर :

मिति :

पद :

कार्यालयको छाप :

| लाभको तालिका | | |
|---|---|---|
| खण्ड | घटना<br>दुर्घटना घटेको १८३ दिन भित्र त्यस्तो दुर्घटनाको एक मात्र र प्रत्यक्ष कारणबाट बिमितको | लाभ |
| (क) | मृत्यु भएमा | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्क रकम । |
| (ख) | अ) स्थायी पूर्ण अशक्तता भएमा, वा<br>आ) निको नहुने गरी दुवै आँखाको दृष्टि पूर्ण क्षति भएमा, वा<br>इ) दुवै हातको नाडी वा दुवै खुट्टाको गोली गाँठोको जोर्नी वा सो भन्दा माथिदेखि शारीरिक रूपले काम नलाग्ने भएमा, वा<br>ई) एउटा हातको नाडी वा एउटा खुट्टाको गोली गाँठोको जोर्नी वा सो भन्दा माथिदेखि र एउटा आँखाको दृष्टि पूर्ण रूपले क्षति भएमा<br>अ) एउटा आँखाको दृष्टि पूर्णरूपले क्षति भएमा वा, | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्क रकम । |

| | | |
|---|---|---|
| (ग) | अ) एउटा आँखाको दृष्टि पूर्ण रूपले क्षति भएमा, वा<br>आ) एउटा हातको नाडी वा एउटा खुट्टाको गोली गाँठोको जोर्नी वा सो भन्दा माथिदेखि शारीरिक रूपले काम नलाग्ने गरी क्षति भएमा, वा<br>इ) बोल्ने क्षमता पूर्ण रूपले क्षति भएमा, वा<br>ई) दुवै कानको सुन्ने शक्ति पूर्ण रूपले क्षति भएमा | बिमितको विवरण सूचीमा उल्लेखित बिमाङ्कको ५० प्रतिशत । |
| | उ) एउटा कानको सुन्ने शक्ति पूर्ण रूपले क्षति भएमा,वा<br>ऊ) हातको बुढी औंलाको पूर्ण रूपले क्षति भएमा | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको २० प्रतिशत । |
| | ए) हातको चोरी औंलाको पूर्ण रूपले क्षति भएमा | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको १५ प्रतिशत । |
| | ऐ) हातको अरू कुनै औंलाको पूर्ण रूपले क्षति भएमा | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको ७ प्रतिशत प्रति औंला । |
| | ओ) खुट्टाको बुढी औंलाको पूर्ण रूपले क्षति भएमा | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको ५ प्रतिशत । |

| | | |
|---|---|---|
| | औ) खुट्टाको अरू कुनै औंलाको पूर्ण रूपले क्षति भएमा | बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको ४ प्रतिशत प्रति औंला । |
| | अं) अन्य कुनै अङ्ग भङ्ग भएमा | सम्बन्धित बिशेषज्ञले शारीरिक क्षतिको समानुपातिक हुने गरी निर्धारण गरेको बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको प्रतिशत । |
| (घ) | अस्थायी पूर्ण अशक्तता भएमा | अस्थायी पूर्ण अशक्तता कायम रहेको अवधिभरको लागि बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको १ प्रतिशत वा बिमितको साप्ताहिक आयमध्ये जुन कम हुन्छ सो रकम प्रतिहप्ता ।<br>तर<br>१. यस्तो रकमको योगफल बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्क भन्दा बढी हुने छैन, र<br>२. अस्थायी पूर्ण अशक्तता भएको अवस्थामा बिमितले अन्य कुनै पनि बिमाबाट निजको आयको नोक्सानी (Loss of Income)बापत दाबी भुक्तानी पाउने प्रमाणित भएमा यस खण्डअन्तर्गत बीमकले भुक्तानी गर्दा बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको समानुपातिक हिसावले भुक्तानी गर्नेछ । |

| | | |
|---|---|---|
| (ङ) | औषधोपचार खर्च | वास्तविक औषधोपचार खर्चको बढीमा ८० प्रतिशत रकम<br>तर<br>१. दुर्घटनाबाट चोटपटक लागेको अवस्थामा बिमितले अन्य कुनै पनि बिमाबाट निजको औषधोपचार खर्चबापत दाबी भुक्तानी पाउने प्रमाणित भएमा यस खण्डअन्तर्गत बीमकले भुक्तानी गर्दा बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको बिमाङ्कको समानुपातिक हिसाबले भुक्तानी गर्नेछ ।<br>२. उपचार खर्चको कूल रकम बिमांको २ प्रतिशतभन्दा कम भएको अवस्थामा बिमितले क्षतिपूर्ति दाबी गर्न पाउने छैन ।<br>३ यस्तो दाबी रकम रु. दुई लाखभन्दा बढी हुने छैन । |
| माथि उल्लिखित घटनाहरूमध्ये एकभन्दा बढी घटना भएमा बीमकको दायित्व प्रत्येक घटनाको लागि निर्धारित रकमको योगफल बरावर हुनेछ तर यस बिमालेखअन्तर्गत बीमकले भुक्तानी गर्ने रकम बिमितको विवरण सूचीमा उल्लेखित सम्बन्धित बिमितको  बिमाङ्क भन्दा बढी हुने छैन । | | |

**परिभाषा**

यस बिमालेखमा जहाँसुकै प्रयोग भएको भएतापनि देहायका शब्दहरूको परिभाषा देहायबमोजिम हुनेछ :

१. **बिमित** : “बिमित” भन्नाले बिमा प्रस्ताव गर्ने प्रस्तावक संस्थाले प्रस्ताव फारामसँगै बिमितको सूचीमा आवश्यक विवरणसहित संलग्न गरिएका व्यक्तिहरू सम्झनुपर्छ ।

२. **पत्रकार** : “पत्रकार” भन्नाले सञ्चार प्रतिष्ठानमा व्यवस्थापकीय वा प्रशासकीय अधिकार प्राप्त गरेको व्यक्तिबाहेक सञ्चारसम्बन्धी व्यवसाय

वा सेवालाई मुख्य व्यवसाय अपनाई पारिश्रमिक लिई सञ्चार प्रतिष्ठानमा पूर्ण वा आंशिक समय काम गर्ने नेपाली नागरिकलाई सम्झनुपर्दछ र सो शब्दले सञ्चार प्रतिष्ठानमा समाचार सामग्री सङ्कलन, उत्पादन, सम्पादन वा सम्प्रेषण गर्ने प्रधान सम्पादक, सम्पादक, संवाददाता, स्ट्रिञ्जर, समाचारवाचक, कार्यक्रम निर्देशक, अनुवादक, वेबपेज डिजाइनर, स्तम्भ लेखक, फोटो पत्रकार, प्रेस क्यामेराम्यान, व्यङ्ग चित्रकार, कार्यक्रम निर्माता वा सञ्चालक, दृष्य वा भाषा सम्पादक जस्ता पत्रकारिता पेसासँग सम्बन्धित कार्यमा संलग्न रहेको वा नेपाली सञ्चार माध्यमको आधिकारीक प्रतिनिधिको हैसियतमा विदेशमा रही काम गरेको नेपाली नागरिकलाई समेत बुझाँउछ ।

३. **दुर्घटना** : "दुर्घटना" भन्नाले बाहिरी, आँखाले स्पष्ट देख्न सकिने र साङ्घातिक माध्यमबाट हुने आकस्मिक र अप्रत्यासित घटना सम्झनुपर्छ।

४. **स्थायी पूर्ण अशक्तता** : "स्थायी पूर्ण अशक्तता" भन्नाले बिमित आय वा मुनाफा आर्जन गर्ने कुनै पनि व्यवसाय वा पेसा गर्न सधैको लागि असमर्थ भएको अवस्था सम्झनुपर्छ । भविष्यमा निको हुने वा नहुनेमा एकिन हुन नसकिने अवस्थामा दुर्घटना घटेको मितिदेखि ३६५ दिनसम्म बिमित स्थायी पूर्ण अशक्त रहेमा निज सधैको लागि स्थायी पूर्ण अशक्त मानिनेछ ।

५. **निको नहुने गरी आँखाको दृष्टि पूर्ण रूपले क्षति** : "निको नहुने गरी आँखाको दृष्टि पूर्ण रूपले क्षति" भन्नाले नेत्र विज्ञान (Ophthalmology) मा विशेषज्ञता प्राप्त गरेको इजाजत प्राप्त चिकित्सकद्वारा निको नहुने भनि प्रमाणित गरिएको आँखाको दृष्टि पूर्ण रूपले क्षति भएको सम्झनुपर्छ । भविष्यमा निको हुने वा नहुनेमा यकिन हुन नसकिने अवस्थामा दुर्घटना घटेको मितिदेखि ३६५ दिनसम्म बिमितको दृष्टि शक्ति पूर्ण रूपले क्षति भएको अवस्था कायम रहेमा निजको निको नहुने गरी आँखाको दृष्टि पूर्ण रूपले क्षति भएको मानिनेछ ।

६. **शारीरिक रूपले काम नलाग्ने** : "शारीरिक रूपले काम नलाग्ने" भन्नाले दुर्घटनाबाट चोटपटक लागेको अङ्गको सम्बन्धमा उक्त विषयमा विशेषज्ञता प्राप्त गरेको इजाजत प्राप्त चिकित्सकद्वारा प्रमाणित गरिएको अङ्गको उपयोगको पूर्ण ह्रास वा पूर्ण स्थायी क्षतिलाई सम्झनुपर्छ । भविष्यमा निको हुने वा नहुनेमा एकिन हुन नसकिने अवस्थामा दुर्घटना घटेको मितिदेखि ३६५ दिनसम्म बिमितको कुनै अङ्ग शारीरिक रूपले काम नलाग्ने भएको अवस्था कायम रहेमा निजको उक्त अङ्ग सधैको

लागि शारीरिक रूपले काम नलाग्ने भएको मानिनेछ ।

७. **अन्य कुनै अङ्गभङ्ग** : "अन्य कुनै अङ्गभङ्ग" भन्नाले यस बिमालेखको लाभको तालिकाको खण्ड (ख) र खण्ड (ग) को उपखण्ड (अ) देखि (औं) मा उल्लेख भएका बाहेक अन्य अङ्गमा दुर्घटनाबाट चोटपटक लागि सो चोटपटक लागेको अङ्गको सम्बन्धमा उक्त विषयमा विशेषज्ञता प्राप्त गरेको इजाजत प्राप्त चिकित्सकद्वारा प्रमाणित गरिएको अङ्गको उपयोगको पूर्ण ह्रास वा पूर्ण स्थायी क्षतिलाई सम्झनुपर्छ । भविश्यमा निको हुने वा नहुनेमा यकिन हुन नसकिने अवस्थामा दुर्घटना घटेको मितिदेखि ३६५ दिनसम्म बिमितको कुनै अङ्ग शारीरिक रूपले काम नलाग्ने भएको अवस्था कायम रहेमा निजको उक्त अङ्ग सँधैको लागि अङ्गभङ्ग भएको मानिनेछ ।

८. **अस्थायी पूर्ण अशक्तता** : "अस्थायी पूर्ण अशक्तता" भन्नाले बिमित आय वा मुनाफा आर्जन गर्ने कुनै पनि व्यवसाय वा पेसा गर्न केहि समयको लागि पूर्ण रूपले असमर्थ भएको अवस्था सम्झनुपर्छ ।

९. **आवश्यक तथा वास्तविक औषधोपचार खर्च** : "आवश्यक तथा वास्तविक औषधोपचार खर्च" भन्नाले दुर्घटनाबाट बिमितलाई लागेको घाउ चोटको लागि आवश्यक उपचार, उपचार सामग्री वा उपचार सेवाको लागि भुक्तानी गरिएको वास्तविक खर्च रकम सम्झनुपर्छ जुन खर्च रकम सो खर्च गरिएको ठाउँमा त्यस्तो उपचार, उपचार सामग्री वा उपचार सेवाको न्यूनतम दर भन्दा बढी हुने छैन ।

१०. **जोखिम समूह** : "जोखिम समूह" भन्नाले हुलदङ्गा, हडताल, नागरिक उपद्रव, द्वेषपूर्ण कार्य, आतङ्कवाद तथा विध्वंशात्मक कार्य जस्ता क्रियाकलापबाट हुन सक्ने दुर्घटना सम्झनुपर्छ ।

११. **साप्ताहिक आय** : "साप्ताहिक आय" भन्नाले बिमितको ब्यक्तिगत संलग्नताबाट बिमितले आर्जन गर्दै आएको मासिक आम्दानीको चार भागको एक भाग रकम सम्झनुपर्छ ।

**बिमालेखले नसमेट्ने अवस्थाहरू (अपवाद)**

यस बिमालेखअन्तर्गत देहायको अवस्थामा बीमकले दाबी भुक्तानी गर्ने छैन :

१. देहायको अवस्था वा कारणबाट भएको मृत्यु वा चोटपटक

(क) जानी जानी आफैले लगाएको चोट,

(ख) आत्महत्या वा आत्महत्याको प्रयास,

(ग) मादक पदार्थ वा लागू औषधीको प्रभावको कारणबाट ,

(घ) न्यूनतम कानुनबमोजिम अनुमति प्राप्त हवाई जहाजमा यात्रीको रूपमा यात्रा गरेकोमा बाहेक अन्य उडान,

(ङ) कावा खाने खेल (व्हील रेश), घोडदौड, बन्जी जम्पिङ्ग, प्यारा ग्लाइडिङ्ग वा मोटरसाइकल दौड,

(च) पोलो, शिकार, स्कुवा डाइभिङ्ग, पर्वतारोहण, निशानावाजी,

(छ) पागलपन,

(ज) बिमितबाट कुनै न्यूनतम कानुन भङ्ग गरेको परिणामबाट,

(झ) दुर्घटनाबाट नभई उद्वेग वा स्नायू सम्बन्धी चोट,

(ञ) मानव जीवन रक्षा गर्ने प्रयास गर्दा बाहेक नचाहिँदो खतरा मोल्ने कार्य ।

२. हुलदङ्गा, हडताल, द्वेषपूर्ण कार्य र आतङ्कवाद जोखिम समूह बाहेक, युद्ध, अतिक्रमण, विदेशी सैन्य कारवाही (युद्ध घोषणा भएको होस् वा नहोस्) गृह युद्ध, राजद्रोह, क्रान्ति, सत्ता विप्लव, सैनिक विद्रोहको कारणबाट बिमितको मृत्यु भएमा वा चोटपटक लागेमा,

३. यस बिमालेखमा परिभाषित दुर्घटनाको परिणामस्वरूप श्रृजना भएको क्षति (Consequential Loss),

४. आणविक विकिरण वा आणविक इन्धनको ज्वलन पछि शेष रहेको बेकम्मा पदार्थबाट निस्कने रेडियोधर्मिता (स्वतः जारी रहने अणुको विच्छेदनको ज्वलन समेत) को सक्रियताको संसर्गबाट प्रत्यक्ष वा अप्रत्यक्ष रूपले हुने कुनै दुर्घटना,

५. आणविक हात-हतियारबाट उठेको वा सोसँग प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा संलग्न रहेको कारणबाट भएको दुर्घटना,

**सर्तहरू**

१. यस बिमालेखको कुनै भागमा प्रयोग हुने विशेष अर्थसहितको शब्द वा वाक्यांशको अर्थ जहाँ जुन अवस्थामा प्रयोग हुन्छ त्यही मान्य हुनेछ ।

२. यस बिमालेखअन्तर्गत दाबी योग्य कुनै दुर्घटना भएमा त्यस्तो दुर्घटना घटेको पैंतीस (३५) दिन भित्र वा सो अवधिभित्र सूचना दिन असम्भव भएको प्रमाणित हुने कारण भएमा सम्भव हुनासाथ सोको सूचना लिखित रूपमा बीमकलाई दिनुपर्नेछ । त्यस्तो दुर्घटनाबारे प्रस्तावक तथा सम्बन्धित बिमितले बीमकलाई आवश्यकपर्ने सम्पूर्ण जानकारी तथा

सहयोग उपलब्ध गराउनुपर्नेछ ।

३. यस बिमालेखअन्तर्गत बिमितको तर्फबाट बीमकलाई गरिएको दाबीसम्बन्धी घटना घटेको प्रमाणित हुने कागजात बीमकसमक्ष पेस नभएसम्म बीमकले यस बिमालेखअन्तर्गत दाबी भुक्तानी गर्ने छैन ।

४. दुर्घटनाबाट बिमितको मृत्यु भएको अवस्थामा बिमितको मृत्युको कारण सम्बन्धमा मान्यता प्राप्त चिकित्सकद्वारा गरिएको शव परीक्षणको प्रतिवेदन र सो नभए प्रहरी प्रतिवेदन बीमकसमक्ष पेस नभएसम्म बीमकले यस बिमालेखअन्तर्गत दाबी भुक्तानी गर्ने छैन ।

५. यस बिमालेखअन्तर्गत कुनै दाबी बिचाराधीन रहेको अवस्थामा व्यवहारिक रूपमा आवश्यकताअनुसार बीमकले चाहेको बखत बीमकको खर्चमा बिमितको पटक पटक जाँच गराउन सक्नेछ ।

६. बीमकले बिमितको अन्तिम ठेगानामा पठाएको सात दिनको सूचनाद्वारा यो बिमालेख खारेज गर्न सक्नेछ र यस अवस्थामा बीमकले बिमितलाई यो बिमालेख खारेज भएको मितिले बाँकी अवधिको समानुपातिक बिमाशुल्क फिर्ता गर्नेछ । बिमितले त्यस्तो सूचना प्राप्त गरेको मितिबाट यो बिमालेख खारेज भएको मानिनेछ र यसरी बिमालेख खारेज भएको कारणले बिमालेख कायम रहेको अवधिमा घटेको दाबी योग्य दुर्घटनाबापतको दाबीमा कुनै प्रतिकूल असरपर्ने छैन ।

७. प्रस्तावकको अनुरोधमा कुनै पनि समयमा बिमालेख रद्द गर्न सकिनेछ । यस अवस्थामा बिमालेख कायम रहेको अवधिको निमित्त देहायबमोजिमको छोटो अवधिको दरले हुन आउने बिमाशुल्क रकम कट्टी गरी बाँकी बिमाशुल्क बीमकले फिर्ता गर्नेछ ।

| **अवधि** | **बार्षिक बिमाशुल्कमा कट्टी गरिने प्रतिशत** |
|---|---|
| (क) एक हप्तासम्म | दश प्रतिशत |
| (ख) एक महिनासम्म | बीस प्रतिशत |
| (ग) दुई महिनासम्म | तीस प्रतिशत |
| (घ) तीन महिनासम्म | चालीस प्रतिशत |
| (ङ) चार महिनासम्म | पचास प्रतिशत |
| (च) पाँच महिनासम्म | साठ्ठी प्रतिशत |
| (छ) छ महिनासम्म | सत्तरी प्रतिशत |
| (ज) सात महिनासम्म | अस्सी प्रतिशत |

(झ) आठ महिनासम्म नब्बे प्रतिशत

(ञ) आठ महिनाभन्दा बढिको लागि सत प्रतिशत

तर बिमाशुल्क फिर्ता हुने प्रयोजनको लागि बिमालेख कायम रहेको अवधिभर कुनै दाबी नभएको हुनुपर्नेछ।

८. यस बिमालेखको अनुसूचीमा बिमा अवधि समाप्त हुने भनी उल्लेख भएको मितिमा स्थानीय समय अनुसार रातको बाह्र बजेपछि यस बिमालेखको अवधि समाप्त हुनेछ।

९. बीमकले बिमालेख नवीकरण गर्ने वा नगर्ने कुराको सूचना त्यस्तो बिमालेखको अवधि समाप्त हुनु एक महिनाअगावै जारी गर्नुपर्नेछ। नवीकरण सूचनामा बिमालेख नवीकरण गर्दा लाग्ने बिमाशुल्क गणना तालिकाको पूर्ण रूप संलग्न गर्नुपर्नेछ। त्यस्तो नवीकरण सूचना बिमितले प्राप्त नगरेको कारणले बीमकले कुनै दायित्व बेहोर्नुपर्ने छैन।

१०. बिमितको बारेमा प्रस्तावक वा बिमितले मूलभूत विवरण दिँदा झुट्ठा विवरण दिएमा वा बिमा प्रस्तावक तथा सम्बन्धित जोखिम अनुमान गर्नको लागि आवश्यकपर्ने वास्तविकता लुकाई झुट्ठा विवरण उल्लेख गरेमा वा वास्तविकताको उल्लेख गर्दा कुनै वस्तुगत तथ्य जानाजान लुकाएमा वा बिमितबाट यस बिमालेखको कुनै पनि सर्त पालना नभएमा यस बिमालेखअन्तर्गत बीमकले दाबी भुक्तानी गर्ने छैन।

११. बीमकको तर्फबाट सही छाप भएको रसिद जारी नभएसम्म बिमाशुल्क भुक्तान भएको मानिने छैन।

१२. कुनै दाबी जालसाजीपूर्ण भएमा वा दाबीको सिलसिलामा झुट्ठा बयान दिई बिमा प्रस्तावक तथा सम्बन्धित बिमितले वा निजको तर्फबाट काम गर्ने अधिकार प्राप्त कुनै व्यक्तिले यो बिमालेखअन्तर्गत कुनै अनुचित लाभ उठाउन खोजेमा बिमित यो बिमालेखअन्तर्गतको सबै लाभबाट बञ्चित हुनेछ।

१३. यो बिमालेखअन्तर्गतको दाबी बीमकबाट अस्वीकार भएको तीन महिना भित्र कुनै नालिस उजूर नगरेमा वा बिमा ऐन, २०४९ बमोजिम बिमा समितिले बीमकको पक्षमा निर्णय दिएको कागजात प्राप्त भएको मितिले पैँतीस (३५) दिन भित्र पुनरावेदन अदालतमा नालिस/उजूर नगरेमा बिमित यो बिमालेखअन्तर्गतको सबै लाभबाट बञ्चित हुनेछ।

१४. यो बिमालेखका सर्तहरूबमोजिम बीमक वा बिमा प्रस्तावक तथा सम्बन्धित बिमितलाई दिइने प्रत्येक सूचना तथा अन्य लेखापढी लिखित

वा मुद्रित हुनुपर्नेछ ।

१५. यो बिमालेखअन्तर्गत परेको दाबी यकिन गर्न आवश्यक प्रमाण जुटाउने दायित्व बिमा प्रस्तावक तथा सम्बन्धित बिमित वा निजको हकवालाको हुनेछ ।

तर सर्त नं.१० बमोजिमको अवस्था वा बिमालेखले नसमेट्ने अवस्थाहरू (अपवाद) परी दाबी भुक्तानी गर्न अस्वीकार गर्नुपूर्व बिमकले सोको प्रमाण जुटाउनुपर्ने छ ।

१६. यस बिमालेखअन्तर्गत बिमा दाबीसम्बन्धी कुनै विवाद उत्पन्न भएमा न्यूनतम बिमा ऐनबमोजिम हुनेछ ।

१७. पत्रकारलाई बिमा गरिदिने सम्बन्धित संस्थाले भुक्तानी गरेको बिमा शुल्क फिर्ता गरिने छैन ।

# बिमितको विवरण सूची

बिमालेख नम्बर ............................................... नवीकरण सम्पुष्टि नम्बर.....................................................

बिमा प्रस्तावकको

नाम :

ठेगाना :

| क्र. सं. | बिमितको नाम थर | पद/बिमालेख धारकसंगको सम्बन्ध | सूचना विभागबाट जारी गरिएको पत्रकार परिचय पत्र नं. | बिमाङ्क रकम | बिमितको साप्ताहिक आय | इच्छाएको व्यक्तिको नाम थर | बिमित र इच्छाएको व्यक्ति बीचको नाता |
|---|---|---|---|---|---|---|---|
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | कुल | | ............ | | | |

जाँच्ने :

मिति :

अधिकृत हस्ताक्षर :

नाम थर:

पद:

कार्यालयको छाप:

# श्रमजीवी पत्रकारसम्बन्धी ऐनबमोजिम प्रेस रजिष्ट्रारले उजुरीउपरको कारबाही तथा विवाद समाधान गर्दा अपनाउने कार्यविधि, २०६८

श्रमजीवी पत्रकारसम्बन्धी ऐन, २०५१ को दफा २४ तथा दफा ३४(ख) बमोजिम पर्न आएका उजुरी तथा विवाद समाधानसम्बन्धमा कार्यविधि बनाई लागू गर्न वान्छनीय भएकोले नेपाल सरकारले यो कार्यविधि बनाई लागू गरेको छ ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भ** : (१) यो कार्यविधिको नाम 'श्रमजीवी पत्रकारसम्बन्धी ऐनबमोजिम प्रेस रजिष्ट्रारले उजुरीउपरको कारबाही तथा विवाद समाधान गर्दा अपनाउने कार्यविधि, २०६८'रहेको छ ।

(२) यो कार्यविधि तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय र प्रसङ्गले अर्को अर्थ नलागेमा यस कार्यविधिमा–

(क) "ऐन" भन्नाले श्रमजीवी पत्रकारसम्बन्धी ऐन, २०५१ सम्झनुपर्छ ।

(ख) "नियमावली" भन्नाले श्रमजीवी पत्रकारसम्बन्धी नियमावली,२०५३ सम्झनुपर्दछ ।

## परिच्छेद–१

## उजुरीसम्बन्धी व्यवस्था

३. **उजुरी निवेदन दिन सक्ने** : (१) ऐनको दफा २४ बमोजिम श्रमजीवी पत्रकारले पाउनुपर्ने कुनै सुविधा वा रकम सञ्चार प्रतिष्ठानबाट नपाएमा वा व्यवस्थापकले ऐन वा नियमावलीबमोजिम कुनै काम

नगर्दा कुनै श्रमजीवी पत्रकारलाई मर्का पर्न गएमा त्यस्तो श्रमजीवी पत्रकारले पैंतीस दिनभित्र प्रेस रजिष्ट्रारलाई सम्बोधन गरी उजुरी निवेदन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम उजुरी गर्न चाहने सम्बन्धित श्रमजीवी पत्रकारले आफ्नो उजुरीमा देहायका कुरा खुलाएको हुनुपर्नेछ :–

(क) उजुरीकर्ताले नाम, थर, ठेगाना

(ख) उजुरीकर्ता कार्यरत सञ्चार प्रतिष्ठानको नाम र ठेगाना

(ग) कुन, कुन पदमा रही कति/कति अवधि कार्य गरेको हो सोको विवरण तथा सो पदमा रही कार्य गर्दाको तलब स्केल र सेवाका सर्तको विवरण

(घ) कुन सुविधा वा रकम कहिलेदेखि नपाएको हो वा सञ्चार प्रतिष्ठानले के कस्तो काम नगर्दा आफूलाई मर्का पर्न गएको, सो को विवरण

(ङ) आफ्नो दाबी जिकिरलाई पुष्ट्याई गर्ने आधार र

(च) अन्य प्रासङ्गिक कुराहरू

(३) प्रेस रजिष्ट्रारले यस दफाबमोजिमको निवेदन सङ्कलन गरी आफू कहाँ पठाउन आफूअन्तर्गतको कुनै निकाय वा अधिकारीलाई तोक्न सक्नेछ ।

४. **थप प्रमाणहरू पेस गर्न सक्ने** : (१) दफा ३ बमोजिम उजुरी दिइसकेपछि त्यस्तो उजुरी निवेदउपर प्रेस रजिष्ट्रारबाट निर्णय नहुँदै सम्बन्धित श्रमजीवी पत्रकारले सो निर्णयमा सघाउ पुग्ने कुनै थप प्रमाण फेला परेमा निवेदनसाथ संलग्न गरी प्रेस रजिष्ट्रारसमक्ष पेस गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम पेस हुन आएको प्रमाणसमेतका आधारमा प्रेस रजिष्ट्रारले उजुरी निवेदन उपर निर्णय गर्नुपर्नेछ ।

५. **उजुरी उपरको प्रतिक्रिया तथा कागजात माग गर्ने** : (१) दफा ३ बमोजिम उजुरी निवेदन गर्न आएमा प्रेस रजिष्ट्रारले सात दिनभित्र सो उजुरीको प्रतिलिपि संलग्न गरी सम्बन्धित सञ्चार प्रतिष्ठानको सो उजुरी उपरको प्रतिक्रिया तथा सम्बन्धित कागजात सम्बन्धित सञ्चार प्रतिष्ठानसँग माग गर्नेछ ।

(२) उपदफा (१) बमोजिम उजुरी उपरको प्रतिक्रिया तथा सम्बन्धित कागजात माग भएमा सञ्चार प्रतिष्ठानले सात दिन भित्र उपलब्ध

गराउनुपर्नेछ ।

(३) उपदफा (२) बमोजिम उपलब्ध प्रतिक्रिया तथा कागजातबाट थप केही बुझ्न आवश्यक भएका प्रेस रजिष्ट्रारले सम्बन्धित सञ्चार प्रतिष्ठानको व्यवस्थापकलाई उपस्थित गराई छलफल गर्न सक्नेछ । त्यसरी उपस्थितिको लागि लेखी आएमा समयमै उपस्थित हुन सम्बन्धित प्रतिष्ठानको व्यवस्थापकको कर्तव्य हुनेछ ।

६. **छलफल गराउन सक्ने** : (१) प्रेस रजिष्ट्रारले दफा ३ बमोजिम पर्न आएको उजुरी निवेदनमा उजुरकर्ता श्रमजीवी पत्रकार र व्यवस्थापकबीच छलफल गराउन आवश्यक ठानेमा बढीमा सात दिनको समय तोकी उपस्थितिका लागि दुवै पक्षलाई आमन्त्रण गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम छलफलका लागि आमन्त्रण गरेमा दुवै पक्षले तोकिएको समयमा उपस्थित हुनुपर्नेछ ।

(३) उपदफा (२) बमोजिम आमन्त्रण गरिएको समयमा उपस्थित नभए पनि निर्णय गर्न कुनै बाधापर्ने छैन ।

७. **थप कागजात माग गर्न सकिने** : (१) उजुरी निवेदन सुनुवाइको सिलसिलामा कुनै थप प्रमाण कागजातहरू आवश्यक छ भन्ने लागेमाा प्रेस रजिष्ट्रारले उजुरकर्ता वा सम्बन्धित सञ्चार प्रतिष्ठानलाई त्यस्तो प्रमाण कागजातहरू उपलब्ध गराउन लगाउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम प्रेस रजिष्ट्रारबाट माग भएका कागजात उजुरकर्ता वा सम्बन्धित सञ्चार प्रतिष्ठानले पत्र प्राप्त गरेको मितिले सात दिनभित्र प्रेस रजिष्ट्रारसमक्ष पेस गर्नुपर्नेछ ।

८. **उजुरीको निर्णय** : (१) यस परिच्छेदअन्तर्गत पर्न आएको उजुरी निवेदनउपर प्रेस रजिष्ट्रारले निर्णय गर्दा उजुरकर्ताले लिएको जिकिर सम्बन्धमा त्यस्ता जिकिरहरू सदर वा खण्डन के आएका हुन्, कुन आधारमा आएका हुन भन्ने कुराहरू निर्णयमा खुलाउनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम निर्णय गर्दा उजुरकर्ताले के कति सुविधा वा रकम सञ्चार प्रतिष्ठानबाट पाउनुपर्ने हो वा होइन, उजुरकर्ताले के कति सुविधा वा रकम सञ्चार प्रतिष्ठानबाट पाउनुपर्ने हो वा होइन, उजुरकर्ताले दाबी गरेबमोजिम व्यवस्थापकले ऐन र नियमावलीबमोजिमको कुन काम नगरेको हो वा होइन, मर्का पर्न गएको हो भने व्यवस्थापकले के गर्नुपर्ने हो सो समेत खुलाई निर्णय गर्नुपर्नेछ ।

(३) यस दफाबमोजिम निर्णय गर्दा व्यवस्थापकलाई ऐनको दफा २४ को उपदफा (३) बमोजिम ३५ दिनभित्र पुनरावेदन अदालतमा पुनरावेदन गर्न पाउने व्यहोरासमेत उल्लेख गर्नुपर्नेछ ।

९. **निर्णय कार्यान्वयनमा सहयोग लिन सक्ने** : ऐनको दफा २४ को उपदफा (३) बमोजिम पुनरावेदन अदालतमा ३५ दिनभित्र पुनरावेदन नपरेमा प्रेस रजिष्ट्रारले निर्णय कार्यान्वयन गर्न स्थानीय प्रशासनको सहयोग लिन सक्नेछ ।

## परिच्छेद–२

## विवाद समाधानसम्बन्धी व्यवस्था

१०. **विवाद समाधानका लागि निवेदन दिन सक्ने** : (१) ऐनको दफा ३४ ख.बमोजिम श्रमजीवी पत्रकार, कर्मचारी वा कामदार र सञ्चार प्रतिष्ठानको व्यवस्थापनबीच सेवा सर्त र सुविधासम्बन्धी कुनै विषयमा विवाद उठेमा सरोकारवाला कुनै पक्षले विवाद समाधान गरिदिन प्रेस रजिष्ट्रारसमक्ष निवेदन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम निवेदन पर्न आएमा प्रेस रजिष्ट्रारले सरोकारवाला पक्षहरूलाई समय तोकी उपस्थितिका लागि आमन्त्रण गर्न सक्नेछ । त्यसरी आमन्त्रण गरेमा उपस्थित हुनु सम्बन्धित सबै पक्षको कर्तव्य हुनेछ ।

(३) उपदफा (२) बमोजिम सरोकारवाला पक्ष सबै उपस्थिति भएमा प्रेस रजिष्ट्रारले वार्ता, मेलमिलाप वा मध्यस्थ वा त्यस्तै अन्य कुन माध्यम अपनाई विवाद समाधान गर्न उपयुक्त हुन्छ, दुवै पक्षहरूबीच छलफल गराउनपर्नेछ ।

११. **विवाद समाधानका माध्यम र प्रक्रिया निर्धारण** : (१) दफा १० बमोजिम विवाद समाधानका लागि सम्बन्धित सबै पक्ष उपस्थित नभएमा वार्ता मेलमिलाप वा मध्यस्थ वा त्यस्तै अन्य कुन माध्यम अपनाउने हो सम्बन्धित सबै पक्षको सहमतिमा हुनेछ ।

(२) उपदफा (१) बमोजिम विवाद समाधानको माध्यम निश्चित भएपछि सो को प्रक्रियासमेत सम्बन्धित सबै पक्षको सहमतिमा निर्धारण गरिनेछ । त्यस्तो प्रक्रिया लिपिबद्ध गरी सबै पक्षको हस्ताक्षर गराउनुपर्नेछ ।

१२. **विवाद समाधानको निर्णय** : प्रेस रजिष्ट्रारले विवाद समाधानको लागि सम्बन्धित पक्षहरूको निर्णय गराउन सहयोग गर्नेछ । त्यस्तो निर्णय

गर्दा निर्णय पुस्तिका खडा गरी सबै पक्षको हस्ताक्षर गराउनुपर्नेछ ।

१३. **निर्णय कार्यान्वयनमा सहयोग** : यस परिच्छेदबमोजिम विवाद समाधान गर्ने निर्णय भएपछि सो को कार्यान्वयनमा प्रेस रजिष्ट्रारले सहयोग गर्नु गराउनुपर्नेछ ।

## परिच्छेद–३

## विविध

१४. **सहयोग लिन सक्ने** : यस कार्यविधिबमोजिमको कार्य गर्दा प्रेस रजिष्ट्रारले कुनै पनि सरकारी निर्णय वा कर्मचारीको सहयोग लिन सक्नेछ । त्यस्तोमा सहयोग गर्नु सम्बन्धित निकाय वा कर्मचारीको कर्तव्य हुनेछ ।

१५. **निर्णय उपलब्ध गराउने** : यस कार्यविधिबमोजिम भएका निर्णयको प्रतिलिपि सम्बन्धित पक्षलाई उपलब्ध गराउनुपर्नेछ ।

१६. **नक्कल लिने कार्यविधि** : (१) यस कार्यविधिबमोजिम प्रेस रजिष्ट्रारबाट भएका निर्णय वा सोसँग सम्बन्धित कागजात आवश्यक भएमा सरोकारवालाले प्रेस रजिष्ट्रार समक्ष निवेदन दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम निवेदन दिएमा सरोकारवालालाई प्रचलित कानुनबमोजिम दस्तुर लिई नक्कल उपलब्ध गराउनुपर्नेछ ।

# प्रेस प्रतिनिधि (प्रमाणपत्र तथा परिचयपत्र वितरण) कार्यविधि, २०७१

**प्रस्तावनाः** छापाखाना र प्रकाशनसम्बन्धी प्रचलित कानुनबमोजिम पत्रकारलाई सूचना विभागबाट प्रेस प्रतिनिधि प्रमाणपत्र, स्वतन्त्र पत्रकारको परिचयपत्र र विदेशी नागरिकलाई प्रेस प्रतिनिधि प्रमाणपत्र जारी गर्दै आइएकोमा सञ्चार गृहका सञ्चालक समितिका अध्यक्ष, प्रकाशक, व्यवस्थापक र प्रबन्ध निर्देशकलगायतका पदाधिकारीहरूलाई समेत परिचयपत्र जारी गर्ने सम्बन्धमा सरलीकृत कार्यविधि निर्धारण गर्न आवश्यक भएकोले नेपाल सरकार, सूचना तथा सञ्चार मन्त्रालयले प्रेस प्रतिनिधि (प्रमाणपत्र तथा परिचयपत्र वितरण) कार्यविधि, २०७१ स्वीकृत गरी जारी गरेको छ ।

१. **सङ्क्षिप्त नाम र प्रारम्भ** : (१) यस कार्यविधिको नाम "प्रेस प्रतिनिधि (प्रमाणपत्र तथा परिचयपत्र वितरण) कार्यविधि, २०७१" रहनेछ ।

(२ ) यो कार्यविधि तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा र व्याख्या** : (१) विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस कार्यविधिमा,-

क) "नियमावली" भन्नाले छापाखाना र प्रकाशनसम्बन्धी नियमावली, २०४९ सम्झनुपर्दछ ।,

ख) "विभाग" भन्नाले सूचना विभागलाई जनाउँछ ।

३. **श्रमजीवी पत्रकारहरूलाई प्रेस प्रतिनिधि प्रमाणपत्र तथा पत्रकार परिचयपत्र उपलब्ध गराउने सम्बन्धी व्यवस्था** : श्रमजीवी पत्रकार हरूले प्रेस प्रतिनिधि प्रमाणपत्र तथा पत्रकार परिचयपत्र प्राप्त गर्नको लागि देहायबमोजिम कागजात संलग्न राखी निवेदन दिएमा श्रमजीवी पत्रकारहरूलाई प्रेस प्रतिनिधि प्रमाणपत्र उपलब्ध गराईनेछ,

१. रु. १० को टिकट टाँसी नियमावलीको अनुसूची-१० बमोजिमको फाराममा निवेदन,

२. हालसालै खिचेको पासपोर्ट साइजको चार प्रति फोटो,

३. नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

४. एसएलसी वा सो सरहको शैक्षिक योग्यताको लब्धाङ्कपत्र तथा चारित्रिक प्रमाणपत्रहरूका प्रतिलिपिहरू,

५. सञ्चारगृहले दिएको नियुक्तिपत्र (विभागबाट तोकिएको ढाँचा)को प्रतिलिपि, जसमा,

   क) स्थायी/अस्थायी/करार खुलेको हुनुपर्दछ, स्थायी नियुक्तिपत्रमा छ महिनाको परीक्षणकाल र अस्थायी नियुक्ति वा करार भए अवधि खुलेको हुनुपर्नेछ,

   ख) तोकिएको न्यूनतम पारिश्रमिक खुलेको हुनुपर्नेछ,

   तर पहिले नै स्थायी नियुक्तिपत्र पाएको कारण नियुक्तिपत्रमा पारिश्रमिक नखुलेको वा हालको न्यूनतम पारिश्रमिक अनुसार नपुग देखिनेको हकमा सिफारिसपत्रमा न्यूनतम पारिश्रमिक खुलाएको हुनुपर्ने,

   ग) अवधि र न्यूनतम पारिश्रमिक खुलेको करार नियुक्ति वा करार सम्झौतापत्रको प्रतिलिपि,

   घ) स्ट्रिञ्जरको नियुक्ति भए प्रतिसमाचार  न्यूनतम पारिश्रमिक खुलेको नियुक्तिपत्रको प्रतिलिपि,

६. प्रेस प्रतिनिधि प्रमाणपत्र उपलब्ध गराई दिन विभागमा गरिएको नियमावलीको अनुसूची ९ बमोजिम सिफारिसपत्र,

७. ब्रोडसीट दैनिकबाहेक अन्य पत्रपत्रिकाको हकमा हालै प्रकाशित अङ्कको एक प्रति

८. सञ्चारमाध्यमहरूले आफ्नो सञ्चार गृहको स्वीकृत दरबन्दीअनुसार श्रमजीवी पत्रकार तथा कर्मचारीहरूको तहगत विवरणसमेत खुलाई पठाएको पत्रमा निवेदकको नाम उल्लेख भएको हुनुपर्नेछ ।

९. नियमावलीमा व्यवस्था भएबमोजिम दस्तुर रु. ३००/– बुझाउनुपर्नेछ ।

४. **सम्पादकको हैसियतमा प्रेस प्रतिनिधि प्रमाणपत्र जारीसम्बन्धी व्यवस्था** : सम्पादकको हैसियतमा प्रेस प्रतिनिधि प्रमाणपत्र जारीसम्बन्धी व्यवस्था देहायबमोजिम हुनेछ ।

१. सम्पादकको हैसियतमा प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त गर्नको लागि शैक्षिक योग्यता नियमावलीमा उल्लेख भएबमोजिम हुनेछ ।

२. अनलाइनबाट सम्पादकको हैसियतमा प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त गर्नको लागि अनलाइन सञ्चालकले सम्पादक तोकेको निर्णयको प्रतिलिपि र सो सम्पादकको नाम जुनसुकै बखत देखिने गरी अनलाइन प्रकाशनमा नियमित प्रसारण प्रर्दशन भएको हुनुपर्नेछ ।

३. एकै व्यक्ति प्रकाशक र सम्पादक रहेको अवस्थामा समेत व्यवस्थापकको हैसियतमा सम्पादकलाई नियुक्ति गरेको पत्र पेस गर्नुपर्नेछ ।

४. पत्रिका दर्ता प्रमाणपत्रमा सम्पादकको नाम उल्लेख भएको र सोहीबमोजिम पत्रिका प्रकाशित भइरहेको हुनुपर्नेछ ।

५. ब्रोडसीट दैनिक बाहेक अन्य पत्रपत्रिकाको हकमा हालै प्रकाशित भएको पत्रिकाको एक अङ्क सक्कल प्रति,

६. अन्य कागजात र व्यवस्था बुँदा नं. ३ बमोजिम हुनेछ ।

५. **प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरणसम्बन्धी व्यवस्था** : प्रेस प्रतिनिधि प्रमाणपत्रको म्याद समाप्त भएको श्रमजीवी पत्रकारबाट प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरण गर्न देहायबमोजिम कागजातसाथ निवेदन प्राप्त भएमा नवीकरण गरी दिनुपर्नेछ ।

१. रु. १० को टिकट टाँसी तोकिएको ढाँचाको निवेदन,

२. सञ्चारगृहले दिएको बुँदा ३.५ बमोजिमको नियुक्तिपत्र,

३. प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरण गरीदिन सूचना विभागमा गरिएको सिफारिसपत्र,

४. ब्रोडसीट दैनिकबाहेक अन्य पत्रपत्रिकाको हकमा हालै प्रकाशित अङ्क सक्कल प्रति,

५. नियमावलीमा व्यवस्था भएबमोजिम दस्तुर बुझाउनुपर्नेछ ।

६. **संस्था परिवर्तनसम्बन्धी व्यवस्था** : संस्था परिवर्तन गर्न इच्छुक श्रमजीवी पत्रकार देहायबमोजिम कागजातसहित निवेदन दिएमा संस्था परिवर्तन गरिदिनुपर्नेछ ।

१. रु. १०। को टिकट टाँस गरी संस्था परिवर्तन गर्न दिएको निवेदन,

२. सञ्चारगृहले दिएको बुँदा ३.५ बमोजिमको नियुक्तिपत्र,

३. संस्था परिवर्तन गरिदिन सञ्चारगृहले दिएको सिफारिसपत्र,

४. ब्रोडसीट दैनिकबाहेक अन्य पत्रपत्रिकाको हकमा हालै प्रकाशित पत्रिकाको एक अङ्क सक्कल प्रति,

५. संस्था परिवर्तन गर्न रु. १००/– दस्तुर बुझाउनुपर्नेछ ।

७. **म्याद समाप्त भएको प्रेस प्रतिनिधि प्रमाणपत्रसम्बन्धी व्यवस्था** : म्याद समाप्त भएको चार महिना पाँच दिनपछिको असार मसान्तसम्ममा नवीकरण हुन नसकेको प्रेस प्रतिनिधि प्रमाणपत्र स्वतः खारेज हुनेछ । त्यस्ता श्रमजीवी पत्रकारहरूले देहायका कागजातसहित निवेदन दिएमा साविकको प्रेस प्रतिनिधि प्रमाणपत्र नं. समेत उल्लेख गरी नयाँ प्रेस प्रतिनिधि प्रमाणपत्र उपलब्ध गराइनेछ ।

१. रु. १० को टिकट टाँसी नियमावलीको अनुसूची फारम १० बमोजिमको फाराममा निवेदन,

२. हालै खिचेको पासपोर्ट साइजको चार प्रति फोटो,

३. सञ्चारगृहले दिएको बुँदा ३.५ बमोजिमको नियुक्तिपत्र,

४. प्रेस प्रतिनिधि प्रमाणपत्र उपलब्ध गराइदिन सञ्चारगृहले सूचना विभागमा गरिदिएको सिफारिसपत्र,

५. ब्रोडसीट दैनिकबाहेक अन्य पत्रपत्रिकाको हालै प्रकाशित पत्रिकाको अङ्क एक सक्कल प्रति,

६. प्रेस प्रतिनिधि प्रमाणपत्र दस्तुर रु. ३००/– लाग्नेछ

८. **स्वतन्त्र पत्रकारको परिचयपत्रसम्बन्धी व्यवस्था** : स्वतन्त्र पत्रकारको परिचयपत्र प्राप्त गर्नको लागि देहायको व्यहोरा खुलाई निम्न कागजातसहित निवेदन दिनुपर्नेछ ।

१. रु. १० को टिकट टाँसी तोकिएको अनुसूची फारममा निवेदन र व्यक्तिगत विवरण,

२. हालै खिचेको पासपोर्ट साइजको फोटो तीन प्रति,

३. नेपाली नागरिकता प्रमाणपत्रको प्रतिलिपि,

४. एसएलसीदेखि स्नातकतहसम्मको शैक्षिक योग्यताको लब्धाङ्कपत्र तथा चारित्रिक प्रमाणपत्रहरूका प्रतिलिपि,

५. पत्रकारिता पेसामा आफू आबद्ध रहेको भए मिडियाको नाम, कार्यरत रहँदाको पद, सम्पादन गरेको काम र अवधि खुलेको विवरण ,

६. पत्रकारिता पेसा अपनाई आफूले राष्ट्र, समाज र पत्रकारिता जगतमा पुऱ्याएको योगदानबारे ३०० (तीनसय) शब्दमा नघटाई लेखिएको मौलिक लेख,

७. पत्रकारिता विषय लिई स्नातक उत्तीर्ण गरेको भए दस वर्ष र पत्रकारिता विषयबाहेक अन्य विषय लिई स्नातक उत्तीर्ण गरेको भए पन्ध्र वर्षसम्म पत्रपत्रिकामा बाइलाइन समाचार प्रकाशन, सम्पादन वा स्तम्भ लेखनको काम गरेकोमा प्रत्येक वर्षको पत्रिकामा प्रकाशित छ वटा प्रकाशनको सक्कल प्रति वा आफूले सम्पादन गरेको पत्रिकाको प्रत्येक वर्षको छ अङ्क सक्कल प्रति,

८. निवेदकले समाचार सङ्कलन सम्पादनको काम गरी टेलिभिजन च्यानल, एफएम रेडियोमा प्रसारण भइसकेको भन्ने सम्बन्धित सञ्चारगृहले अवधि उल्लेख गरी गरेको सिफारिस पत्र र प्रसारण भएको कम्तीमा बाह्रवटा फुटेज, क्लिप्स आदि वा अनलाइनमा प्रकाशित भइसकेका समाचारहरू,

९. विभागबाट प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त गरेको भए सोको सुरुदेखिको प्रतिलिपि,

१०. नियमावलीमा व्यवस्था भएबमोजिम दस्तुर रु. ६००/– लाग्नेछ ।

९. **स्वतन्त्र पत्रकारको परिचयपत्र नवीकरण सम्बन्धी व्यवस्थाः** स्वतन्त्र पत्रकारको परिचयपत्र नवीकरण गर्दा परिचयपत्र प्राप्त पत्रकारले रु. १० को टिकट टाँसी तोकिएको अनुसूची फारममा निवेदन तथा गत एक वर्षभित्र आफूले पत्रकारिताको पेसा अपनाई राष्ट्र, समाज

र पत्रकारिता जगतमा पुऱ्याएको योगदान उल्लेख गरेको कामको विवरण र प्रकाशित / प्रसारित समाचार, स्तम्भ लेखन आदि संलग्न गरी निवेदन दिनुपर्नेछ । यसका लागि नियमावलीमा तोकिएबमोजिम दस्तुर लाग्नेछ ।

१०. **सम्मानार्थ पत्रकार परिचयपत्र तथा वरिष्ठ पत्रकारको परिचयपत्र प्रदान गर्ने सम्बन्धी व्यवस्था** : सम्मानार्थ पत्रकार परिचयपत्र तथा वरिष्ठ पत्रकारको परिचयपत्र प्रदान गर्ने सम्बन्धी व्यवस्था देहायबमोजिम हुनेछ :

(क) **सम्मानार्थ पत्रकार परिचयपत्र प्रदान गर्नेसम्बन्धी व्यवस्था** : पचहत्तर वर्ष उमेर पूरा भएका, अदालतबाट फौज्दारी अभियोगमा कसुरदार नठरिएका, नेपाली नागरिकले देहायका कागजात संलग्न गरी निवेदन दिएमा अनुसूची १ बमोजिमको ढाँचामा सम्मानार्थ पत्रकारको परिचय दिन सकिनेछ,

१. सम्मानार्थ पत्रकार परिचयपत्र प्राप्त गर्न निवेदकले पत्रकारिताको पेसा अपनाई राष्ट्र, समाज र पत्रकारिता जगतमा आफूले पुऱ्याएको योगदान उल्लेख गरी रु. १० को टिकट टाँसी दिएको निबेदन,

२. हालै खिचेको पासपोर्ट साइजको फोटो दुई प्रति,

३. नेपाली नागरिकताको प्रमाणपत्रका प्रतिलिपि,

४. सूचना विभागबाट जारी गरिएको प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरण भएको तीस वर्ष पूरा भएको प्रेस प्रतिनिधि प्रमाणपत्र वा सूचना विभागबाट प्राप्त गरेका पछिल्लो पटकको प्रेस प्रेतिनिधि प्रमाणपत्र,

५. तीस वर्षभन्दा बढी निरन्तर पत्रकारिता जगतमा संलग्न रही पत्रकारिताको पेसा अपनाई राष्ट्र, समाज र पत्रकारिता जगतमा योगदान पुऱ्याएको भनी नेपाल पत्रकार महासङ्घ केन्द्रीय समितिबाट गरिएको सिफारिस पत्र ।

(ख) **वरिष्ठ पत्रकारको परिचयपत्र प्रदान गर्ने सम्बन्धी व्यवस्था** : सूचना तथा सञ्चार मन्त्रालयबाट 'वरिष्ठ पत्रकारहरूलाई सम्मान गर्न एक वरिष्ठ पत्रकार सम्मान अक्षयकोष स्थापना र सञ्चालन मापदण्ड, २०६६' बमोजिम वरिष्ठ पत्रकार सम्मान-पत्र प्राप्त गर्ने वरिष्ठ

पत्रकारहरूलाई सूचना तथा सञ्चार मन्त्रालयबाट प्रदान गरिएको वरिष्ठ पत्रकार सम्मानपत्रको आधारमा वरिष्ठ पत्रकार परिचयपत्र जारी गरिनेछ । अन्य व्यवस्था देहायबमोजिम हुनेछ ।

१. सूचना तथा सञ्चार मन्त्रालयबाट प्रदान गरिएको वरिष्ठ पत्रकार सम्मानपत्रको प्रतिलिपि पेस गर्नुपर्नेछ ।

२. प्रत्येक वर्ष नवीकरण गर्नुपर्नेछ ।

३. प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त गर्न र नवीकरण गर्न लाग्ने सरह दस्तुर लाग्नेछ ।

(ग) **वरिष्ठ र सम्मानार्थ पत्रकार परिचय पत्रका प्रति विभागमा रहने** : दफा १० (क) र (ख) बमोजिम प्रदान गरिएको वरिष्ठ र सम्मानार्थ पत्रकार परिचयपत्रको एक प्रति विभागमा रहनेछ ।

११. **सम्मानार्थ पत्रकार परिचयपत्र प्राप्त गर्न लाग्ने दस्तुर र नवीकरण** : सम्मानार्थ पत्रकार परिचयपत्र प्राप्त गर्न कुनै दस्तुर लाग्ने छैन र नवीकरण गराउनुपर्ने छैन ।

१२. **मृत्युको जानकारी दिनुपर्ने** : सम्मानार्थ पत्रकार परिचयपत्र प्राप्त व्यक्तिको मृत्यु भएमा सोको ३५ दिनभित्र निजको परिवारले विभागमा जानकारी दिनुपर्नेछ । सम्मानार्थ पत्रकार परिचयपत्र प्राप्त व्यक्तिको मृत्युपछि निजको नाममा जारी भएको परिचयपत्र स्वतः खारेज हुनेछ ।

१३. **विट उल्लेख गरी प्रेस प्रतिनिधि प्रमाणपत्र र परिचयपत्र दिने व्यवस्था** : पत्रकारिता क्षेत्रमा क्षेत्रगत विषयको विशेषज्ञता प्राप्त श्रमजीवी पत्रकारहरूलाई सम्बन्धित सञ्चार माध्यमहरूबाट प्रदान गरिने नियुक्तिपत्रमा विट पत्रकार भनी उल्लेख भई आएमा निजलाई प्रेस प्रतिनिधि प्रमाणपत्र प्रदान गर्दा प्रेस प्रतिनिधि (विट) उल्लेख गरी प्रेस प्रतिनिधि प्रमाणपत्र र पत्रकार परिचयपत्र उपलब्ध गराईनेछ । जस्तै : प्रेस प्रतिनिधि (फोटो पत्रकार)

१४. **रेडियो, एफएम, टेलिभिजनहरूमा कार्यरत समाचार प्रमुखलाई समाचार प्रमुखको हैसियतमा प्रेस प्रतिनिधि प्रमाणपत्र दिने व्यवस्था** :

१. रेडियो, एफएम, टेलिभिजनहरूमा कार्यरत एक जना समाचार प्रमुखलाई सोही हैसियतमा नियुक्तिपत्र दिई सोहीबमोजिम समाचार प्रमुख उल्लेख गरी प्रेस प्रतिनिधि प्रमाणपत्र दिन

सिफारिस भई आएमा समाचार प्रमुखलाई निजको प्रेस प्रतिनिधि प्रमाणपत्रमा समाचार प्रमुख कायम गरी सोहीबमोजिम पत्रकार परिचयपत्रमा समेत समाचार प्रमुख उल्लेख गरी पत्रकार परिचयपत्र उपलब्ध गराइनेछ ।

२. अन्य व्यवस्था प्रेस प्रतिनिधि प्रमाणपत्र लिनको लागि आवश्यकपर्ने व्यवस्थाबमोजिम हुनेछ ।

१५. **विदेशी नागरिकहरूलाई प्रेस प्रतिनिधि प्रमाणपत्र दिने व्यवस्था** : नेपालमा बसी पत्रकारिता गर्ने विदेशी नागरिकहरूलाई देहायका कागजातहरूको आधारमा बढीमा चार महिनाका लागि प्रेस प्रतिनिधि प्रमाणपत्र तथा परिचयपत्र उपलब्ध गराइनेछ,

१. रु. १०। को टिकट टाँस भएको निवेदन,

२. हालै खिचेको चार प्रति पासपोर्ट साइजको फोटो,

३. व्यक्तिगत विवरण देखिने गरी भरिएको अनुसूची फाराम,

४. हालसम्मको म्याद भएको भिषासहितको पासपोर्टको प्रतिलिपि,

५. सञ्चारगृहले प्रेस प्रतिनिधि प्रमाणपत्र उपलब्ध गराइदिन विभागमा गरिएको सिफारिसपत्र,

६. सम्बन्धित सञ्चारगृहले प्रदान गरेको पत्रकार परिचयपत्र वा अन्तर्राष्ट्रिय पत्रकार परिचयपत्रको प्रतिलिपि,

७. सम्बन्धित राजदूतावास/कन्सुलरको कार्यालय / परराष्ट्र मन्त्रालयको सिफारिसपत्र,

८. नियुक्ति वा करारपत्रको प्रतिलिपि,

९. पत्रकारिता क्षेत्रको अनुभव (अन्य भाषामा भए अङ्ग्रेजी वा नेपाली भाषामा अनुवाद भएको हुनुपर्ने),

   क) पत्रिकामा प्रकाशित लेख/समाचार (सक्कल प्रतिसमेत),

   ख) टेलिभिजन वा रेडियोको भए प्रसारित सामग्रीको अभिलेख,

   ग) अनलाइन भए प्रकाशित सामग्रीको प्रति ।

१०. निवेदकको परिवारलाई नेपालको गैरपर्यटक भिषा सिफारिस आवश्यक परेमा विवाहदर्ता प्रमाणपत्र, जन्मदर्ताको प्रमाणपत्र वा

दूतावासको सिफारिस र प्रतिव्यक्ति एक / एक प्रति फोटो ।

११. प्रेस प्रतिनिधि प्रमाणपत्र दिने निर्णय पश्चात नियमावलीमा व्यवस्था भएबमोजिम स्थायी प्रेस प्रतिनिधि प्रमाणपत्रको लागि रु. १५००। (रुपैयाँ एकहजार पाँचसय) र अस्थायी प्रेस प्रतिनिधि प्रमाणपत्रको लागि रु. ९००। (रुपैयाँ नौसय) दस्तुर बुझाउनुपर्नेछ ।

१६. **गैरपर्यटक भिषा सिफारिससम्बन्धी व्यवस्था** : विदेशी नागरिकलाई देहायबमोजिम गैर पर्यटक भिषा सिफारिस गरिनेछ ।

१. विदेशी नागरिकलाई विभागबाट जारी गरिने प्रेस प्रतिनिधि प्रमाणपत्र उपलब्ध गराएपछि निजबाट गैरपर्यटक भिषाको माग भएमा बढीमा चार महिनाको भिषाको लागि सिफारिस गरिनेछ ।

२. प्रेस प्रतिनिधि प्रमाणपत्रको बहाल अवधिभित्र पुनः भिषाको माग गरेमा निजले नेपालमा रही पत्रकारितासँग सम्बन्धित काम गरेको चौमासिक प्रगति विवरण लिई सोसमेतका आधारमा गैरपर्यटक भिषा सिफारिस गर्न सकिनेछ ।

३. प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त विदेशी नागरिकका आठ वर्ष नाघेका इच्छुक परिवारका सदस्यहरूलाई सिफारिस दस्तुर प्रतिव्यक्ति रु. ५००। लाग्नेछ ।

१७. **विदेशी नागरिकको प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरण सम्बन्धी व्यवस्थाः** देहायको कागजातहरूको आधारमा नेपालमा रही पत्रकारिता गर्ने विदेशी नागरिकको प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरण गरिनेछ,

१. रु. १० को टिकट टाँस भएको निवेदन,

२. हालसम्मको म्याद भएको भिषासहितको पासपोर्टको प्रतिलिपि,

३. सम्बन्धित सञ्चारगृहले प्रेस प्रतिनिधि प्रमाणपत्र नवीकरण गराइदिन सूचना विभागमा गरेको सिफारिस,

४. सम्बन्धित सञ्चारगृहले प्रदान गरेको पत्रकार परिचयपत्र वा अन्तर्राष्ट्रिय पत्रकार परिचयपत्रको प्रतिलिपि,

५. नियुक्तिपत्र वा सेवा करार सम्झौताको प्रतिलिपि,

६. यसअघि नेपालमा रही गरेको पत्रकारितासँग सम्वन्धित कामको

प्रगति विवरण । (अन्य भाषामा भए अङ्ग्रेजी वा नेपाली भाषामा अनुवाद भएको हुनुपर्ने)

क) पत्रिकामा प्रकाशित लेख /समाचार (सक्कल प्रतिसमेत),

ख) टेलिभिजन वा रेडियोको भए प्रसारित सामग्रीको अभिलेख,

ग) अनलाइन भए प्रकाशित सामग्रीको प्रति ।

१८. **टेलिभिजन तथा एफएम रेडियोहरूका पदाधिकारीहरूलाई पदको हैसियतमा परिचयपत्र उपलब्ध गराइने** : सञ्चालनमा रहेको टेलिभिजन तथा एफएम रेडियोहरूका देहायका पदाधिकारीहरूलाई संलग्न मिडियामा कार्यरत पदको हैसियतमा परिचयपत्र उपलब्ध गराइनेछ :

**क) सञ्चालक समितिको अध्यक्षलाई परिचयपत्र दिनेसम्बन्धी व्यवस्था** : सञ्चालक समितिको अध्यक्षको हैसियतमा परिचयपत्र लिन देहायबमोजिम कागजात पेस गरेपछि निजलाई अध्यक्षको हैसियतमा परिचयपत्र उपलब्ध गराइनेछ :

१. रू १० को टिकट टाँस गरी अनुसूची ३ बमोजिम दिएको निवेदन र व्यक्तिगत विवरण देखिने नियमावलीको अनुसूची-९,

२. हालै खिचेको पासपोर्ट साइजको दुई प्रति फोटो,

३. निज अध्यक्ष पदमा रहेको प्रमाणको प्रतिलिपि,

४. नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

५. सञ्चार गृहले परिचयपत्र उपलब्ध गराइदिन सूचना विभागमा गरिएको सिफारिस ।

**ख) प्रबन्ध निर्देशक वा व्यवस्थापकमध्ये एकजनालाई परिचयपत्र दिनेसम्बन्धी व्यवस्था**: सञ्चालनमा रहेको टेलिभिजन तथा एफएम रेडियोहरूबाट नियुक्तिपत्र प्राप्त प्रबन्ध निर्देशक वा व्यवस्थापकको हैसियतमा परिचयपत्र प्राप्त गर्न देहायबमोजिम कागजात पेस गर्नुपर्ने छ ।

१. रु. १० को टिकट टाँस गरी अनुसूची ३ बमोजिम दिएको निवेदन र व्यक्तिगत विवरण देखिने नियमावलीको अनुसूची फाराम ९,

२. हालै खिचेको पासपोर्ट साइजको दुई प्रति फोटो,

३. प्रबन्ध निर्देशक, वा व्यवस्थापक पदमा टेलिभिजन तथा एफएम रेडियोहरूबाट प्राप्त नियुक्ति पत्रको प्रतिलिपि,

४. नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

५. टेलिभिजन वा रेडियोले परिचयपत्र उपलब्ध गराइदिन विभागमा गरिएको सिफारिस ।

१९. **छापामाध्यमको पदाधिकारीहरूलाई परिचयपत्र दिने सम्बन्धी व्यवस्था** : स्थायी दर्ता भई नियमित रूपमा सञ्चालनमा रहेको छापामाध्यमका देहायका पदाधिकारीहरूलाई निजहरू संलग्न मिडियामा कार्यरत पदको हैसियतमा परिचयपत्र उपलब्ध गराइनेछ :

क) **सञ्चालक समिति वा बोर्डको अध्यक्षलाई परिचयपत्र दिने सम्बन्धी व्यवस्था** : नियमित प्रकाशनमा रहेको पत्रिकाका सञ्चालक समिति वा बोर्डको अध्यक्षबाट देहायबमोजिमको कागजातसहित निवेदन पेस हुन आएमा अध्यक्षको हैसियतमा परिचयपत्र उपलब्ध गराइनेछ ।

१. रु. १० को टिकट टाँस गरी अनुसूची ३ बमोजिम दिएको निवेदन र व्यक्तिगत विवरण देखिने नियमावलीको अनुसूची फारम ९,

२. हालै खिचेको पासपोर्ट साइजको दुई प्रति फोटो,

३. अध्यक्ष पदमा रहेको प्रमाणको प्रतिलिपि,

४. नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

५. सञ्चारगृहले परिचयपत्र उपलब्ध गराइदिन सूचना विभागमा गरेको सिफारिस ।

ख) **प्रकाशक एकजनालाई परिचयपत्र दिनेसम्बन्धी व्यवस्था** : नियमित प्रकाशनमा रहेको पत्रिकाको स्थायी दर्ता प्रमाणपत्रमा उल्लेखित प्रकाशक एकजनाले प्रकाशकको हैसियतमा परिचयपत्र लिन चाहेमा देहायबमोजिम कागजात पेस गर्नुपर्ने छ ।

१. रु. १० को टिकट टाँस गरी अनुसूची ३ बमोजिम दिएको निवेदन र व्यक्तिगत विवरण देखिने नियमावलीको अनुसूची

फारम ९,

२. हालै खिचेको पासपोर्ट साइजको दुईप्रति फोटो,

३. प्रकाशकमा निजको नाम उल्लेख भएको, नियमित प्रकाशनमा रहेको पत्रिकाको स्थायी दर्ता वा दर्ता प्रमाणपत्रको प्रतिलिपि,

४. नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

५. पत्रिकाबाट परिचयपत्र उपलब्ध गराइदिन विभागमा गरिएको सिफारिस ।

२०. **परिचयपत्रको ढाँचा** : अध्यक्ष, प्रबन्ध निर्देशक वा व्यवस्थापक, प्रकाशक आदिलाई प्रदान गरिने परिचयपत्रको ढाँचा अनुसूची २ बमोजिम हुनेछ ।

२१. **समकक्षता निर्धारणको प्रमाण पेस गर्नुपर्ने** : विदेशी मुलुकबाट प्राप्त गरेको शैक्षिक योग्यताको समकक्षता निर्धारण वा समकक्षता देखिने प्रमाणको प्रतिलिपि पेस गर्नुपर्नेछ ।

२२. **पदको हैसियतमा परिचयपत्र प्राप्त गर्न लाग्ने दस्तुर** : सञ्चार माध्यमको पदको हैसियतमा परिचयपत्र प्राप्त गर्न इच्छुक देहायका पदाधिकारीहरूलाई देहायबमोजिम दस्तुर लाग्नेछ :-

१. अध्यक्षको परिचयपत्रको लागि रू १०००। (अक्षेरुपी एक हजार),

२. प्रकाशकको परिचयपत्रको लागि रू १०००। (अक्षेरुपी एक हजार),

३. प्रबन्ध निर्देशक वा व्यवस्थापकको परिचयपत्रको लागि रु. ९००। (अक्षेरुपी नौ सय) ।

२३. **नेपाल पत्रकार महासङ्घका पदाधिकारीहरूलाई परिचयपत्र उपलब्ध गराईने** : नेपाल पत्रकार महासङ्घ, केन्द्रीय समितिका पदाधिकारी तथा सदस्यहरूलाई नेपाल पत्रकार महासङ्घ, केन्द्रीय समितिको सिफारिसमा महासङ्घकै कार्यालय र पदको हैसियतमा परिचयपत्र उपलब्ध गराइनेछ ।

२४. **परिचयपत्रका म्याद बाँकी हुदै पदको हैसियत समाप्त भएमा वा पद छोडेमा परिचयपत्र फिर्ता गर्नुपर्ने** : परिचयपत्र प्राप्त गरेको पदाधिकारीले कुनै कारणले पेसा छोडेमा वा सञ्चालकबाट अलग भएमा म्याद बाँकी रहेको निजको परिचयपत्र सूचना विभागमा फिर्ता गरेपछि मात्र

सो स्थानमा अर्को व्यक्तिलाई परिचयपत्र प्रदान गरिनेछ। त्यस्तो परिचयपत्र फिर्ता गर्ने गराउने दायित्व सम्बन्धित सञ्चारगृह / नेपाल पत्रकार महासङ्घको हुनेछ।

२५. **परिचयपत्रको अवधि र नवीकरणसम्बन्धी व्यवस्था** : पदको हैसियतमा उपलब्ध गराइने परिचयपत्र चालु आ.व.अन्तसम्मको लागि जारी गरिनेछ, नवीकरण हुने छैन। प्रत्येक वर्ष जारी गरिनेछ।

२६. **एकभन्दा बढी किसिमका पत्रकार परिचयपत्र एकै पटक जारी नगरिने:** सामान्यतया कुनै पनि व्यक्तिलाई एकभन्दा बढी किसिमका पत्रकार परिचयपत्र वा परिचयपत्र एकै पटक जारी गरिने छैन।

२७. **निवेदक स्वयं उपस्थित हुनुपर्ने** : देहायका कार्यको लागि प्रेस प्रतिनिधि प्रमाणपत्र तथा परिचयपत्र प्राप्तगर्न निवेदक स्वयं उपस्थित हुनुपर्नेछ :

१. प्रेस प्रतिनिधि प्रमाणपत्र तथा परिचयपत्र जारी गर्दा र नवीकरण गर्दा स्वयं उपस्थित भई निवेदन दिनुपर्नेछ।

२. वाहकले पत्रकार परिचयपत्र वा परिचयपत्रको वाहकको हस्ताक्षर महलमा हस्ताक्षर गरेपछि मात्र प्रेस प्रतिनिधि प्रमाणपत्र तथा परिचयपत्र जारी वा नवीकरण गरिनेछ।

३. पत्रकार परिचयपत्र वा परिचयपत्र प्राप्त गर्ने व्यक्ति स्वयंले विभागबाट बुझी लिनुपर्नेछ।

२८. **पत्रकार परिचयपत्रवाहकलाई मात्र प्रवेश दिने व्यवस्था** : अतिविशिष्ट महानुभावहरूको कार्यालय, सिंहदरबार परिसर प्रवेश र अतिविशिष्ट महानुभावहरूबाट हुने औपचारिक प्रेस सम्मेलनमा सूचना विभागबाट जारी गरिएको पत्रकार परिचयपत्र वाहकलाई मात्र प्रवेश दिने व्यवस्था गर्न सकिनेछ।

२९. **प्रेस प्रतिनिधि प्रमाणपत्र, पत्रकार परिचयपत्रको प्रतिलिपि उपलब्ध गराउने व्यवस्था:** प्रेस प्रतिनिधि प्रमाणपत्र, पत्रकार परिचयपत्र प्रतिलिपि उपलब्ध गराइपाउन देहायबमोजिम कागजात संलग्न गरी निवेदन पेस हुन आएमा सोको जाँचबुझ तथा अध्ययन गरी निवेदन परेको भोलीपल्ट मागबमोजिम प्रतिलिपि उपलब्ध गराउन सकिनेछ।

(क) पत्रकार परिचयपत्र वा परिचयपत्रको प्रतिलिपि दिने व्यवस्था : पत्रकार परिचयपत्र हराएको वा अक्षर स्पष्ट नबुझिने भएको

कारणले प्रतिलिपि प्राप्त गर्न देहायबमोजिम कागजात पेस भएमा सोको भोलिपल्ट पत्रकार परिचयपत्रको प्रतिलिपि उपलब्ध गराउन सकिनेछ :

१. रु. १० को टिकट टाँस गरी दिएको निवेदन,

२. पत्रकार परिचयपत्रको प्रतिलिपि लिनुपर्ने कारण खोली आफू कार्यरत/सम्बद्ध सञ्चार गृह/कम्पनी/संस्थाबाट प्रतिलिपि उपलब्ध गराइदिन सूचना विभागलाई गरिएको सिफारिसपत्र,

३. प्रेस प्रतिनिधि प्रमाणत्रको सक्कल प्रति,

४. पत्रकार परिचयपत्रको प्रतिलिपि लिन इच्छुक श्रमजीवी पत्रकारले दस्तुर रु. ५०/– बुझाउनुपर्नेछ ।

(ख) प्रेस प्रतिनिधि प्रमाणपत्रको प्रतिलिपि दिने : प्रेस प्रतिनिधि प्रमाणपत्र हराएको वा अक्षर स्पष्ट नबुझिने भएको वा अन्य कारणले प्रतिलिपि प्राप्त गर्न देहायबमोजिम कागजात पेस भएमा सोको भोलिपल्ट प्रेस प्रतिनिधि प्रमाणपत्रको प्रतिलिपि उपलब्ध गराउन सकिनेछ ।

१. रु. १० को टिकट टाँस गरी दिएको निवेदन,

२. प्रेस प्रतिनिधि प्रमाणपत्रको प्रतिलिपि लिनुपर्ने कारण खोली आफू कार्यरत/सम्बद्ध सञ्चारगृह/कम्पनी/संस्थाबाट सूचना विभागलाई प्रतिलिपि उपलब्ध गराइदिन गरिएको सिफारिस पत्र,

३. पत्रकार परिचयपत्रको सक्कल प्रति,

४. प्रेस प्रतिनिधि प्रमाणपत्र प्रतिलिपि लिन इच्छुक श्रमजीवी पत्रकारले दस्तुर रु. २००/– बुझाउनुपर्नेछ ।

३०. **अनुभव प्रमाणित गर्ने सम्बन्धमा** : छापाखाना र प्रकाशनसम्बन्धी नियमावली, २०५१ को नियम १५ मा उल्लेख भएको सम्पादक, प्रेस प्रतिनिधि, अस्थायी प्रेस प्रतिनिधि तथा स्वतन्त्र पत्रकारको योग्यतामा आवश्यकपर्ने अनुभव प्रमाणित तथा अनुभव प्रमाणित गरी प्रेस प्रतिनिधि प्रमाणपत्र प्रदान गर्ने सम्बन्धमा देहायबमोजिम गरिनेछ ।

(क) सम्पादक हुनको लागि अनुभव प्रमाणित गर्ने सम्बन्धी व्यवस्था

: स्नातक वा सो सरह तहको योग्यता आवश्यक पर्नेमा सो योग्यता नभई, प्रवेशिका परीक्षा उत्तीर्णको हकमा नियमित रूपमा प्रकाशित हुने कुनै समाचारप्रधान दैनिक, अर्धसाप्ताहिक, साप्ताहिक वा पाक्षिक पत्रपत्रिका वा समाचार समितिमा समाचार सङ्कलन तथा सम्पादन सम्बन्धमा कम्तीमा १० वर्ष काम गरेको भन्ने व्यवस्था कार्यान्वयनको लागि देहायबमोजिम कागजातहरू संलग्न गरी निवेदन प्राप्त भएमा सोको आधारमा प्रेस रजिष्ट्रारले अध्ययन तथा जाँचबुझ गरी सातदिनभित्र अनुभव प्रमाणित गरी दिन सक्नेछ ।

१. दश वर्षसम्म समाचारप्रधान दैनिक, अर्धसाप्ताहिक, साप्ताहिक वा पाक्षिक पत्रपत्रिका, समाचार समितिमा प्रतिवर्ष कम्तीमा तीनवटा समाचार सङ्कलन तथा सम्पादन, बाइलाइन समाचार प्रकाशन गरेको सक्कल प्रकाशनहरू, वा

२. निवेदकले सङ्कलन तथा सम्पादन गरी टेलिभिजन च्यानल, एफएम रेडियोमा समाचार प्रसारण भइसकेको भए सम्बन्धित निकाय अवधि उल्लेख गरी गरेको सिफारिसपत्र र प्रसारण भएको कम्तीमा छवटा फुटेज, क्लिप्स आदि वा अनलाइनमा प्रकाशित भइसकेका प्रतिवर्ष कम्तीमा तीनवटा समाचारहरू ।

(ख) पत्रकारिता क्षेत्रको अनुभवको आधारमा प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधि प्रमाणपत्र जारी गर्न सम्बन्धी व्यवस्था : प्रवेशिका वा सो सरहको परीक्षा उत्तीर्ण नगरेका व्यक्तिको हकमा प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधि हुनको लागि समाचार सङ्कलन वा रिपोर्टिङसम्बन्धमा कम्तीमा पाँच वर्ष काम गरेको भनी देहायबमोजिम कागजातहरू संलग्न गरी निवेदन प्राप्त भएमा सोको अध्ययन तथा जाँचबुझ गरी सातदिनभित्र प्रेस प्रतिनिधि वा अस्थायी प्रेस प्रतिनिधि प्रमाणपत्र जारी गर्न सकिनेछ :

१. पाँच वर्षसम्म समाचारप्रधान दैनिक, अर्धसाप्ताहिक, साप्ताहिक वा पाक्षिक पत्रपत्रिका, समाचार समितिमा प्रतिवर्षको कम्तीमा तीनवटा समाचार सङ्कलन तथा

रिपोर्टिङ, बाइलाइन समाचार प्रकाशन, गरेको सक्कल प्रकाशनहरू,

२. निवेदकले सङ्कलन तथा सम्पादन गरी टेलिभिजन च्यानल, एफएम रेडियोमा समाचार प्रसारण भइसकेको भन्ने सम्बन्धित निकायको सिफारिसपत्र र प्रसारण भएको तीनवटा फुटेज, क्लिप्स आदि र अनलाइनमा प्रकाशित भइसकेका समाचारहरू ।

(ग) सक्कल प्रकाशनको छायाँप्रति मात्र उपलब्ध भएको अवस्थामा प्रेस काउन्सिल नेपालबाट प्रमाणित गराई वा सो प्रकाशन कुन पत्रिकाको कुन अङ्क र मितिमा प्रकाशन भएको हो सम्बन्धित सञ्चारगृहको प्रमाणित सिफारिस ।

घ) अनुभव प्रमाणित गर्न दस्तुर लाग्ने : पत्रकारितासम्बन्धी कुनै प्रकारको अनुभव प्रमाणित गरी लिनको लागि इच्छुक श्रमजीवी पत्रकारले दस्तुर रु. १००/– बुझाउनुपर्नेछ ।

३१. **परिचय पत्र/प्रतिलिपि/अनुभव प्रमाणित पाउन गरिने निवेदन दिनुपर्ने**: परिचय पत्र/प्रतिलिपि/अनुभव प्रमाणित गरि पाउँन गरिने निवेदनको ढाँचा अनुसूची-३ बमोजिम हुनेछ ।

३२. **थप कागजात र पुष्ट्याइँ माग गर्न सकिने**: प्रेस प्रतिनिधि प्रमाणपत्र तथा परिचयपत्र प्राप्त गर्नको लागि पेस हुन आएका कागजातहरू अध्ययन गरी विभागले नपुग वा अस्पष्ट भएको सम्बन्धमा थप कागजात र पुष्ट्याइँ निवदकसँग माग गर्न सक्नेछ ।

३३. **स्वीकृत दरबन्दी श्रमजीवी पत्रकार तथा कर्मचारी कामदारहरूको विवरण पेस गर्नुपर्ने** : प्रेस प्रतिनिधि प्रमाणपत्र तथा परिचयपत्र जारी तथा नवीकरण गर्ने प्रयोजन समेतको लागि सञ्चारगृह, कम्पनी, संस्था आदिका व्यवस्थापकले प्रतिष्ठानको कामको प्रकृतिअनुसार श्रमजीवी पत्रकारको तहगत वर्गीकरण गरी सो पदको लागि चाहिने योग्यता, अनुभव, काम कर्तव्य र अधिकार तथा उत्तरदायित्वसमेत उल्लेख भएको विवरण प्रत्येक आ.व.सुरु हुनु अगावै प्रत्येक वर्षको असार मसान्तभित्र पठाउनुपर्नेछ । साथै, सो विवरणमा दरबन्दी सङ्ख्या, श्रमजीवी पत्रकार तथा कर्मचारी कामदारहरूको पद, तह, नियुक्तिको किसिम (स्थायी / अस्थायी/करार), मासिक पारिश्रमिकको सुरू स्केल

खुल्नेगरी विवरण पठाउनुपर्नेछ । विवरण प्राप्त भएपछि एकवर्षसम्म सो विवरणमा नाम उल्लेख भएका व्यक्तिहरूको लागि मात्र प्रेस प्रतिनिधि प्रमाणपत्र/परिचयपत्र जारी तथा नवीकरण गरिनेछ । तर रिक्त दरबन्दीमा थप नियुक्ति गरी पठाउन सकिनेछ ।

३४. **नवीकरण भएको अनुमति पत्रको प्रतिलिपि पठाउनुपर्ने** : टेलिभिजन तथा एफएमहरूले श्रमजीवी पत्रकार तथा कर्मचारीहरूको विवरण, दरबन्दी विवरण र चालु आ.व.मा नवीकरण भएको इजाजतपत्र वा अनुमतिपत्रको प्रतिलिपि प्रत्येक वर्षको असार मसान्तभित्र पठाउनुपर्नेछ ।

३५. **अनलाइनहरूले कागजात पेस गर्नुपर्ने** : अनलाइनहरूले श्रमजीवी पत्रकार तथा कर्मचारीहरूको दरबन्दी विवरण र श्रमजीवी पत्रकार, कर्मचारी, कामदारको विवरण प्रत्येक आषाढ महिनाभित्र पठाउनुको साथै कम्पनी दर्ता प्रमाणपत्रको प्रतिलिपि, कम्पनी दर्ता गर्दा स्वीकृत प्रबन्धपत्र र विनियमावलीको प्रतिलिपि अनलाइन सञ्चालन गर्नको लागि सञ्चालक वा संस्थाले गरेको निर्णयको प्रतिलिपि, अनलाइन पत्रकारितासम्बन्धी कारोवार उल्लेख भएको मूल्य अभिवृद्धि करमा दर्ता भएको प्रमाणपत्रको प्रतिलिपि, अनलाइनमा राखिएको एउटा सामग्रीको प्रतिलिपिसमेत विभागमा पठाउनुपर्नेछ ।

३६. **सञ्चारगृह बन्द भएमा प्रेस प्रतिनिधि प्रमाणपत्र खारेज हुने** : प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त गरेको सञ्चारगृह बन्द भएको पैंतीस दिनपछि प्रेस प्रतिनिधि प्रमाणपत्र स्वतः खारेज हुनेछ ।

३७. **घुम्तीसेवा सञ्चालन गर्न सकिने** : यस कार्यविधिबमोजिम प्रदान गरिने सेवा सुविधालाई नेपालका विभिन्न क्षेत्रमा घुम्ती सेवा सञ्चालन गरी प्रदान गर्न सकिनेछ ।

३८. **कारबाहीसम्बन्धी व्यवस्था** : यस कार्यविधिमा उल्लेखभएका कागजातहरू झुठ्ठा तयार गरी पेस गरेमा वा प्राप्त परिचयपत्र दुरुपयोग गरेमा देहायबमोजिम कारबाही हुनेछ :

१. सञ्चारगृहले झुठ्ठा विवरण वा कागजात दिई प्रेस प्रतिनिधि प्रमाण पत्र दिलाएको ठहरिएमा दिलाएको प्रेस प्रतिनिधि प्रमाणपत्र रद्ध गराई विभागबाट उपलब्ध गराईने सेवा सुविधा छ महिनासम्म रोक्का गरिनेछ ।

२. प्रेस प्रतिनिधि प्रमाणपत्र प्राप्त व्यक्तिले सोको दुरुपयोग गरेमा प्रेस प्रतिनिधि प्रमाणपत्र रद्ध गराई एक वर्षसम्म नयाँ प्रेस प्रतिनिधि प्रमाणपत्र जारी गरिने छैन ।

३. प्रचलित कानुनबमोजिम कसुर ठहरिने अभियोगको हकमा प्रचलित कानुनबमोजिम कारबाही गर्न बाधापर्ने छैन ।

३९. **प्रचलित कानुनबमोजिम हुने** : यस कार्यविधिमा लेखिएका कुराहरू प्रचलित कानुनसँग बाझिएको हदसम्म स्वतः अमान्य हुनेछ ।

४०. **कार्यविधिमा संशोधन तथा हेरफेर** : सूचना तथा सञ्चार मन्त्रालयले यस कार्यविधिमा आवश्यक संशोधन र हेरफेर गर्न सक्नेछ ।

# विद्युतीय आमसञ्चार माध्यमहरूलाई वितरण गरिने लोक कल्याणकारी विज्ञापन वितरणको मापदण्ड निर्देशिका–२०६६

स्वीकृत मितिः २०६६।१०।७

**(१) पृष्ठभूमि :**

नेपाली जनताको सूचनाको उपभोग गर्न पाउने सुनिश्चितता प्रदान गर्न नेपाली जनतासम्म सूचना तथा समाचारहरू पुऱ्याउने आमसञ्चार माध्यमहरूको दिगो विकासमा टेवा पुऱ्याउन सरकारले लोक कल्याणकारी विज्ञापनहरू उपलब्ध गराउने नीति लिएको छ । यस परिप्रेक्ष्यमा सबै विद्युतीय सञ्चार माध्यमहरूलाई पनि समान रूपमा र स्वीकृत मापदण्डको आधारमा लोक कल्याणकारी विज्ञापन उपलब्ध गराउनको लागि विद्युतीय सञ्चार माध्यमको वर्गीकरण गर्न तथा विज्ञापन सहयोग वितरण व्यवस्थालाई वैज्ञानिक बनाउन लोक कल्याणकारी विज्ञापन वितरण मापदण्ड बनाई कार्यान्वयनमा ल्याउन आवश्यक भएकाले यो मापदण्ड सरोकारवालाहरूको सहभागितामा निर्माण गरी कार्यान्वयनमा ल्याइएको छ ।

१. **मापदण्डको नाम :**

(१) यस मापदण्डको नाम विद्युतीय आमसञ्चार माध्यमहरूलाई वितरण गरिने लोक कल्याणकारी विज्ञापन वितरण मापदण्ड, निर्देशिका, २०६६ रहनेछ ।

(२) यो मापदण्ड तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा :**

(१) “विद्युतीय सञ्चार माध्यम” भन्नाले नियमानुसार दर्ता भई नियमित रूपमा प्रसारणमा रहेका टेलिभिजन, रेडियो, एफ.एम.

रेडियो र अनलाइन समेतलाई बुझाउनेछ।

(२) "मन्त्रालय" भन्नाले सूचना तथा सञ्चार मन्त्रालय बुझनु पर्छ।

(३) "समिति" भन्नाले प्रसारण सम्परीक्षण समिति बुझ्नु पर्छ।

(४) "लोककल्याणकारी विज्ञापन" भन्नाले सूचना तथा सञ्चार मन्त्रालयले प्रसारण गर्न दिएको चेतनामूलक एवं सूचनामूलक सामग्री सम्झनुपर्नेछ।

**३. वर्गीकृतको व्यवस्था :**

(१) लोक कल्याणकारी विज्ञापनको सहयोग प्राप्त गर्न विद्युतीय आमसञ्चार माध्यमहरू अनिवार्य रूपमा वर्गीकृत भएको हुनुपर्नेछ।

**४. विद्युतीय आमसञ्चार माध्यमहरूको वर्गीकरण र श्रेणी विभाजन :**

(१) विद्युतीय आमसञ्चार माध्यमहरूमध्ये रेडियो एफ.एम. को हकमा तीन तहमा वर्गीकरण गरिनेछ।

(क) २५० वाट सम्म

(ख) १००० वाट सम्म

(ग) सोभन्दा माथि

(२) टेलिभिजन प्रसारण संस्थाहरू सबैलाई समान वर्गमा वर्गीकरण गरिनेछ।

(३) विद्युतीय सञ्चार माध्यमहरूको र्गीकरण प्रसारण सम्परीक्षण समितिको सिफारिसमा सूचना तथा सञ्चार मन्त्रालयले गर्नेछ।

(४) वर्गीकृत हुन चाहने सबै विद्युतीय सञ्चार माध्यमले मन्त्रालयमा गठन गरिएको प्रसारण सम्परीक्षण समितिसमक्ष आवेदन दिनुपर्नेछ।

(५) यस मापदण्डबमोजिमको वर्गीकरणमा समावेश हुन चाहने कुनैपनि विद्युतीय सञ्चार माध्यमले यस मापदण्डबमोजिमका सर्तहरू पूरा गरेको हुनुपर्नेछ।

(६) यस मापदण्डबमोजिमका सर्तहरू पूरा नगर्ने आमसञ्चार माध्यमलाई लोक कल्याणकारी विज्ञापन उपलब्ध गराइने छैन।

**(५) प्रसारण सम्परीक्षण समितिको गठन–**

(१) विद्युतीय सञ्चार माध्यमहरूको लागि समन्वय गर्न र विद्युतीय सञ्चार माध्यमको बर्गीकरण तथा अनुगमन गर्न देहाय वमोजिमको प्रसारण सम्परीक्षण समिति रहनेछ ।

१. सहसचिव, सञ्चार महाशाखा, सूचना तथा सञ्चार मन्त्रालय - संयोजक

२. प्रेस काउन्सिल नेपाल, प्रतिनिधि - सदस्य

३. नेपाल पत्रकार महासङ्घ, प्रतिनिधि - सदस्य

४. ब्रोडकास्टिङ्ग एशोसिएसन अफ नेपाल, टेलिभिजन ब्रोडकास्टर्स नेपाल तथा सामुदायिक रेडियो प्रसारक सङ्घका अध्यक्ष वा निजहरूले तोकेको पदाधिकारी गरी तीन जना - सदस्य

५. शाखा प्रमुख, प्रेस तथा सूचना समन्वय शाखा, सूचना तथा सञ्चार मन्त्रालय - सदस्य सचिव

(२) समितिले आवश्यकताअनुसार सम्बन्धित विषय विज्ञलाई बैठकमा आमन्त्रण गर्न सक्नेछ ।

(३) समितिले आवश्यक कार्यविधिहरू वनाई लागू गर्न सक्नेछ ।

**(६) प्रसारण निरीक्षण व्यवस्थाः–**

१. लोक कल्याणकारी विज्ञापन सहुलियत एवं अन्य प्रयोजनको लागि वर्गीकृत हुन प्रसारण संस्थाहरू आवश्यक प्रमाणहरू जुटाउन जिम्मेवार हुनेछन् ।

२. विद्युतीय सञ्चार प्रतिष्ठानका अध्यक्ष वा महाप्रबन्धकले प्रसारणको प्रमाणीकरण गरी संलग्न गर्नुपर्ने भनी उल्लेख गरिएका विवरणहरू अनिवार्य रूपमा फारामसाथ संलग्न गरेको हुनुपर्दछ ।

३. प्रसारण सम्परीक्षण समितिले स्थानीय प्रशासन, जिल्ला हुलाक, सञ्चार केन्द्र, नेपाल पत्रकार महासङ्घको स्थानीय शाखा, आदिसँग बुझि (Cross check) प्रसारणको यथार्थता परीक्षण, निरीक्षण तथा बजार सर्वेक्षण गर्न सक्नेछ ।

४. प्रसारणसम्बन्धी विवरणलाई मन्त्रालयको वेब साइटमार्फत सार्वजनिक गरिनेछ ।

५. समितिले जुनसुकै समयमा पनि प्रसारण संस्थाको निरीक्षण गर्न सक्नेछ र सो सम्बन्धमा खोजेका कागजपत्र देखाउनु सम्बन्धित निकायको कर्तव्य हुनेछ ।

६. कुनै आवेदकले मूल्याङ्कनलाई प्रभाव पार्ने दृष्टिकोणले फाराममा वास्तविकताभन्दा बढी उल्लेख गरेको कुरा निरीक्षण वा प्रसारणको कार्यालयमा भएका अन्य विवरणबाट थाहा हुनगई प्रमाणित भएमा समितिले लोक कल्याणकारी विज्ञापन सहयोग बढीमा २ वर्षका लागि स्थगित गर्न सक्नेछ ।

७. आम सञ्चार माध्यमले पत्रकारितासम्बन्धी आचारसंहिता पालना गर्नुपर्नेछ ।

८. विद्युतीय सञ्चार माध्यमले आचारसंहिता पालना गरे नगरेको अनुगमन प्रेस काउन्सिलले गर्नेछ । प्रेस काउन्सिल नेपालले आचारसंहिता उलङ्घन गरेको सम्बन्धमा सचेत गराउन सक्नेछ र काउन्सिलले त्यसको प्रतिवेदन प्रत्येक तीन-तीन महिनामा मन्त्रालयमा पठाउनुपर्नेछ ।

९. तीन पटकभन्दा बढी आचारसंहिता उल्लङ्घन गरेमा लोक कल्याणकारी विज्ञापनको लागि अयोग्य ठहरिनेछ ।

१०. गाली बेइज्जतीसम्बन्धी मुद्दामा अदालतबाट दोषी प्रमाणित भएमा एक वर्षसम्मका लागि लोक कल्याणकारी विज्ञापन उपलब्ध गराइनेछैन ।

११. स्थानीय भाषामा समाचार वा कार्यक्रम उत्पादन तथा प्रसारण गरेको प्रसारण संस्थालाई प्राथमिकता दिइनेछ ।

**(७) विद्युतीय आमसञ्चार माध्यमहरूले पालना गर्नुपर्ने सर्तहरू**

१. लोक कल्याण्कारी विज्ञापन प्राप्त गर्नको लागि विद्युतीय आमसञ्चार माध्यमहरूले देहायका सर्तहरू पूरा गरेको हुनुपर्नेछ :

(क) नेपालको संविधान र प्रचलित कानुनहरूको पालना गरेको,

(ख) प्रत्येक वर्ष नवीकरण भएको,

(ग) आयकर PAN नम्बर र कर भुक्तानीको प्रमाण पेस गरेको,

(घ) लेखा परीक्षण प्रतिवेदन समावेश गरेको,

(ङ) श्रमजीवि पत्रकारसम्बन्धी ऐन र नियम पालना गरेको,

(च) आचारसंहिता पालना गरेको,

(छ) तीस प्रतिशतभन्दा बढी कार्यक्रमहरू रिले प्रसारण नगरेको,

(ञ) टेलिभिजनको हकमा इजाजतअनुसार टेरिस्टेरियल तथा स्याटलाइटवाट प्रसारण भएको,

(ट) ३६५ दिनमा कम्तीमा पनि ३३० दिन नियमित प्रसारण भएको,

(ठ) प्रत्येक दिन कम्तीमा पनि १० घण्टा प्रसारण भएको र

(ड) विज्ञापनको समय कार्यक्रमको एकतिहाई भन्दा बढी हुन हुनेछैन ।

**(८) लोक कल्याणकारी विज्ञापनको निर्माण**

१. नेपाल सरकार, सूचना तथा सञ्चार मन्त्रालयले लोक कल्याणकारी विज्ञापनको विषयवस्तु (Content) निर्धारण गर्नेछ ।

२. मन्त्रालयले के कस्ता विषयमा लोक कल्याणकारी विज्ञापन वनाउने हो सो विषयको निर्धारण गर्नेछ ।

३. त्यस्ता विषयहरूमा सामाजिक सांस्कृतिक विविधतालाई प्राथमिकता दिइनेछ ।

४. त्यस्तो विज्ञापन निर्माणमा एकरूपता कायम गरिनेछ ।

५. मन्त्रालयले विज्ञापन निर्माणमा सम्परीक्षण समितिको सिफारिसलाई आधार बनाउनेछ ।

६. लोक कल्याणकारी विज्ञापन निर्माणसम्बन्धी सबै कार्य सूचना तथा सञ्चार मन्त्रालयले गर्नेछ ।

**(९) लोक कल्याणकारी विज्ञापन प्रसारणको मिति, समय तथा आवृती**

१. प्रसारण संस्थाले सम्परीक्षण समितिको निर्णयानुसार लोक कल्याणकारी विज्ञापनको लागि विशेष प्राइम, प्राइम तथा साधारण समय छुट्टयाउनुपर्नेछ ।

२. प्रसारण संस्थाले लोक कल्याणकारी विज्ञापन वर्गीकरणको

आधारमा दैनिक कति पटक, कुन समयमा के प्रसारण गर्ने भन्ने सम्बन्धमा समितिले निर्धारण गरेबमोजिम गर्नुपर्नेछ ।

३. काठमाडौं उपत्यका र काठमाडौं उपत्यकाबाहिरका विद्युतीय सञ्चार माध्यमहरूलाई विज्ञापन सामग्री दिने, प्रसारण विवरण लिने तथा भुक्तानी गर्ने व्यवस्था अलग-अलग गर्न सकिनेछ ।

४. सम्परीक्षण समितिको निर्देशन प्रसारण संस्थाले अनिवार्य रूपमा पालना गर्नुपर्नेछ ।

५. मन्त्रालयलाई विज्ञापन प्रसारणको समयको पूर्व जानकारी उपलब्ध गराउनुपर्नेछ ।

(१०) **विशेषज्ञको सहयोग** : विद्युतीय सञ्चार माध्यमको प्राविधिक मूल्याकङ्नका लागि समितिले विशेषज्ञको सहयोग लिन सक्नेछ ।

(११) **प्रतिवेदन पेस**: प्रसारण सम्परीक्षण समितिले विद्युतीय आमसञ्चार माध्यमको वर्गीकरण तथा लोक कल्याणकारी विज्ञापनको निर्माण तथा प्रसारणको विस्तृत विवरणसहितको प्रतिवेदन अर्द्धवार्षिक रूपमा मन्त्रालयसमक्ष पेस गर्नुपर्नेछ ।

(१२) **सूचना प्रकाशन तथा फारम भर्ने** :

१. लोक कल्याणकारी विज्ञापन वितरणका लागि न्यूनतम ३५ दिनको समयावधि दिई रेडियो तथा टेलिभिजनवाट सूचना प्रसारण गर्नुपर्नेछ ।

२. प्रसारण संस्थाहरूले लोक कल्याणकारी विज्ञापनको रकम प्राप्त गर्न अनुसूची १ मा तोकिएबमोजिमको प्रसारण सम्परीक्षण फाराम तोकिएको म्यादभित्र भरेको हुनुपर्नेछ ।

३. दर्ता शुल्कको २५ प्रतिशत बिलम्बशुल्क थप बुझाई थप सात दिन म्याद उपलब्ध हुनेछ ।

(१३) **दर्ता शुल्क** :

१. वर्गीकरणमा सहभागी हुने विद्युतीय आमसञ्चार माध्यमले प्रत्येक वर्षका लागि वर्गीकरणको फारामसाथ देहायबमोजिमको दर्ता शुल्क बुझाउनुपर्नेछ :

(क) टेलिभिजनको लागि रु. १०००।- (एक हजार मात्र),

(ख) रेडियो एफ.एम. तर्फ रु. ५००।- ( पाँचसय मात्र) ।

२. वर्गीकरण फाराम रु. १००।- (एक सय) शुल्क तिरी मन्त्रालयको लेखा शाखाबाट प्राप्त गर्न सकिनेछ ।

यसको अलवा मन्त्रालयको वेबसाइटबाट डाउनलोड गरी फर्म भरी शुल्कसहित बुझाउन सकिने छ ।

३. प्रसारण संस्थाहरूले वर्गीकरणको फाराम दर्ता मन्त्रालय वा सूचना तथा सञ्चार मन्त्रालयको संयन्त्रमा नगद तिरेको रसिद संलग्न गरी दर्ता गराउनुपर्नेछ । यसबाहेक नेपाल सरकारको राजस्व खातामा रकम जम्मा गरेको भौचर वा मन्त्रालयको नाममा खिचिएको बैंक ड्राफ्ट संलग्न गरी कुरियरबाट र भौचर स्क्यान गरी मन्त्रालयको इमेल ठेगानाबाट पनि फर्म भरेर दर्ता गराउन सकिनेछ ।

**(१४) बजेट बाँडफाँड प्रक्रिया**

१. विज्ञापन निर्माण र प्रसारण खर्च तथा प्रशासनिक खर्च ((भत्ता,अनुगमन र खाजा ई.) विद्युतीय सञ्चार माध्यमहरूका लागि विनियोजित बजेटबाट विज्ञापन निर्माण तथा प्रशासनिक खर्च (अनलाइनसमेत) का लागि १२ प्रतिशत, विज्ञापन प्रसारणका लागि ८८ प्रतिशत विभाजन गरिनेछ ।

२. लोक कल्याणकारी विज्ञापनको सहयोग वितरणको लागि विद्युतीय सञ्चार माध्यमहरूको अभिलेख तयार गरिनेछ ।

३. विद्युतीय सञ्चार माध्यमहरूको वर्गीकरण भई सकेपछि अभिलेखको आधारमा कुन प्रसारण सस्थालाई कुन सामग्री कति उपलब्ध गराउने भन्ने विषय समितिले समय समयमा निर्धारण गर्नेछ ।

४. बुँदा १ बमोजिमको प्रसारणका लागि छुट्टयाइएको रकमलाई १०० मानी सोको ३४ प्रतिशत टेलिभिजन र ६६ प्रतिशत रेडियोतर्फ बाँडफाँड गरिनेछ । यो बाँडफाँड आ. व. २०६६/६७ का लागि मात्र हुनेछ । अन्य वर्षका लागि सम्परीक्षण समितिले सिफारिस गरे अनुरूप हुनेछ ।

५. रेडियो तथा टेलिभिजनका लागि छुट्याइएको रकममध्ये कुनै संस्थाले कति प्राप्त गर्नेछ भन्ने विषयको टुङ्गो समितिले गर्नेछ ।

**(१५) बैठक तथा बैठक भत्ता**

१. समितिको बैठक आवश्यकता अनुरूप बस्नेछ ।

२. समितिको बैठक बसेको दिन पदाधिकारी तथा आमन्त्रितलाई बैठक भत्ता रु. १००० प्रदान गरिनेछ ।

**(१६) प्रतिनिधि संस्थाको परिचालन**

१. रेडियो, एफ.एम. रेडियो तथा टेलिभिजनका प्रतिनिधि संस्थाहरूसँग समितिको निर्णयबमोजिम ती संस्थासँग सम्झौता गरी लोक कल्याणकारी विज्ञापनको रकम एकमुष्ट रूपमा प्रदान गर्न सकिनेछ ।

**(१७) विविध**

१. प्रमाणपत्र दिने व्यवस्था : वर्गीकरणमा परेका प्रसारण संस्थाहरूलाई मन्त्रालयबाट प्रमाणपत्र दिइनेछ । सम्परीक्षण फाराम भर्दा अघिल्लो वर्षको प्रमाणपत्रको प्रतिलिपि अनिवार्य रूपमा पेस गर्नुपर्नेछ ।

२. प्रसारणको सामग्री मिति र समय : समितिको सिफारिस अनुरूप वर्गीकृत भई सकेपछि त्यस्ता प्रसारण संस्थाहरूलाई समितिको निर्णय र निर्देशनबमोजिम प्रेस तथा सूचना समन्वय शाखाले प्रसारण गर्ने विज्ञापन तथा प्रसारणको मिति, समय र आबृति तालिका उपलब्ध गराउनुपर्नेछ ।

३. नियमित प्रसारणमा आएको एकवर्ष पुगेपछि मात्र कुनै पनि प्रसारण संस्था लोक कल्याणकारी विज्ञापनको लागि योग्य हुनेछ र आगामी वर्ष विनियोजन हुने लोक कल्याणकारी विज्ञापनको रकम बाँडफाँडमा सहभागी हुन पाउनेछ ।

४. दुर्गम जिल्लामा नियमित सञ्चालन हुने रेडियो, एफ.एम. रेडियोहरूले अन्यत्र सञ्चालन भएका सोही श्रेणीका एफ.एम. रेडियोहरूले पाएको सुविधाको २५ प्रतिशत थप रकम प्राप्त गर्नेछन् ।

५. श्रमजीवी पत्रकार कल्याण कोष

(१) प्रत्येक प्रसारण संस्थाले श्रमजीवि पत्रकारसम्बन्धी ऐन, २०५१ र नियमावली २०६४ बमोजिम श्रमजीवी पत्रकार कल्याण कोषको व्यवस्था गर्नुपर्नेछ ।

(२) न्यूनतम पारिश्रमिक निर्धारण समीतिको सिफारिसमा नेपाल सरकारले तोकेको न्यूनतम पारिश्रमिक कार्यान्वयन गरेको हुनुपर्नेछ र कल्याणकोषमा दाखिला गरेको प्रमाण प्रसारण सम्परीक्षण समितिमा पेस गर्नुपर्नेछ ।

६. **भुक्तानी :**

(१) प्रसारण संस्थाले विज्ञापन प्रसारण भएको प्रमाणसहित आवेदन दिएको दुई महिनाभित्र लोक कल्याणकारी विज्ञापन प्रसारणको रकमको भुक्तानी मन्त्रालयको लेखा शाखावाट दिइनेछ ।

(२) लोक कल्याणकारी विज्ञापन प्रसारणको प्रमाण सूचना तथा सञ्चार मन्त्रालय वाअन्तर्गतका निकायहरूवाट सम्पादन गरिने कार्यहरूको प्रभावकारिता अभिवृद्धि एवं कार्य सरलीकरण निर्देशिका, २०६६ को दफा ५ बमोजिम गठित स्थानीय समन्वय समितिको सिफारिससाथ पेस गर्नुपर्नेछ ।

(३) विद्युतीय सञ्चार माध्यमहरूले श्रमजीवी पत्रकार र कर्मचारीहरूको नामावली एवं उनीहरूलाई भुक्तानी गरेको तलबलगायतका विवरण लोक कल्याणकारी विज्ञापन प्राप्त गर्न भरिने सम्परीक्षण फारम साथ पेस गर्नुपर्नेछ ।

१८. **बाधा अडकाउ फुकाउ** : मापदण्ड कार्यान्वयन गर्दा केही अप्ठ्यारो पर्न गएमा सूचना तथा सञ्चार मन्त्रालयले त्यस्ता बाधा अडकाउ फुकाउन आवश्यक व्यवस्था गर्नसक्नेछ ।

## अनुसूची १

## विद्युतीय आमसञ्चार माध्यमहरूलाई वितरण गरिने लोक कल्याणकारी विज्ञापन वितरणको मापदण्ड निर्देशिका–२०६६

(विद्युतीय सञ्चार माध्यमहरूको लोक कल्याण्कारी विज्ञापन प्रसारणका लागि दर्ता फारम) ।

(१) प्रसारण संस्थाको नाम:

(२) ठेगाना:

(३) सञ्चालन भएको स्थान:

(४) सञ्चालक वा सञ्चालक समितिका पदाधिकारीहरूको नाम:

(क)

(ख)

(ग)

(घ)

(ङ)

(च)

(छ)

(ज)

(५) प्रसारण संस्थाको क्षमताः

(६) प्रसारण समयः

(७) प्रसारण प्रकृतिः

(८) पालना गर्नुपर्ने सर्तहरूः लोक कल्याणकारी विज्ञापन प्राप्त गर्नको लागि विद्युतीय आमसञ्चार माध्यमहरूले देहायका सर्तहरू पूरा गरेको हुनुपर्नेछ :

(क) नेपालको संविधान र प्रचलित कानुनहरूको पालना गरेको,

(ख) प्रत्येक वर्ष नवीकरण भएको,

(ग) आयकर PAN नम्बर र कर भुक्तानीको प्रमाण पेस गरेको,

(घ) लेखापरीक्षण प्रतिवेदन समावेश गरेको,

(ङ) श्रमजीवि पत्रकारसम्बन्धी ऐन र नियम (श्रमजीवि पत्रकार र कर्मचारी तथा उनीहरूलाई भुक्तानी गरेको तलब विवरण) पालना गरेको,

(च) आचारसंहिता पालना गरेको,

(छ) तीस प्रतिशतभन्दा बढी कार्यक्रमहरू रिले प्रसारण नगरेको,

(ञ) टेलिभिजनको हकमा इजाजत अनुसार टेरिस्टेरियल तथा स्याटलाइटबाट प्रसारण भएको,

(ट) ३६५ दिनमा कम्तीमा पनि ३३० दिन नियमित प्रसारण भएको,

(ठ) प्रत्येक दिन कम्तीमा पनि १० घण्टा प्रसारण भएको,

(ड) विज्ञापनको समय कार्यक्रमको एकतिहाईभन्दा बढी हुन हुनेछैन, र

(ढ) नियमित प्रसारण भएको एक वर्ष पुगेको हुनुपर्नेछ ।

(ण) दर्ताका लागि वर्गीकरण फारमको रु. १०० सहित रेडियोको हकमा

दर्ता शुल्क रु. ५०० र टेलिभिजनको हकमा रु. १००० दर्ता शुल्क बुझाउनुपर्नेछ ।

(९) **संलग्न कागजपत्रहरू:**

१.

२.

३.

४.

५.

६.

७.

(१०) **अन्य:**

हस्ताक्षर नाम:

पद:

ठेगाना:

फोन नं:

फयाक्स:

इमेल:

संस्थाको छाप

मिति:

# पत्रकारिता अनुदान सहयोगसम्बन्धी निर्देशिका, २०६३

नेपालमा कार्यरत पत्रकारिता सम्बद्ध संस्थाहरूको विकासमा सहयोग पुऱ्याउन नेपाल सरकारले समय-समयमा उपलब्ध गराउने रकम वा सूचना तथा सञ्चार मन्त्रालयको अनुदान शीर्षकमा वार्षिक रूपले विनियोजन हुने एकमुष्ट रकमको बाँडफाँट र खर्च प्रक्रिया सुव्यवस्थित, पारदर्शी र नियमित गर्ने उद्देश्यले नेपाल सरकारले यो निर्देशिका जारी गरेको छ।

**१. सङ्क्षिप्त नाम र प्रारम्भ**

(१) यो निर्देशिकाको नाम "पत्रकारिता अनुदान सहयोगसम्बन्धी निर्देशिका, २०६३" रहेको छ।

(२) यो निर्देशिका नेपाल सरकारले निर्णय गरेको मितिदेखि प्रारम्भ हुनेछ।

**२. परिभाषा**

विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यो निर्देशिकामाः

(क) "मन्त्रालय" भन्नाले सूचना तथा सञ्चार मन्त्रालय सम्झनुपर्दछ।

(ख) "संस्था" भन्नाले सूचना तथा सञ्चार मन्त्रालयबाट रकम प्राप्त गर्ने प्रयोजनको लागि प्रचलित कानुनबमोजिम दर्ता भएका पत्रकारितासँग सम्बद्ध संस्था सम्झनुपर्दछ।

(ग) "पत्रकार" भन्नाले सूचना विभागबाट प्रेस पास प्राप्त गरेका सञ्चार माध्यममा कार्यरत वा स्वतन्त्र रूपमा पत्रकारिता क्षेत्रमा कार्यरत पत्रकार सम्झनुपर्दछ।

(घ) "निर्देशिका" भन्नाले "पत्रकारिता अनुदान सहयोगसम्बन्धी निर्देशिका, २०६३" लाई सम्झनुपर्दछ।

**३. अनुदान व्यवस्था समिति**

पत्रकारितासँग सम्बद्ध संस्थालाई कार्यक्रम प्रस्तावका आधारमा अनुदान सहयोग बाँडफाँट गरी उपलब्ध गराउने निर्णय गर्न सचिव, सूचना तथा

सञ्चार मन्त्रालयको संयोजकत्वमा निम्नानुसारको एक समिति गठन हुनेछ :

(क) सचिव, सूचना तथा सञ्चार मन्त्रालय ............... संयोजक

(ख) अध्यक्ष, प्रेस काउन्सिल नेपाल ...................... सदस्य

(ख) सहसचिव, अर्थ मन्त्रालय ...................... सदस्य

(घ) महानिर्देशक, सूचना विभाग ..................... सदस्य

(ङ) सहसचिव, सञ्चार महाशाखा, सूचना तथा
सञ्चार मन्त्रालय ... सदस्य-सचिव

यस निर्देशिकामा उल्लेख नभएका विषयहरूमा समिति आफैंले आधार, प्रक्रिया र कार्यविधिहरू तय गर्न सक्नेछ ।

**४. प्रस्ताव आह्‌वान गर्ने**

(क) प्रत्येक आर्थिक वर्ष विनियोजित भएको अनुदान रकम यसै निर्देशिकाको प्रकरण ५ बमोजिमका संस्थाहरूलाई अनुदान सहयोग उपलब्ध गराउन मन्त्रालयले राष्ट्रियस्तरको दैनिक पत्रिकामा कम्तीमा २ पटक सार्वजनिक सूचना प्रकाशित गरी कार्यक्रमसहितको प्रस्ताव आह्वान गर्नेछ ।

(ख) यसरी कार्यक्रमसहितको प्रस्ताव पेस गर्ने समय अवधि कम्तीमा ४५ दिनको हुनेछ ।

(ग) उक्त सूचनामा निम्नलिखित व्यहोरा खुलाउनुपर्नेछ :

(१) प्रस्ताव पेस गर्न सक्ने संस्थाहरू (प्रकरण ५ बमोजिम),

(२) प्रस्तावमा समावेश हुनुपर्ने विषयहरू,

(३) प्रस्तावसँग संलग्न गर्नुपर्ने कागजातहरू,

(४) प्रस्ताव पेस गर्नुपर्ने स्थान,

(५) मन्त्रालयमा तोकिएको सम्पर्क अधिकारी

(घ) यस्तो सूचना मन्त्रालयको सूचना पाटीका अतिरिक्त मन्त्रालयको webpage: www.moic.gov.np मा समेत राखिनेछ ।

**५. प्रस्ताव पेस गर्न सक्ने संस्थाहरू**

प्रस्तुत अनुदान सहयोगका लागि निम्नबमोजिमका संस्थाले मन्त्रालयमा प्रस्ताव पेस गर्न सक्नेछन् :

(क) प्रचलित कानुनबमोजिम दर्ता भई कम्तीमा एक वर्षदेखि कार्यरत रहेका पत्रकारिता र पत्रकारसँग सम्बन्धित गैरव्यापारिक र गैरनाफामूलक संस्थाहरू,

(ख) राष्ट्रिय, क्षेत्रीय र स्थानीयस्तरका पत्रकारिता सम्बद्ध संस्थाहरू ।

**६. रकम बाँडफाँट गर्ने आधारहरू**

सूचना तथा सञ्चार मन्त्रालयको नाममा अनुदान शीर्षकमा विनियोजित रकममध्ये बजेटको उपलब्धता, सम्बन्धित संस्थाले पेस गरेको विस्तृत विवरणसहितको कार्यक्रम प्रस्ताव र प्रस्तावित कार्यक्रमको औचित्य एवं सान्दर्भिकतासमेतको अध्ययन गरी यसै निर्देशिकाको प्रकरण ३ मा उल्लेखित समितिले एउटा संस्थालाई बढीमा एक लाखसम्म आर्थिक सहायता उपलब्ध गराउने गरी बाँडफाँट गर्न सक्नेछ ।

साथै यसरी रकम निर्धारण गर्दा नेपालको प्रजातान्त्रिक र लोकतान्त्रिक आन्दोलन, प्रेस स्वतन्त्रता र पत्रपत्रिका क्षेत्रको विकासमा महत्त्वपर्ण योगदान पुर्‍याउने, दुर्गम क्षेत्रमा सञ्चालित सञ्चार सम्बद्ध संस्थाहरू र लैङ्गिक समानता एवम् महिला सशक्तीकरणका क्षेत्रमा कार्यरत पत्रकारितासँग सम्बन्धित संस्थाहरूलाई प्राथमिकता दिइनेछ ।

**७. कार्यक्रमको प्रस्तावमा उल्लेख हुनुपर्ने विवरणहरू**

अनुदान सहयोग माग गर्ने संस्थाले कार्यक्रम प्रस्तावसाथ निम्न लिखित विवरण उल्लेख गर्नुपर्नेछ :

(१) संस्थाको स्थापना, उद्देश्य र परिचय

(२) हालसम्म गरिएका प्रमुख कार्यहरू

(३) यस अघि मन्त्रालयबाट कुनै अनुदान सहयोग प्राप्त गरेको भए सो सम्बन्धी विवरण (आ.व.र रकम)

(४) संस्थाको बैंक खाता नं. र बैंकको ठेगाना

(५) प्रस्तावित कार्यक्रमको रूपरेखा (कार्यक्रमहरू, उद्देश्य, कार्यक्रम गरिने स्थान, समय, कार्यक्रमअन्तर्गत गरिने क्रियाकलापहरू, कार्यक्रमको कुल लागत, व्यहोर्ने श्रोतहरू, सूचना तथा सञ्चार मन्त्रालयबाट अपेक्षा गरिएको प्रस्तावित सहयोग रकम, कार्यक्रमबाट पुग्ने प्रत्यक्ष, अप्रत्यक्ष लाभ तथा उपलब्धि, कार्यक्रमको लक्षित समूह र अन्य सान्दर्भिक विषयहरू) ।

**८. प्रस्तावसाथ संलग्न राख्नुपर्ने कागजातहरू**

(१) संस्था दर्ता प्रमाणपत्र (नवीकरणसमेत),

(२) विधानको प्रतिलिपि,

(३) कर दर्ता प्रमाणपत्र,

(४) अघिल्लो आ.व.को लेखापरीक्षण प्रतिवेदन,

(५) अघिल्लो आ.व.मा त्यस्तो सहयोग पाएको भए कार्य प्रगति विवरण,

(६) प्रतिवेदन, प्रकाशन आदि भए सो ।

**९. रकम खर्च गर्न सकिने क्षेत्रहरू**

नेपाल सरकारले उपलब्ध गराएको अनुदान सहयोग रकम सम्बद्ध संस्थाहरूले निम्नलिखित कार्यक्रमहरूमा खर्च गर्न सक्नेछन् :

१) आम सञ्चारका माध्यमहरूको भूमिका, महत्त्व र सुधारका विषयमा अध्ययन, अनुसन्धान, प्रकाशन आदि ।

२) सञ्चारकर्मीहरूको क्षमता वृद्धि (तालीम, कार्यशाला, स्थलगत अध्ययन, छात्रवृत्ति, पुरस्कार आदि) ।

३) समसामयिक जनचेतनामूलक, सहभागितामूलक, समावेशीकृत, महिला सशक्तीकरण जस्ता विषयमा कार्यशाला, गोष्ठी छलफल, अन्तरक्रिया आदि ।

४) सम्बन्धित संस्थाले गर्ने पत्रकारितासँग सम्बद्ध अन्य सामाजिक र विकास कार्यहरू ।

५) रचनात्मक प्रयोजनको लागि अक्षय कोषको स्थापना ।

६) संस्थाको विशेष कार्यक्रमहरू ।

७) मन्त्रालयले स्वीकृत गरेको अन्य कार्यहरू ।

**१०. रकम बाँडफाँटको सूचना**

अनुदान रकम व्यवस्था समितिले अनुदान सहयोग रकम बाँडफाँड गर्ने निर्णय गरिसकेपछि कुन संस्थाले कति रकम प्राप्त गरेको छ सो को विवरण दैनिक पत्रिकामा प्रकाशित गरिनेछ र मन्त्रालयको वेभसाइटमा राखी सूचना पाटीमा पनि टाँस गरिनेछ । सो सूचनामा सम्झौता गर्न आउने अवधिसमेत तोकिनेछ ।

**११. रकम निकासा**

स्वीकृत अनुदान सहयोग रकम सो संस्थाको नाममा खोलिएको खातामा A\C payee चेकद्वारा एकमुष्ट भुक्तानी दिइनेछ ।

**१२. सम्झौता गर्नुपर्ने**

(क) मन्त्रालयले रकम निकासा गर्दा तोकिएको फाराममा सम्बन्धित संस्थाका आधिकारिक व्यक्तिसँग सम्झौता गराएर मात्र रकम निकासा गर्नेछ । त्यस्तो द्विपक्षीय सम्झौताको नमुना अनुसूची

३ मा समावेश गरिएको छ ।

(ख) तोकिएको अवधिभित्र सम्झौता गर्न नआएका संस्थाहरूलाई मन्त्रालयले रकम नदिन सक्नेछ ।

**१३. कार्य प्रगति विवरण**

संस्थाले आफूले गरेको कार्य प्रगति विवरण र मन्त्रालयबाट प्राप्त अनुदान सहयोग रकमको खर्चको विवरण कार्य सम्पन्न भएको ३ महिनाभित्र अनिवार्यरूपले मन्त्रालयमा पेस गर्नुपर्नेछ । सो प्रगति विवरणको नमुना अनुसूची ४ मा छ ।

**१४. लेखा तथा लेखापरीक्षण व्यवस्था**

सूचना तथा सञ्चार मन्त्रालयबाट रकम प्राप्त गर्ने संस्थाले प्रचलित कानुन अनुसार लेखा राख्नुपर्नेछ । त्यस्ता संस्थाहरूले प्रचलित कानुन अनुसार स्वीकृत लेखापरीक्षकबाट लेखापरीक्षण कार्य सम्पन्न गरी पछिल्लो आ.व.को पौष महिनाभित्र मन्त्रालयमा लेखापरीक्षण प्रतिवेदन पेस गर्नुपर्नेछ ।

**१५. अनुगमन र मूल्याङ्कन**

अनुदान सहयोग रकम उपलब्ध गराइएका संस्थाहरूको अनुदान रकमसँग सम्बन्धित कार्यक्रमहरूको स्थलगत अनुगमन सूचना तथा सञ्चार मन्त्रालयले गर्ने गराउनेछ । यस्तो अनुगमन फारामको नमुना अनुसूची ५ मा संलग्न गरिएको छ ।

**१६. अभिलेख राख्ने**

अनुदान प्राप्त संस्थाले त्यस्तो रकम निर्धारित कार्यक्रममा खर्च नगरेको पाइएमा वा मन्त्रालयमा पेस गर्नुपर्ने विवरणहरू पेस नगरेमा त्यस्तो अनुदान रकम फिर्ता गर्न आदेश दिनुका साथै त्यस्ता संस्थाहरूको नाम कालो सूचीमा राखी त्यस्ता संस्थाहरूलाई पछिल्लो ३ वर्ष लागि कुनै पनि सरकारी आर्थिक अनुदान सहायता रोक्का गर्न सक्नेछ ।

**१७. अन्य सर्तहरू**

(१) सम्बद्ध संस्थाले जुन प्रयोजनको लागि त्यस्तो रकम प्राप्त गरेको हो सोही कार्य र प्रयोजनमा मात्र त्यस्तो रकम खर्च गर्नुपर्नेछ ।

(२) त्यस्तो सहयोग रकमको हिसाब-किताबको श्रेस्ता अद्यावधिक गरी राख्नु त्यस्तो संस्थाको कर्तव्य हुनेछ ।

(३) मन्त्रालयबाट हुने अनुगमनबाट रकमको उपयोग नभएको वा दुरुपयोग भएको पाइएमा वा प्राप्त उजुरीको छानविनबाट त्यस्तो प्रमाणित हुन आएमा त्यस्तो संस्थालाई कालो सूचीमा राखी अर्को तीन वर्षका लागि कुनै पनि सरकारी अनुदान सहयोग रकम उपलब्ध गराइने छैन ।

**१८. सरकारी बाँकी सरह हुने**

अनुदान सहयोग रकम प्राप्त गर्ने संस्थाका पदाधिकारी, कार्मचारीहरू र अन्य सम्बन्धित व्यक्तिले त्यस्तो रकम हिनामिना गरेको पाइएमा प्रचलित कानुनअनुसार कारबाही गरी सरकारी बाँकी सरह असुलउपर गरिनेछ ।

**१९. विविध**

(क) यस प्रयोजनका लागि विनियोजित बजेटको ५ प्रतिशत रकम यसै निर्देशिकाबमोजमको प्रशासनिक कार्य, सूचना प्रकाशन, प्रचार प्रसार र अन्य बैठक खर्च जस्ता कार्यमा खर्च गरिनेछ ।

(ख) यो निर्देशिकामा नपरेका अन्य कुराहरू प्रचलित कानुनअनुसार हुनेछन् ।